# नक्कली भुटानी शरणार्थी प्रकरण

# अभियोगपत्र

विसं २०८० जेठ १०



हाम्रा नेता र राज्य संरचनाहरु के के गर्न सक्छन् भनि भविष्यमा नेपालीले हेरुन भनि अभिलेख राख्ने उद्देश्यले

**अदालतले भर्ने;**
दर्ता नं. ...............
दर्ता मिति ............

# श्री काठमाडौं जिल्ला अदालतमा

## मुलुकी फौजदारी कार्यविधि संहिता, २०७४ को दफा ३२ बमोजिम दायर गरेको

## अभियोग पत्र

## आ.व. २०७९/८० सालको निर्णय नम्बरः

**गजेन्द्र बुढाथोकी समेत**को जाहेरीले नेपाल सरकार**..........................................................................वादी**

**विरुद्ध**

१. दधीराम दुलालको नाती, नारायण प्रसाद दुलालको छोरा, **कोशी प्रदेश,** जिल्ला मोरङ पथरी शनिश्चरे नगरपालिका वडा नं.१० ऐयावारीमा घर भई हाल **बागमती प्रदेश,** जिल्ला ललितपुर ललितपुर उप- महानगरपालिका वडा न. २३ धापाखेलमा डेरा गरी बस्ने वर्ष ४९ को **केशव प्रसाद दुलाल** (नागरिकता नं.९३७/८३४/मोरङ)**..................................................१**

२. नरेन्द्र सिंह भण्डारीको नाती, शेर बहादुर भण्डारीको छोरा, **बागमती प्रदेश,** ललितपुर जिल्ला ललितपुर उप महानगरपालिका वडा नं.-२३ धापाखेल बस्ने वर्ष ५० को **सानु भण्डारी** (ना.प्र.नं. ७१३५/८१३५/ललितपुर)**...............................................................................१**

३. कमल बहादुर राईको नाती, गुल्सन राईको छोरा, **कोशी प्रदेश,** जिल्ला मोरङ साविस सनिश्चरे गा.वि.स. वडा नं.१ हाल परिवर्तित पथरी शनिश्चरे नगरपालिका वडा नं. १० मङलबारे बस्ने वर्ष ४४ को **सागर राई** (नागरिकता नं.२६०६/७२४५/मोरङ)**..................................................१**

४. सुनिल कुमार शर्माको छोरा, **लुम्बिनी प्रदेश,** जिल्ला दाङ साविक मानपुर गा.बि.स.वडा नं.-३ हाल परिवर्तित तुल्सीपुर उप-महानगरपालिका वडा नं. १६ स्थायी वतन भई हाल **बागमती प्रदेश,** जिल्ला ललितपुर गोदावरी नगरपालिका हरिसिद्धी बस्ने वर्ष ३४ को **सन्देश शर्मा** (ना.प्र.न. ५२२०२६/१४८२/दाङ)**...............................................................................१**

**प्रतिवादी**

५. धम्बु गुरूङको नाती, चक्र बहादुर गुरूङ र दिल माया गुरूङको छोरा, **कोशी प्रदेश,** जिल्लो पाँचथर साविक रानिटार गा.वि.स. वडा नं. ४ हाल परिवर्तित फिदिम नगरपालिका वडा नं.७ मा स्थायी वतन भई हाल **बागमती प्रदेश,** जिल्ला ललितपुर ललितपुर उप-महानगरपालिका वडा नं. २३ धापाखेलबस्ने वर्ष ४६ को **टंक कुमार गुरूङ** (नागरिकता नं.-८११२)**..........................१**

६. जोगधन राईको नाति, गंगामान राई र गम्भिर माया राईको छोरा, **कोशी प्रदेश,** जिल्ला भोजपुर साविक वासिङथर्पु गा.वि.स.वडा नं.-१ परिवर्तित हाल आमचोक गाउँपालिका वडा नं.१ वतन भई **बागमती प्रदेश,** जिल्ला ललितपुर, गोदावरी नगरपालिका वडा नं.-१२ ठेचो बस्ने वर्ष ७३ को **डा.ईन्द्रजित राई** (ना.प्र.नं.२०००४/भोजपुर)**..............................................................१**

७. बिन बहादुर रायमाझीको छोरा, **लुम्बिनी प्रदेश,** जिल्ला अर्घाखाँची साविक अर्घा गा.वि.स. वडा नं.-२ को हाल परिवर्तित सन्धिखर्क नगरपालिका वडा नं. ३ वतन भएको वर्ष ६२ को **टोप बहादुर रायमाझी** (ना.प्र.नं.१५९२/१४४२९/४०१०१६/अर्घाखाँची)**.............................................१**

८. टोप बहादुर रायमाझी र योगमाया रायमाझीको छोरा, **लुम्बिनी प्रदेश,** जिल्ला अर्घाखाँची साविक अर्घा गा.वि.स.वडा नं.-२ को हाल परिवर्तित सन्धिखर्क नगरपालिका वडा नं.३ वतन भएको वर्ष ३३ को **सन्दिप रायमाझी** (ना.प्र.नं.14431401016/अर्घाखाँची)**.......................................१**

९. चन्द्रमणी पाण्डेको नाति, भगवति प्रसाद पाण्डे र नमकला पाण्डेको छोरा, **लुम्बिनी प्रदेश,** जिल्ला अर्घाखाँची, छत्रदेव गाउपालिका वडा नं.-७ वतन भई हाल काठमाण्डौ जिल्ला, काठमाण्डौ महानगरपालिका वडा नं.३२ पेप्सिकोला पुरानो सिनामंगल बस्ने वर्ष ५१ को **टेक नारायण पाण्डे** (ना.प्र.नं.३७२/७२/अर्घाखाँची)**.......................................................................१**

१०. पदम राज के.सी.को नाति, कृष्ण राज के.सी./हिरा कुमारी के.सी.को छोरा **बागमती प्रदेश**, जिल्ला चितवन साविक दिव्यनगर गा.वि.स.वडा नं.-४ हाल परिवर्तित भरतपुर महानगरपालिका वडा नं.२६ स्थायी वतन भई हाल जिल्ला चितवन भरतपुर नगरपालिका वडा नं.-११ मुक्तिनगर बस्ने बर्ष ५६ को **नरेन्द्र के.सी.** (ना.प्र.प.नं.२७०२/चितवन)**......................................................१**

११. काशिलाल चौधरी र विष्णु कुमारी चौधरीको छोरा **कोशी प्रदेश,** जिल्ला मोरङ बाहुनी गा.वि.स.-५ को हाल बेलबारी नगरपालिका वडा नं.-६स्थायी वतन भएको वर्ष ५३ को **बिक्रम भन्ने गोविन्द कुमार चौधरी** (ना.प्र.नं.४२२५/मोरङ)**............................................................१**

१२. हप बहादुर के.सी. र मैया के.सी.को छोरा, **बागमती प्रदेश,** जिल्ला काठमाण्डौ साविक धापासी गा.वि.स.वडा नं.-४ हाल टोखा नगरपालिका वडा नं.६ बस्ने बर्ष ५१ **राम शरण के.सी.** (ना.प्र.न.३४७३/काठमाडौं)**..........................................................................१**

१३. ईन्द्र विर खाँणको नाति, नोईन्द्र बहादुर खाँण र टोप कुमारी खाँणको छोरा, **लुम्बिनी प्रदेश,** जिल्ला रुपन्देही, तिलोत्तमा नगरपालिका वडा नं.-८ भई हाल **बागमती प्रदेश,** जिल्ला काठमाण्डौ का.म.न.पा.वडा नं.-७ चावहिल बस्ने बर्ष ६२ को **बालकृष्ण खाँण...................१**

१४. डा नोर्बुको नाति कर्म गेली शेर्पा र छेकिमा शेर्पाको छोरा, **बागमती प्रदेश,** जिल्ला रामेछाप, गोकुलगंगा गा.पा. १ चुचुरे स्थायी वतन भई हाल जिल्ला काठमाण्डौ का.म.न.पा. वडा न.७ मैंजुबहाल बस्ने वर्ष ७१ को **आङटावा शेर्पा** (ना.प्र.न. ७२४ रामेछाप)**..............................१**

**प्रतिवादी**

१५. शेर अलि मियाँको नाति, रोजेन मियाँ र बेगम मियाँको छोरा, **लुम्बिनी प्रदेश,** जिल्ला अर्घाखाँची साविक बलकोट गा.वि.स.मिया गाँउ हाल बुटवल उप-महानगरपालिका वडा नं.-५ राधाकृष्ण टोल बस्ने वर्ष ४८ को **शमशेर मियाँ** (ना.प्र.नं.१८८७/३३५१)**..........................................१**

१६. पशुपति रिजालको नाति, दिनानाथ रिजाल र बिष्णुमाया रिजालको छोरा, भुटान देश घर भएका भुटानी शरणार्थीका नेता **कोशी प्रदेश,** जिल्ला झापा, बिर्तामोड कालीचोक बस्ने बर्ष ७५ को **टेकनाथ रिजाल.......................................................................................१**

१७. हर्ष तुलाधरको छोरा **बागमती प्रदेश**, काठमाण्डौ जिल्ला काठमाण्डौ महानगरपालिका वडा नं. ३० वतन हुने वर्ष ५८ को **केशव तुलाधर** (ना.प्र.न. १९२८/२००२/काठमाडौं)**........(फरार)..१**

१८. सुर्य महर्जनको छोरा **बागमती प्रदेश,** जिल्ला ललितपुर, बुंगमती गा.वि.स.वडा नं.-६ स्थआयी वतन भई बस्ने वर्ष ३२ को **लक्ष्मी महर्जन** (ना.प्र.न. २८१-०१०/५१२३६/ललितपुर)**..................................................................(फरार)..१**

१९. सानु महर्जनको छोरा, **बागमती प्रदेश,** ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं.-१९ बस्ने वर्ष ३४ को **हरि भक्त महर्जन** (ना.प्र.न. ४८५९६/ललितपुर)**.........................(फरार)..१**

२०. राजेन्द्र पोखरेलको छोरा, **कोशी प्रदेश,** जिल्ला सुनसरी ईटहरी उप-महानगरपालिका वडा न.४ स्थायी वतन भई हाल अमेरिकामा बस्ने भन्ने बर्ष अं....को **अशोक पोखरेल** (ना.प्र.प.नं.८०२८/११०२८/सुनसरी)**..........................................................(फरार)..१**

२१. गंगा राईको छोरा **कोशी प्रदेश,** जिल्ला मोरङ साविक केरवन गा.बि.स.वडा नं.-१ परिवर्तित कानेपोखरी गाउँपालिका वडा नं.-५ स्थायी वतन भएको वर्ष ३९ को **धिरेन राई.........(फरार)..१**

२२. राजेन्द्र प्रसाद होमगाञीको छोरी, केशव प्रसाद दुलालको श्रीमती **कोशी प्रदेश,** जिल्ला मोरङ पथरी शनिश्चरे नगरपालिका वडा नं.१० हाल परिवर्तित ऐयावारी स्थायी वतन भई हाल **बागमती प्रदेश,** ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं.-२३ धापाखेलमा डेरा गरी बस्ने **दिपा हुमागाञी** (ना.प्र.नं.४४१४९/४६१४९/मोरङ)**........................................(फरार)...१**

२३. गंगामान राईको नाति, ईन्द्रजित राई र भुवन देवी राईको छोरा, **कोशी प्रदेश,** जिल्ला भोजपुर साविक वासिङथर्पु गा.वि.स.वडा नं.१ हाल परिवर्तित आमचोक गाउँपालिका वडा नं.-१ स्थायी वतन भई **बागमती प्रदेश,** जिल्ला ललितपुर, गोदावरी नगरपालिका वडा नं.-१२ ठेचो बस्ने वर्ष ५० को **निरज राई** (ना.प्र.नं. ९१७/१३०/भोजपुर)**.............................................(फरार)..१**

२४. झंकनाथ अर्याल र मथुरा अर्यालको छोरा, **बागमती प्रदेश,** जिल्ला काठमाण्डौ,साविक जितपुरफेदी गा.वि.स.वडा नं. ९ वतन हुने वर्ष ३० को **राजेश अर्याल** (ना.प्र.नं.१०३८/७४४०८/काठमाडौं)**.........................................................(फरार)..१**

२५. नेत्रमान राईको छोरा **कोशी प्रदेश,** जिल्ला पाँचथर साविक कुरुम्बा गा.वि.स.वडा नं.९ हाल परिवर्तित मिक्लाजुङ गाउँपालिका वडा नं. ६ स्थायी वतन भएको बर्ष ६० को **मोहन राज राई** (ना.प्र.नं.०२/१८६/पाँचथर)**..................................................................(फरार)...१**

२६. दान बहादुर बुढाथोकीको छोरा **बागमती प्रदेश,** जिल्ला काठमाण्डौ, बुढानिलकण्ठ नगरपालिका वडा नं.१० स्थायी वतन भएको वर्ष २४ को **आशिष बुढाथोकी** (ना.प्र.नं.२७-०१-७४-०४७१८/काठमाडौं)**..................................................................(फरार)..१**

**प्रतिवादी**

| | | |
|---|---|---|
| २७. | सागर राईको श्रीमती **कोशी प्रदेश,** जिल्ला मोरङ साबिक सनिश्चरे गा.बि.स.वडा नं.-१ हाल परिवर्तित पथरी शनिश्चरे नगरपालिका वडा नं.-१० स्थायी वतन भएको बर्ष अं.४० की **बिनिता सावदेन लिम्बु..............................................................................(फरार)..१** | **प्रतिवादी** |
| २८. | दल हरी खरेलको छोरा, **मधेश प्रदेश,** जिल्ला रौतहट, फतुहा हर्साह-९ स्थायी वतन भएको वर्ष ४२ को **निरन्जन कुमार खरेल** (PSO) (ना.प्र.प.नं. १९५/रौतहट)**........................(फरार)..१** | |
| २९. | शंकर बहादुर बुढाथोकीको छोरा, **कोशी प्रदेश,** जिल्ला झापा साविक जुरोपानी गा.वि.स. वडा नं. ३ को हाल परिवर्तित गौरादह नगरपालिका वडा नं. १ घर हुने वर्ष ३१ को **सुनिल बुढाथोकी** (ना.प्र.नं. ०४२०४७/२४८)**..................................................................(फरार)..१** | |
| ३०. | राम बहादुर थापाको छोरा बागमती प्रदेश, जिल्ला चितवन, भरतपुर महानगरपालिका वडा नं.१० बस्ने वर्ष अं.३६ को **प्रतिक थापा..................................................................(फरार)..१** | |

## मुद्दाः ठगी, लिखत कीर्ते, राज्य विरुद्ध र संगठित अपराध सम्बन्धी कसूर ।

**मुद्दाको संक्षिप्त तथ्यः**

**१. जाहेरी दरखास्तहरुः**

**(क) गजेन्द्र बुढाथोकीको जाहेरी दरखास्तः**

म जाहेरवाला तथा मैले चिनजानका ६१ जना मानिसहरुलाई प्रतिवादी सन्देश शर्मा, केशव प्रसाद दुलाल, सानु भण्डारी समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छौ, हामीले उच्च अधिकारीहरुलाई चिनेका छौं, हामीले प्रधानमन्त्रीसँग समेत कुरा गरिरहेकोले यस्तो अफर आईरहँदैन, मौकाको फाइदा लिनुहोस भनी पटक पटक बिश्वास दिलाई हामीले चलाउने गरेको WhatsApp मा सन्देश शर्माले श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धित समाचारको फोटो पठाउने जस्ता कार्यहरु गरी म लगायत मेरा अन्य चिनजानका ६० जना मानिसहरुलाई बिश्वास दिलाई म बाट जम्मा रकम रु.९,७८,००,०००।-(नौ करोड अठहत्तर लाख) रकम लिई अमेरिका नपठाई रकम फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **गजेन्द्र बुढाथोकी**ले पेश गरेको जाहेरी दरखास्त ।

**(ख) राम कुमार रेग्मीको जाहेरी दरखास्तः**

म जाहेरवाला तथा मैले चिनजानका २० जना मानिसहरुलाई प्रतिवादी सन्देश शर्मा, केशव प्रसाद दुलाल, सानु भण्डारी समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छौं, हामीले उच्च अधिकारीहरुलाई चिनेका छौं, हामीले प्रधानमन्त्रीसँग समेत कुरा गरी रहेकोले यस्तो अफर आईरहँदैन, मौकाको फाइदा लिनुहोस भनी पटक-पटक बिश्वास दिलाई हामीले चलाउने गरेको WhatsApp मा सन्देश शर्माले श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धित समाचारको फोटो पठाउने जस्ता कार्यहरु गरी हामीलाई बिश्वास दिलाई हामीहरुबाट जम्मा रकम रु.३,८५,००,०००।-(तिन करोड पचासी लाख) रकम लिई अमेरिका समेत नपठाई रकम समेत

फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **राम कुमार रेग्मी**ले पेश गरेको जाहेरी दरखास्त।

**(ग) रोशन खरेल र गोकुल भट्टराईको जाहेरी दरखास्त:**

हामी जाहेरवालाहरु तथा हामीहरुले चिनजानका अन्य व्यक्तिहरु समेतलाई प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको रुपमा अमेरिकामा पठाई दिन्छौं, हामीले उच्च अधिकारीहरुलाई चिनेका छौं, हामीले प्रधानमन्त्रीसँग समेत कुरा गरी रहेकोले यस्तो अफर आईरहँदैन, मौकाको फाइदा लिनुहोस भनी पटक-पटक बिश्वास दिलाई हामीले चलाउने गरेको WhatsApp मा सन्देश शर्माले श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धित समाचारको फोटो पठाउने जस्ता कार्यहरु गरी हामीलाई बिश्वास दिलाई हामीहरुबाट जम्मा रकम रु.१,६२,००,०००।-(एक करोड बैसठ्ठी लाख) रकम लिई अमेरिका समेत नपठाई रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **रोशन खरेल र गोकुल भट्टराई**ले पेश गरेकोजाहेरी दरखास्त।

**(घ) सुमन दाहालको जाहेरी दरखास्त:**

म जाहेरवाला तथा मेरो चिनजानका अन्य व्यक्तिहरु समेतलाई प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छौं, हामीले उच्च अधिकारीहरुलाई चिनेका छौं, हामीले प्रधानमन्त्रीसँग समेत कुरा गरी रहेकोले यस्तो अफर आई रहँदैन, मौकाको फाइदा लिनुहोस भनी पटक-पटक बिश्वास दिलाई हामीले चलाउने गरेको WhatsApp मा सन्देश शर्माले श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धित समाचारको फोटो पठाउने जस्ता कार्यहरु गरी हामीलाई बिश्वास दिलाई हामीहरुबाट जम्मा रकम रु.१,१४,००,०००।-(एक करोड चौध लाख) रकम लिई अमेरिका समेत नपठाई रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **सुमन दाहाल**ले पेश गरेकोजाहेरी दरखास्त।

**(ङ) कुमार खड्का, प्रदिप फुँयाल र मिलन श्रेष्ठको जाहेरी दरखास्त:**

हामी जाहेरवालाहरुलाई प्रतिवादी सागर राईले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको रुपमा अमेरिकामा पठाई दिन्छु, मैले उच्च अधिकारीहरुलाई चिनेको छु, यस्तो अफर आईरहँदैन, मौकाको फाइदा लिनुहोस भनी पटक-पटक बिश्वास दिलाई हामीले चलाउने गरेको WhatsApp मा श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धित समाचारको फोटो पठाउने जस्ता कार्यहरु गरी हामीलाई बिश्वास दिलाई म जाहेरवाला कुमार खड्काबाट रु.११,००,०००।-(एघार लाख), प्रदिप फुयाँलबाट रु.९,००,०००।-(नौ लाख) र मिलन श्रेष्ठबाट रु.१०,००,०००।-(दश लाख)रकम लिई अमेरिका समेत नपठाई रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **कुमार खड्का, प्रदिप फुँयाल र मिलन श्रेष्ठ**ले पेश गरेको जाहेरी दरखास्त।

**(च) रविन्द्र कार्कीको जाहेरी दरखास्त:**

म जाहेरवाला तथा मेरो चिनजानका अन्य व्यक्तिहरु समेतलाई प्रतिवादी केशव प्रसाद दुलाल र सागर राई समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छौं, हामीले उच्च

अधिकारीहरुलाई चिनेका छौं, हामीले प्रधानमन्त्रीसँग समेत कुरा गरी रहेकोले यस्तो अफर आईरहँदैन, मौकाको फाइदा लिनुहोस भनी पटक-पटक बिश्वास दिलाई हामीले चलाउने गरेको WhatsApp मा सन्देश शर्माले श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धित समाचारको फोटो पठाउने जस्ता कार्यहरु गरी हामीलाई बिश्वास दिलाई हामीहरुबाट जम्मा रकम रु.२०,००,०००।-(विस लाख) लिई अमेरिका समेत नपठाई रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **रविन्द्र कार्की**ले पेश गरेको जाहेरी दरखास्त।

**(छ) कुमार खड्का, प्रदिप कुमार फुँयाल र मिलन श्रेष्ठको जाहेरी दरखास्त**:

हामी जाहेरवाला तथा हाम्रो चिनजानका अन्य व्यक्तिहरु समेतलाई प्रतिवादी सागर राईले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छु भनी रकम माग गरेको हुँदा मैले मेरो लागी मेरो नाममा रहेको कामना सेवा विकाश बैंकको चेक मार्फत रु.२,००,०००।-(दुई लाख), देव विकाश बैंकको चेक मार्फत रु.९,००,०००।-(नौ लाख) गरी रु.११,००,०००।-(एघार लाख), म जाहेरवाला प्रदिप कुमार फुँयालले नगदै रु.९,००,०००।-(नौ लाख), म जाहेरवाला मिलन श्रेष्ठले नगदै रु.१०,००,०००।-(दश लाख) गरी हामी तीनैजना जाहेरवालाहरुले जम्मा रकम रु.३०,००,०००।-(तिस लाख) दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी हामी जाहेरवालाहरुलाई अमेरिका नपठाई रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **कुमार खड्का, प्रदिप कुमार फुँयाल र मिलन श्रेष्ठ**ले पेश गरेको जाहेरी दरखास्त।

**(ज) दिलिप गौतमको जाहेरी दरखास्त**:-

म जाहेरवाला तथा मेरो चिनजानका अन्य व्यक्तिहरु समेतलाई प्रतिवादी सागर राईले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छु भनी रकम माग गरेको हुँदा मैले निजलाई बिभिन्न मितिमा पटक-पटक गरी रु.२२,००,०००।–(बाईस लाख) दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी म जाहेरवालालाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **दिलिप गौतम**ले पेश गरेको जाहेरीदरखास्त।

**(झ) खगेन्द्र थेवेको जाहेरी दरखास्त**:

म जाहेरवाला तथा मेरो श्रीमती र बहिनी समेतलाई प्रतिवादीहरु धिरेन राई केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छु भनी रकम माग गरेको हुँदा मैले निजलाई विभिन्न मितिमा पटक-पटक गरी रु.३०,००,०००।-(तिस लाख) नगदै रकम दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी म जाहेरवाला समेतलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **खगेन्द्र थेवे**ले पेश गरेको जाहेरी दरखास्त।

**(ञ) भुवन सिंह लिम्वुको जाहेरी दरखास्त**:

म जाहेरवाला तथा मेरो चिनजानका ईष्ट मित्रहरु समेतलाई प्रतिवादीहरु धिरेन राई, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छु भनी रकम माग गरेको हुँदा मैले निजलाई विभिन्न मितिमा पटक-पटक गरी रु.१०,००,०००।–(दश लाख) नगदै रकम दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी म जाहेरवाला समेतलाई अमेरिका नपठाई मैले दिएको रकम समेत

फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **भुवन सिंह लिम्बु**ले पेश गरेको जाहेरी दरखास्त।

**(ट) डिल बहादुर कुसारीको जाहेरी दरखास्त**:

म जाहेरवाला तथा मेरो छोरा महेन्द्र कुसारी समेतलाई प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल, सानु भण्डारी र **राजेश अर्याल(पक्राउ अनुमति बाँकी)** समेतले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छु भनी विश्वास दिलाएको हुँदा मैले प्रतिवादी सन्देश शर्मालाई मिति २०७७।११।२३ गते काठमाडौंको नयाँबानेश्वरमा भेटी रु.५,००,०००।–(पाँच लाख) नगदै दिएको, निजले स्वास्थ्य परीक्षण लगायतका कार्यहरु गर्न भनी रकम माग गरेकोले राजेश अर्यालको नाममा रहेको नविल बैंकको खाता नं.३७१००१७५०७८४३ मा मेरो नाममा रहेको लक्ष्मी बैंकको खाता नं.०९४२००१८७२९ बाट Connect IPS मार्फत रु.१५,००,०००।–(पन्ध्र लाख) समेत गरी रु.२०,००,०००।–(बिस लाख) रकम दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी म जाहेरवाला समेतलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **डिल बहादुर कुसारी**ले पेश गरेको जाहेरी दरखास्त।

**(ठ) डम्बर बहादुर खत्रीको जाहेरी दरखास्त**:

म जाहेरवालाले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा प्रतिवादी सन्देश शर्मासँग जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-३१ नयाँबानेश्वरमा भेट भई कुराकानी हुँदा निजले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छु रु.३५,००,०००।–(पैंतिस लाख) लाग्छ भनी विश्वास दिलाई शुरुको प्रोसेसको लागी रु.५,००,०००।–(पाँच लाख) लाग्छ भनेकोले मैले मिति २०७७ सालको पौष महिना देखि मिति २०७८।०९।१५ गतेसम्म बिभिन्न मितिमा पटक-पटक गरी रु.१५,५०,०००।–(पन्ध्र लाख पचास हजार) रकम दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी म जाहेरवाला समेतलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **डम्बर बहादुर खत्री**ले पेश गरेको जाहेरी दरखास्त।

**(ड) पदम सिंह खत्रीको जाहेरी दरखास्त**:

म जाहेरवालाले बैदेशिक रोजगारमा जाने सोच बनाईरहेको अवस्थामा प्रतिवादी राम कुमार रेग्मी मार्फत सन्देश शर्मासँग जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-३१ नयाँबानेश्वरमा भेट भई कुराकानी हुँदा निजले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छु रु.३५,००,०००।–(पैंतिस लाख) लाग्छ भनी विश्वास दिलाई शुरुको प्रोसेसको लागी रु.५,००,०००।–(पाँच लाख) लाग्छ भनेकोले मैले मिति २०७८ सालको पौष महिना सम्म बिभिन्न मितिमा पटक-पटक गरी रु.२०,००,०००।–(बिस लाख) रकम दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी म जाहेरवालालाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **पदम सिंह खत्री**ले पेश गरेको जाहेरी दरखास्त।

**(ढ) शोभाराम राना क्षेत्रीको जाहेरी दरखास्त**:

म जाहेरवालाको छोरी ज्वाँई यज्ञ बहादुर ओलीले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा प्रतिवादी राम कुमार रेग्मी मार्फत सन्देश शर्मा सँग जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-३१ नयाँबानेश्वरमा

भेट भई कुराकानी हुँदा निजले म लगायत मेरो साथीहरु समेत भई तपाईंको ज्वाईंलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छौं, रु.३५,००,०००।–(पैंतिस लाख) लाग्छ भनी विश्वास दिलाई शुरुको प्रोसेसको लागी रु.५,००,०००।–(पाँच लाख) लाग्छ भनेकोले मैले मिति २०७७ सालको पौष महिना देखि २०७८ साल पौष महिना सम्म बिभिन्न मितिमा पटक-पटक गरी रु.२०,००,०००।–(बिस लाख) रकम दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवालाको ज्वाईंलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **शोभाराम राना क्षेत्री**ले पेश गरेको जाहेरी दरखास्त।

**(ण)** **सन्दिप वली को जाहेरी दरखास्त**:

म जाहेरवालाको दाई असिम वलीले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा प्रतिवादी राम कुमार रेग्मी मार्फत सन्देश शर्मासँग जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-३१ नयाँबानेश्वरमा भेट भई कुराकानी हुँदा निजले म लगायत मेरो साथीहरु समेत भई तपाईंको दाईलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छौं, प्रति व्यक्ति रु.३५,००,०००।–(पैंतिस लाख) लाग्छ भनी विश्वास दिलाई शुरुको प्रोसेसको लागी रु.५,००,०००।–(पाँच लाख) लाग्छ भनेकोले निजहरुको विश्वासमा परी मैले मिति २०७७ सालको पौष महिना देखि २०७८ साल पौष महिनासम्म बिभिन्न मितिमा पटक-पटक गरी रु.२०,००,०००।–(बिस लाख) रकम दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवालाको दाईलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो एवं साँठगाँठ गरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **सन्दिप वली**ले पेश गरेको जाहेरी दरखास्त।

**(त)** **सुष्मा चन्दको जाहेरी दरखास्त**:

म जाहेरवालाको श्रीमान लोक बहादुर डि.सी.ले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा प्रतिवादी राम कुमार रेग्मी मार्फत सन्देश शर्मासँग जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-३१ नयाँबानेश्वरमा भेट भई कुराकानी हुँदा निजले म लगायत मेरो साथीहरु समेत भई तपाईंको श्रीमानलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छौं, रु.३५,००,०००।–(पैंतिस लाख) लाग्छ भनी विश्वास दिलाई शुरुको प्रोसेसको लागी रु.५,००,०००।–(पाँच लाख) लाग्छ भनेकोले निजहरुको विश्वासमा परी मैले मिति २०७७ सालको पौष महिना देखि २०७८ साल पौष महिनासम्म बिभिन्न मितिमा पटक-पटक गरी रु.२०,००,०००।-(बिस लाख) रकम दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवालाको श्रीमानलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो एवं साँठगाँठ गरी ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **सुष्मा चन्द**ले पेश गरेको जाहेरी दरखास्त।

**(थ)** **मन बहादुर खत्रीको जाहेरी दरखास्त**:

म जाहेरवालाले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा मेरो भिनाजु प्रतिवादी राम कुमार रेग्मी समेतले अमेरिका जाने प्रकृया गरी रहेका छन भन्ने जानकारी पाई निज भिनाजु मार्फत चिनजान भएका सन्देश

शर्मालाई जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-३१ नयाँबानेश्वरमा भेट भई कुराकानी हुँदा निजले म लगायत मेरो साथीहरु समेत भई तपाईंलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छौं, रु.३५,००,०००।–(पैंतिस लाख) लाग्छ भनी विश्वास दिलाई शुरुको प्रोसेसको लागी रु.५,००,०००।–(पाँच लाख) लाग्छ भनेकोले निजहरुको विश्वासमा परी मैले मिति २०७७ सालको फागुन महिनामा रु.५,००,०००।–(पाँच लाख) र मिति २०७८ सालको जेष्ठ २८ गते रु.२०,००,०००।–(बिस लाख)समेत गरी पटक-पटक गरी रु.२५,००,०००।–(पच्चिस लाख) रकम दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवालालाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो एवं साँठगाँठ गरी काठमाडौंको सुन्धारा, नयाँबानेश्वरमा भेटी जम्मा रकम रु.२५,००,०००।–(पच्चिस लाख) ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **मन बहादुर खत्री**ले पेश गरेको जाहेरी दरखास्त।

**(द) भेषराज शर्मा लम्सालको जाहेरी दरखास्त**:

म जाहेरवालाले समाज सेवा तथा निर्माण व्यवसायी सम्बन्धी काम काज गर्दै आएकोमा म आफ्नो काम बिशेषले काठमाडौं आएका बखत जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-७ गौशाला स्थित प्रतिवादीहरु केशव दुलाल, सानु भण्डारी समेतसँग भेट भई चिनजान गरी कुराकानी गर्ने क्रममा नेपाल सरकारले G to G प्रणालीबाट भुटानी शरणार्थी सँगै २००० भन्दा बढी नेपालीहरुलाई सिधै PR दिई अमेरिका लैजाने प्रकृया गरेको र यदि तपाई लगायत तपाईंको आफन्तहरु कोही जाने भए प्रति व्यक्ति रु.२०,००,०००।–(बिस लाख) को दरले पठाई दिन्छौं भनी विश्वास दिलाएको हुँदा मैले मेरो आफन्त र साथीहरुको लागी प्रकृया गरी दिनुहोस भन्दा तपाईंले ग्यारेण्टी स्वरुप रु.१,५०,००,०००।–(एक करोड पचास लाख) को चेक दिनु पर्छ भनेकोले मैले मेरो नाममा रहेको माछापुच्छ्रे बैंकको चेक थान-१ सानु भण्डारीलाई दिएको थिएँ। मिति २०७५।१०।१६ गते निज सानु भण्डारीले तपाईंले तत्काल रु.१०,००,०००।–(दश लाख) **दिवाकर बुढाथोकी**को नाममा चेक काटी दिनु भनेकोले मैले मेरो नाममा NMB Bank को चेक दिवाकर बुढाथोकीको नाममा उक्त रकम बराबरको चेक काटी दिएको, त्यस पश्चात समेत मैले सानु भण्डारीलाई प्रभु, नेपाल, कामना सेवा विकाश, प्राईम कमर्सियल, माछापुच्छ्रे बैंकको चेक मार्फतको चेक काटी रु.१,७९,४७,०००।-(एक करोड उनासी लाख सतचालिस हजार) र मेरो साथी पुर्ण बहादुर पुन मार्फत रु.१,५०,००,०००।-(एक करोड पचास लाख) सानु भण्डारीलाई नगदै दिएको समेत गरी जम्मा रकम रु.३,३९,४७,०००।-(तिन करोड उनान्चालिस लाख सतचालिस हजार) दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवाला समेतलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो एवं साँठगाँठ गरी काठमाडौंको सुन्धारा, नयाँबानेश्वरमा भेटी जम्मा रकम रु.३,३९,४७,०००।-(तिन करोड उनान्चालिस लाख सतचालिस हजार) ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **भेषराज शर्मा लम्साल**ले पेश गरेको जाहेरीदरखास्त।

**(ध) समिर शिवाकोटीको जाहेरी दरखास्त**:

म जाहेरवालाले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा प्रतिवादी सागर राई, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले मलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छौं

भनी विश्वासमा पारी रकम माग गरेको हुँदा मिति २०७६।०५।३० गते ई शुरुको प्रोसेसको लागी रु.१,५०,०००।-(एक लाख पचास हजार) प्रतिवादी सागर राईको नाममा रहेको NIC Asia बैंकको खाता नं.848796350605224 मा पाई दिएको थिएँ। पछि समेत पुन रकम माग गरेकोले मैले सागर राईको सोही खातामा रु.८,५०,०००।-(आठ लाख पचास हजार), पछि रकम पुगेन भनेकोले **मनराज राई**को NIC asia बैंकको खाता नं.0415750498839001 मा रु.५,००,०००।–(पाँच लाख) पठाई दिएको थिएँ। यसरी मैले बिभिन्न मितिमा पटक-पटक गरी जम्मा रकम रु.१५,००,०००।-(पन्ध्र लाख) रकम दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवालालाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो एवं साँठगाँठ गरी काठमाडौंको सुन्धारा, नयाँबानेश्वरमा भेटी जम्मा रकम रु.१५,००,०००।–(पन्ध्र लाख) ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको समिर शिवाकोटीले पेश गरेको जाहेरी दरखास्त।

**(न)** **रोशन शिवाकोटीको जाहेरी दरखास्त**:

म जाहेरवालाले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा प्रतिवादी सागर राई सँग चिनजान भई कुराकानी हुने गरेको थियो, निजले म लगायत मेरा साथीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले मलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छौं भनी विश्वासमा पारी शुरुको प्रोसेसको लागी रकम पठाई दिनु भनेकोले मेरो **बुबा धन प्रसाद शिवाकोटी** (कागज गराउनु पर्ने) ले निजको नाममा रहेको NIC Asia बैंकको खाता नं.8487963506052401मा सन 20 Aug.2021 (२०७६।०५।०३) मा रु.५,००,०००।–(पाँच लाख) जम्मा गरी दिएको, यसै गरी ट्राभल डकुमेण्ट लगायतका कागजातहरु बनाउन भनी मेरो बुबाले निज प्रतिवादीको सोही खातामा सन 11 Sep.2019 मा रु.५,००,०००।–(पाँच लाख), **मोहन राज राई (प्रतिवादी बनाउनु पर्ने)**को NIC Asia Bank को खाता नं.0415750498839001 मा सन 10 Mar 2022 मा रु.५,००,०००।–(पाँच लाख) समेत गरी जम्मा रकम रु.१५,००,०००।-(पन्ध्र लाख) रकम दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवालालाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो एवं साँठगाँठ गरी जम्मा रकम रु.१५,००,०००।-(पन्ध्र लाख) ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको समिर शिवाकोटीले पेश गरेको जाहेरी दरखास्त।

**(प)** **सन्तोष भट्टराईको जाहेरी दरखास्त**:

म जाहेरवालाको मेरो भान्जी श्रद्धा कार्की मार्फत प्रतिवादी राम शरण के.सी.सँग चिनजान भई कुराकानी हुने क्रममा निजले म लगायत मेरा साथीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले तपाईं लगायत तपाईको परिवार समेतलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छौं भनी विश्वासमा पारी शुरुको प्रोसेसको लागी रकम पठाई दिनु भनेको हुँदा निजले भने बमोजिम निजको माछापुच्छ्रे बैंकको खाता नं.1649524772940011 मा मेरो बुबा **बाशुदेव भट्टराई (कागज गराउनु पर्ने)**ले रु.४,५०,०००।-(चार लाख पचास हजार) जम्मा गरी दिएको, निजको सोही खातामा मिति २०७६।०५।२० मा रु.१०,००,०००।-(दश लाख) समेत गरी जम्मा रकम रु.१४,५०,०००।-(चौध लाख पचास हजार) दिएकोमा निज समेतले आफुले भने बमोजिम काम नगरी म जाहेरवालालाई अमेरिका नपठाई मैले दिएको रकम समेत

फिर्ता नगरी निज प्रतिवादीहरु सन्देश शर्मा, केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो एवं साँठगाँठ गरी जम्मा रकम रु.१४,५०,०००।-(चौध लाख पचास हजार) ठगी गरेको हुँदा निज प्रतिवादीहरुलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको समिर शिवाकोटीले पेश गरेको जाहेरीदरखास्त।

**(फ) प्रेमराज पन्थीको जाहेरी दरखास्त**:

म जाहेरवाला पोखराको फूलबारी रिसोर्टमा राधाकृष्ण पोखरेलसँग चिनजान भएको र चिनजान भएपछि विदेश जाने कुरा हुँदा मेरो एकजना साथी छन, निजले भुटानी शरणार्थीको नाममा अमेरिका पठाउन सक्छन भनी काठमाण्डौको नयाँबानेश्वर घर भएका बिदुर गौतमसँग भेट गराई दिएकाले मैले अमेरिका जाने चाहना राखेपछि निजले भक्तपुरको शिरुटार घर हुने ९८५१२२०८६९९ न.को मोवाईल प्रयोग गर्ने गोकुल थापासँग भेट गराई दिएकोमा निजले आफू भुटानी शरणार्थीहरुको नेता टेकनाथ रिजालको PA हुँ, निजको सम्पूर्ण कामहरु हेर्ने मानिस भएकोले नेपालीहरुलाई भुटानीहरुसँग घुसाई भुटानी बनाई अमेरिका लैजान्छन भनेका थिए ।२०७४ सालको कार्तिक/मंशिर महिनामा गोकुल थापाले काठमाण्डौ गौशालामा रहेको शिबम होटलमा लिएर गई टेकनाथ रिजालसँग भेट गराउँदा नेपालीहरुलाई भुटानी बनाई अमेरिका लैजाने कुराकानी भई रहेकोछगोकुलको सम्पर्कमा बस्नुहोस भनेको, टेकनाथ रिजालले गोकुल थापाको नाममा कागज कुरियर गरी पठाएको छ भनेकोले गोकुल थापा र म संगै गएर काठमाण्डौको न्यूरोडबाट मिति २०७४।०९।११ भएको पाना-४ को प्रधानमन्त्रीलाई सम्बोधन गरी भुटानी शरणार्थीहरुको सम्बन्धमा लेखिएको कागजहरु पाना-४ गोकुल थापाले प्रधानमन्त्रीलाई दिने भनेर लिएर गएको, अमेरिका पठाउने कामका लागीAdvance बापत भनेर प्रति ब्यक्ति रु.२,००,०००।–(दुई लाख) का दरले मेरा आफन्तहरु समेत १६ जनाले अमेरिका जान भनीरु.३२ लाख २०७४ सालको चैत्र महिनामा गोकुल थापालाई बुझाएको,२०७५ सालको कार्तिक महिना सम्म कामको कुनै प्रोसेस नभएको र गोकुल थापाको बानी ब्यहोरा ठिक नलागेकोले निजसँग मैले रकम माग गरेपछि निजले २२ लाख तत्काल र पछि भेषराज शर्मा लम्साल मार्फत १० लाख रकम फिर्ता गरे। २०७५ साल फाल्गुण महिनामा भेषराज शर्मा लम्सालले मलाई पोखरा स्थित बिरौटामा बोलाएकोले म निजको घरमा जाँदा टेकनाथ रिजाल मेरो काका हो, निजसँग मेरो राम्रो सम्बन्ध छ भनी मेरो सामुन्नेमा टेकनाथ रिजालसँग मोबाईल हेन्सफ्रीमा राखी कुरा गरेर सुनाएका थिए, सोही बेला केशव प्रसाद दुलालसँग मोबाईलमा नै कुरा गरेका र भुटानीको नाममा नेपालीहरुलाई अमेरिका लैजाने मुख्य मानिस केशव दुलाल नै हो भनेका थिए। मैले भेषराज शर्मा लम्सालसँग समय-समयमा अमेरिका पठाउने र जाने सम्बन्धमा कुरा हुँदानिजले मलाई टेकनाथ रिजाल भनेको UN समेतसँग लिंक भएको ठुलो मानिस हो, अमेरिका जान कुनै समस्या हुँदैन, अमेरिका जानेहरुले निजले सहिछाप गरेको कार्ड बनाउनु पर्छ भनेकोले म, मेरो पुरै परिवार, ससुराली तर्फका सबैजना समेतको करिब ५०/५५ जनाको र अन्यहरु ३५०/४०० जनाको फरक (नक्कली) नामबाट Bhutan Human Right Organization को Membership Card बनाएको हो। कार्डहरु बनाउँदा टेकनाथ रिजालले पठाएको नामावली भनी ९/१० पानामा भएको नाम लिष्ट र भुटानको ठेगाना भएको लिष्ट दिई सोही नामबाट क्रमैसँग भर्नु भनेको हुँदा लिष्टमा भए बमोजिमको जन्ममिति मिल्दोजुल्दो नाम र ठेगाना भरी आफ्नो फोटो टाँस गरी कार्ड बनाएको र मलाई भेषराजले केशव दुलालको कोठामा लिएर गएको र टेकनाथ रिजालको सही भई सकेपछी कार्ड आफैंसँग राखि कार्डको फोटो हाम्रो मोबाईलबाट खिच्न लगाएका हुन। भेषराज शर्मा लम्सालले अमेरिका जानका लागीAdvance बापतको रकम भनी कसैसँग दुई लाख र कसैसँग तीन लाख समेतका दरले म लगायत मेरो चिनजानका करिब ५० जनाले

रु.१,१९,५०,०००।-(एक करोड उन्नाईस लाख पचास हजार रुपैया) रकम जम्मा गरेकोमा सो रकम निजले भने बमोजिम मेरो नामबाट सानु भण्डारीको नाममा रहेको हिमालयन बैंक लि.को खाता नं.०३६०८२२६२३००१६ मा रु.३०,००,०००।-(तीस लाख) र मैरे नामबाट निजको कैलास बिकास बैंक, NCC बैंक, माछापुछ्रे बैंकमा भएका खाताहरुमा पटक-पटक गरी रु.८९,५०,०००।-(उनानब्बे लाख पचास हजार) जम्मा गरी दिएको हो । यसरी निजलाई र निजले भने बमोजिम सानु भण्डारीको खातामा रकम जम्मा गरी दिएपछि २०७६ सालको जेठ महिनामा भेषराज शर्मा लम्सालले मलाई काठमाण्डौ बोलाई सुन्धारामा भेटेपछि निजले मलाई सुकेधारामा रहेको केशव प्रसाद दुलालको कोठामा लगी केशव प्रसाद दुलालसँग भेट भए पछि निजले मलाई टेकनाथ रिजालले दस्तखत गरेका Bhutan Human Right Organization को Membership Card को बण्डलहरु दिएकोमा सो कार्डबाट मैले मेरा मान्छेका कार्डहरु छानेर मोबाईलबाट फोटो खिचेपछि सो को प्रतिहरु निजै केशव प्रसाद दुलालले राखेका हुन । मलाई भेषराज शर्मा लम्सालले मन्त्री, सचिव सबैसँग कुरा भइसक्यो, अव बायोमेट्रिक गर्नु पर्छ, बायोमेट्रिक गर्नु भन्दा अघि पहिले दिएको रकममा थप गरी जनही रु.१०,००,०००।-पुऱ्याउनु पर्छभनेकोले सबैलाई थप रकम ब्यबस्था गरी १०/१० लाख पुऱ्याउनु पर्ने र बायोमेट्रिकको लागि काठमाण्डौ आउनु पर्ने भयो भनेर खबर गरेकोले २०७६ सालको साउनको तेश्रो हप्ता तिर भेषराज शर्मा लम्सालको निर्देशन अनुसार काठमाण्डौ पशुपतिको डाँडामा कार्डवालाहरुलाई राखि दश लाख रकम जम्मा गर्न नसक्नेको बायोमेट्रिक हुँदैन, रकम जम्मा गर्न सक्नेको मात्र बायोमेट्रिक हुन्छ रकम जम्मा गर्न सक्ने/नसक्ने यकिन गरी रकम लिएर हामीले खबर गरेको समय र स्थानमा बायोमेट्रिकको लागी आउनुहोस भनेकोले निजले भने अनुसार भने अनुसार २८ जनाले रकम तयार पारी सोही महिनाको २६ गते २८ जनालाई भेषराज शर्मा लम्साल, सानु भण्डारी, केशव प्रसाद दुलाल समेतले काठमाण्डौ न्यूरोडको भित्रपट्टी रहेको हाल नाम याद नभएको होटलमा लगी होटलको २ वटा कोठाहरु लिएर सोही कोठामा बसी नगद लिई फारम भराएका हुन, रकम लिंदा १० लाखमा जनही पहिले दिएको २ लाख वा ३ लाख घटाई बाँकी रहेको ७ लाख वा ८ लाखका दरले रकम लिएका हुन । फारम वितरण गरी रकम संकलन गर्ने काम सानु भण्डारी, केशव प्रसाद दुलाल र भेषराज शर्मा लम्सालले गरेका हुन । यसरी फारम भराउँदाको दिनमा सानु, केशव र भेषराजले कुल रु.१,४७,५०,०००।–(एक करोड सतचालिस लाख पचास हजार) रकम नगदै संकलन गरेका हुन । सो को १ हप्तापछि सोही होटलमा अन्य १० जना पीडितहरु आई बायोमेट्रिकको लागि फारम भरी सानु, केशव र भेषराजले रु.९५,००,०००।-(पन्चानब्बे लाख) नगद रकम लिई २ दिन पछि सोही होटलमा म सहितका ६ जनाले फारम भरेर नगद रु.५९,००,०००।-(उनान्साठ्ठी लाख) बुझाएको हो, सो को १० दिन पछि ३ जनाको फारम भरेर रु.३०,००,०००।-(तीस लाख) भेषराज शर्मा लम्सालले लिएका हुन । यसरी पटक-पटक गरी कुल रु.४,५१,००,०००।–(चार करोड एकाउन्न लाख) भएकोमा मैले पहिले गोकुल थापालाई दिएको ३२ लाख मध्ये २२ लाख फिर्ता पाएर बाँकी रहेको १० लाख समेत मैले नै तिरेको देखाई कुल रु.४,६१,००,०००।-(चार करोड एकसठ्ठी लाख) म समेतले चुक्ता गरेको भनी हिसाव राखिएको थियो । यसपछि केशव दुलालले मलाई भने बमोजिम अरुण रेग्मीको ईनभेष्टमेन्ट बैंकको खातामा मैले रु.३,००,०००।-(तीन लाख) जम्मा गरी दिएको थिएँ । यसरी दिएको कुल रु.४,६४,००,०००।-(चार करोड चौसठ्ठी लाख) को जिम्मा मौखिक रुपमा केशव प्रसाद दुलाल, सानु भण्डारी र भेषराज शर्मा लम्सालले लिएका हुन । लामो समयसम्म काम नभएपछि ताकेता गर्दा काम हुँदैछ नआत्तिनु भनी केशव प्रसाद दुलाल, सानु भण्डारी र भेषराज शर्मा लम्सालले बारम्बार भन्ने गरेको तर काम नभएको कारण मैले रकम लिएका मानिसहरु केशव प्रसाद दुलाल, सानु भण्डारी र भेषराज शर्मा

लम्साललाई भन्न आएका र टंक गुरुङको ललितपुर झम्सीखेल स्थित रेष्टुरेन्टमा भेटी रकम फिर्ता माग गर्दा हामीले केशव समेतलाई भेटने गरेको टंक गुरुङको रेष्टुरेन्टमा टोप बहादुर रायमाझी, निजका पि.ए.लिला जि.सी., केशव प्रसाद दुलाल, सानु भण्डारी, भेषराज शर्मा लम्साल, शन्देश शर्मा समेत र गृह मन्त्रालयका कर्मचारी हौं भन्ने मानिसहरु समेत बसी घण्टौं मिटिङ बस्ने गरेका र मिटिङबाट बाहिर निस्कदा हामीहरुलाई तपाईहरुको काम पक्का हुन्छ भनेर भन्ने गरेका थिए। यसै क्रममा एभरेष्ट होटल बानेश्वरको चौथो तलामा १ पटक टोप बहादुर रायमाझीलाई भेट्दा निजले मलाई कुनै टेन्सन नलिनु तपाईहरुको काम पक्का हुन्छ भनेर भनेका हुन। मैले टोप बहादुर रायमाझीलाई सांग्रीला होटल लाजिम्पाटमा भेट्दा टोप बहादुर रायमाझीसँग ईन्द्रजीत राई र सानु भण्डारी पनि संगै एकै टेबलमा बसेका थिए। नक्कली भुटानी शरणार्थीहरुको नाममा नेपालीहरुलाई अमेरिका लैजाने भनी २०७७ सालको असोज महिनाको ८/१० गतेतिर मलाई जोरपाटीमा बोलाएकोमा म, रामशरण के.सी. र सागर राई ३ जना जोरपाटीमा रहेको नाम थाहा नभएको रेष्टुरेन्टमा पुग्दा केशव प्रसाद दुलाल, राम बहादुर थापाका छोरा प्रतिक थापासंगै बसेको र वरिपरि प्रतिक थापाका अन्य केही मानिसहरु पनि थिए, सो बेला प्रतिक थापाले म, राम शरण के.सी. र सागर राईलाई तपाईहरुको काम अब अगाडी बढ्छ, रकम जम्मा गरेर केशव दुलाललाई दिनु भनेकाले निजले भने बमोजिम चिरन्जीवी आचार्य मार्फत आएको रु.१,००,००,०००।-(एक करोड) र राम शरण के.सी.ले रु.१,५०,००,०००।-(एक करोड पचास लाख) राम शरण के.सी.को बसुन्धारा (धापासी) घरबाट नगदै रातो-सेतो रङको जेब्रा झोलामा हालेर स्कुटरमा नगदै रकम लिई केशव प्रसाद दुलालले भनेको स्थान नक्सालको निलगीरी रेष्टुरेन्टमा जाँदा त्यहा प्रतिक थापा र केशव प्रसाद दुलाल दुवै जनाले नगद भएको झोला गाडीमा पार्किङमा रहेको कारमा राखिदिनु भनेकोले म र राम शरण के.सी.ले नगद भएको झोला गाडीको डिक्की खोली राखि दिएको हो। हाम्रो काम हुन्छ-हुन्छ भन्दै झुलाई राखेकोमा केही पछि संसद बिघटन भएपछि सानु भण्डारीले टोप बहादुर रायमाझीसँग एकपटक कुरा गर्दा टोप बहादुरले फेरी हाम्रो सरकार आएपछि मात्र तपाईहरुको काम हुन्छ भनेकोले हामीहरुले सानु भण्डारी र केशव दुलाललाई रकम फिर्ता गर्न दवाव दिन थालेका हौं, यसरी फसेको रकम र काम पनि नहुने भएपछि मैले मिति २०७८।०८।०२ मा मैले मेरो नामबाट अख्तियार दुरुपयोग अनुसन्धान आयोगमा ईन्द्रजीत राई समेतले रकम लिई अमेरिका पठाउने काम नगरेको र सो कुरामा प्रमुख आयुक्त प्रेम कुमार राईको समेत नाम जोडिएको भन्ने ब्यहोरा उल्लेख गरी उजुरी गरेको थिएँ। मैले दिएको उजुरी C-016034/078-08-02 मा दर्ता भएको र मेरो उजुरी उपर कुनै कारवाही भएन। काम नहुने भए पछि रकम फिर्ता गर्न केशव प्रसाद दुलाल, सानु भण्डारी समेतलाई पटक-पटक दवाव दिंदा २०७८ साल माघ महिनाको १ दिन बेलुकी टंक गुरुङको झम्सीखेल स्थित रेष्टुरेन्टमा सन्देश शर्मा, प्रतिक थापा, सानु भण्डारी र केशव प्रसाद दुलाल आउँदा प्रतिक थापाले ईन्द्रजीत राईको सुनाकोठीमा भएको फ्याक्ट्री मलाई पास गरेर दिनु पर्छ, म तपाईहरुबाट लिएको ६०% रकम फिर्ता गरी दिन्छु भनेका हुन, तर निजको सो प्रस्ताव सानु भण्डारी र केशव दुलालले नमानी पुरा रकम चाहिन्छ भनेका हुन। हामीले निरन्तर सानु भण्डारी र केशव दुलाललाई रकम फिर्ता गर्न दवाव दिएपछि सानु भण्डारी र केशव दुलालले रु.१,६४,००,०००।-(एक करोड चौसठ्ठी लाख) नगद र चेक मार्फत फिर्ता गरेका हुन। बाँकी रहेको रकम फिर्ता गर्न दवाव दिईरहेको अवस्थामा केशव प्रसाद दुलालले मलाई बालकृष्ण खाँण हाम्रै मान्छे गृहमन्त्री भएको छ, गृहमन्त्री र गृह सचिव टेक नारायण पाण्डेसँग कुरा भैसकेको छ, अव रकम फिर्ता गर्ने होईन अमेरिका पठाउने नै काम गर्छौं भनी केशव दुलालले कहिले निजसँग एक्लै र कहिले सानु भण्डारी समेत भई पटक-पटक गृह मन्त्रालय गएका थिए। निजहरु कुरा गर्दा सिडिओलाई कसरी मिलाउने, ४२९ जनाभित्र कसरी मान्छेहरु

पार्ने, प्रकृया र प्रतिवेदन कसरी मिलाउने भन्ने समेतका बिषयमा कुरा हुने गरेको थियो । सानु भण्डारी र केशव दुलाल समेत भई सचिव टेक नारायण पाण्डेसँग भेट गर्न जाँदा गाडीमा नगद रकम झोलामा राखेर लिएर जाने गरेकोमा निजहरु दुवैजना सचिवको कार्यकक्षमा गएर आएपछि रकम दिएर आउने गरेका हुन, हामीहरुले सानु भण्डारी र केशव दुलालसँग अमेरिका जाने लैजाने बारेमा बाहिर पनि पटक पटक कुरा गर्दा केशव प्रसाद दुलालले सचिव टेक नारायण पाण्डेसँग फोन गरी फोन हेन्सफ्रिमा राख्ने गरेका थिए, त्यसरी कुरा हुँदा टेक नारायण पाण्डेले जसरी पनि काम गरिदिन्छु भनेर भन्ने गरेका थिए, सचिवले नै त्यसरी बोलेको र प्रत्यक्ष भेटेर समेत कुरा भएको कारण काम हुने नै बिश्वासमा परी पछि बायोमेट्रिकको लागि भनी जिल्ला मोरङ सुन्दर हरैचा नगरपालिका वडा नं.४ स्थित गोकर्ण रिसोर्टमा मिति २०७९।०५।२९ मा केशव प्रसाद दुलाललाई भेटेर मैले रु.१४,००,०००।–(चौध लाख) र राम शरण के.सी.ले रु.२३,००,०००।-(तेईस लाख) रकम दिएका हौं । सोही दिन जिल्ला मोरङ सुन्दर हरैचा नगरपालिका वार्ड नं.४ स्थित गोकर्ण रिसोर्टमा म समेत २२/२३ जनाको बायोमेट्रिक भएको हो । केशव दुलाल र सानु भण्डारीले मैले मान्छे खोजेर ल्याईदिए बापत मेरो परिवार अमेरिका जान लाग्ने खर्च म बाट नलिने भनेर भनेको कारण लोभमा परी अन्य मानिसहरुलाई मैले अमेरिका जाने सम्बन्धमा भनेको हो। मैले रकम संकलन गरेका मानिसहरुले मलाई रकम दिएको, मैले सानु भण्डारी र केशव दुलाल समेतलाई रकम जम्मा गरिदिएको भौचरहरु, म समेतको भुटानी परिचयपत्र, मैले अख्तियारमा दिएको उजुरी, रकम दिने र लिने वीचमा भएका हिसावहरु देखिने कागजातहरु, केशव दुलालले आफूले लिएको रकमको हिसाब निजैको हस्ताक्षरमा टिपोट गरेको कागज समेतका अन्य स्क्रीनसटहरु समेतका प्रतिलिपीहरु र मेरो I-phone समेत यसै जाहेरी साथ पेश गरेको छु प्रमाण लगाई पाउँ भनी प्रेम राज पन्थीले पेश गरेको जाहेरी दरखास्त ।

| सि.न. | रकमको बिबरण | रकम |
|---|---|---|
| १ | केशव प्रसाद दुलाल, सानु भण्डारी र भेषराज शर्मा लम्साललाईपटक-पटक दिएको । | रु.४,७८,००,०००।- |
| २ | केशव प्रसाद दुलाल, सानु भण्डारी र भेषराज शर्मा लम्साललाई दिएको रकमबाट पटक-पटक गरी फिर्ता लिएको । | रु.१,६४,००,०००। |
| ३ | चिरन्जीवी आचार्य मार्फत आएको रकम केशव प्रसाद दुलालर प्रतिक थापालाई काठमाण्डौ नक्साल स्थित निलगिरी रेष्टुरन्टबाहिर गाडी पार्किङ गरी राखेको गाडीमा दिएको । | रु.१,००,००,०००। |
| ४ | चिरन्जीवी आचार्य मार्फत आएको रकम केशव प्रसाद दुलाल र प्रतिक थापालाई काठमाण्डौ नक्साल स्थित निलगिरी रेष्टुरन्टबाहिर गाडी पार्किङ गरी राखेको गाडीमा दिएको रकमबाट फिर्तालिएको । | रु.४८,००,०००। |
| ५ | सि.न.१ र ३मा उल्लेखीत रकम बाट बांकी लिन पर्ने रकम | रु.३,६६,००,०००। |

(ब) **डम्बर बहादुर खत्रीको जाहेरी दरखास्त:**

म जाहेरवालाले बैदेशिक रोजगारमा जाने सोच बनाई रहेको अवस्थामा प्रतिवादी सागर राई र सुनिल बुढाथोकी सँग भेट भई कुराकानी हुँदा निजले भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाई दिन्छु रु.३५,००,०००।–(पैंतिस लाख) लाग्छ भनी विश्वास दिलाई शुरुको प्रोसेसको लागी रु.८,००,०००।–(आठ लाख) लाग्छ भनेकोले मैले सुनिल बुढाथोकीको सिद्धार्थ बैंकमा रहेको खाता नं.02416432880 मा मिति २०७७।१०।२१ गते रु.२,००,०००।–(दुई लाख र मिति २०७७।१०।२५ गते रु.६,००,०००।–(छ लाख) गरी दिएकोमा निजले आफुले भने बमोजिम काम नगरी म जाहेरवाला समेतलाई अमेरिका नपठाई मैले दिएको रकम समेत फिर्ता नगरी ठगी गरेको हुँदा निज प्रतिवादीहरु सागर राई र सुनिल बुढाथोकी समेतलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको **डम्बर बहादुर खत्री**ले पेश गरेको जाहेरी दरखास्त ।

**(भ) पेम्बा शेर्पा समेतको जाहेरी दरखास्त:-**

प्रतिवादी आङटावा शेर्पा नेपाली कांग्रेस पार्टी बाट सभासद समेत भएका पुर्व सभासद समेत भएकोले निज प्रतिवादीसँग हामी जाहेरवाला तथा हामीहरुको छोरा, छोरी समेतका घर परिवारको सदस्य सगं चिनजान सम्पर्क भई रहने ब्यक्ती भएकोले निजसँग भेटघाट बोलचाल हुँदा समसामयिक बिषयमा कुरा हुँदा निजले अमेरिका जाने चान्स हुनसक्छ, सरकारी बिशेष कोटा आएको छ। एक जनाको रु.४०,००,०००।( चालिस लाख रुपैया) सम्म लाग्छ। सुरु प्रक्रियाको लागी रु.६/६ लाख सम्म जम्मा गर्नु। सो रकमबाट प्रक्रिया गरी एउटा कागज आउछ , सो कागज आए पछी रु.२०,००,०००।- ( बिस लाख) जम्मा गर्नु पर्छ र त्यस पछी अन्तिम्मा पुरै काम भए पछी बांकी रकम जम्मा गरी सिधै प्लेन चढी अमेरीका जाने भनी बिभिन्न प्रलोभन देखाई अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाएकोले हामी जाहेरवालाहरु निजको विश्वासमा परी निजले भने बमोजिम म जाहेरवाला जिमा सेपेर्नी समेतले प्रतिवादी आङटावा कुमारी बैंक लि.को 0190012654500002 न.को खातामा पटक-पटक गरी रु.५४,००,०००।–(चवन्न लाख) जम्मा गरी दिएकोमा निजले काम भई रहेको छ भन्दै आएकोमा हाल आएर निज प्रतिवादी आङटावा शेर्पा समेतका बिभिन्न ब्यक्तीहरुले भुटानी शर्णार्थीको नाममा नेपालीहरुलाई अमेरिका पठाउने भनी रकम लिई ठगी गरेको भन्ने बिभिन्न संचार माध्यमहरुबाट प्रचार प्रसार भई रहेकोले निज प्रतिवादी आङटावा शेर्पालाई मिति २०७९/१२/ ३० गते भेटी कुरा गरी तपाईले हामीलाई पनि भुटानी बनाई अमेरिका पठाउन रकम लिएको हो , सो कुरा किन पहिला नै हामीलाई जानकारी दिनु भएन भन्दा निजले हो भनी स्वीकार गर्दै नेपालीलाई भुटानीको कोटामा पठाउन खोजी रकम लिएकोमा बिबिध कारणले पठाउन नसकी प्रहरीमा उजुरी परी साथीहरु समाती सक्यो मलाई पनि समात्न सक्छ तपाईहरु प्रहरीमा निबेदन दिन नजानु मिति २०८०/०१/१० गते सम्म समय दिनु सो मिति सम्म रकम फिर्ता दिन्छु भनेकोले हामीलाई सरकारी कोटा भनी झुक्याई रकम लिई भुटानी शर्णार्थी बनाई पठाउन लागेको कुरा हाल मात्र थाहा पाएकोले रकम फिर्ता दिनु भनी निजको सम्पर्कमा बसी रहेकोमा हाल एका-एक सम्पर्क बिहीन भएकोमा निज प्रतिवादी आङटावा शेर्पा समेतले माथी उल्लेखीत परिवन्दबाट भुटानी शर्णार्थीको नाममा नेपालीलाई अमेरिका पठाउने नाममा धेरै मानिसहरुसँग रकम लिई नपठाएकोले निजहरु उपर जाहेरी दिई निज आङटावा शेर्पा समेतका ब्यक्तिहरुलाई पक्राउ गरी ल्याई प्रहरी हिरासतमा थुनामा रहेको भन्ने बिभिन्न समचार माध्यमबाट प्रचार प्रसार भएको जानकारी पाएकोले हामीलाई पनि भुटानी शर्णार्थिको नाममा ढांटी झुक्याई अमेरीका पठाई दिन्छु भनी रकम लिई ठगी गरेको कुरा थाहा पाएको र निजले मिति २०८०/०१/१० गते सम्म रकम फिर्ता दिन्छु भनी समय मागी फरार भई हाल पक्राउ परेकोले हामी ठगिएको कुरा मिति २०७९/१२/३० गते मात्र यकिन भएकोले निजलाई कानून बमोजिम कारवाही गरी हामीबाट ठगी गरी लिएको जाहेरी दरखास्तमा उल्लेखित रकम समेत दिलाई भराई पाउँ भनी की जिमा सेपेर्नी, तेन्जी पुटी सेर्पिनी, जिमा सेर्पा, पेम्बा शेर्पा, लमडोमा शेर्पा, सोनी शेर्पा समेतले पेश गरेको जाहेरी दरखास्त।

**२. निवेदनहरु:**

**(क) सुनिता गौतमको निवेदन:-**

मेरो श्रीमान राम कुमार रेग्मी समेतले मिति २०७९/०२/१८ गते श्रीमान लगायत अन्य बिभिन्न व्यक्तिहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भन्दै विश्वास दिलाई प्रलोभन र झुक्यानमा पारी सन्देस शर्मा समेतका व्यक्तिहरुले करोडौं रकम ठगी गरेको भनी यस कार्यालयमा जाहेरी दरखास्त दिई अनुसन्धान भई रहेकोमा यस मुद्दासँग सम्बन्धीत हुन सक्ने पूर्व सह-सचिव बालकृष्ण पन्थीको संयोजकत्वमा बिज्ञ गणेश बहादुर

के.सी.तथा शाखा अधिकृत दिपक प्रसाद न्यौपाने सदस्य सचिव भई गठन भएको कार्यदलले तयार पारेको भुटानी शरणार्थी सम्बन्धी समस्याको स्थायी र दिर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन सहितको फाईल यसै निवेदन साथ पेश गरेको छु, प्रमाण लगाई पाउँ भन्ने समेत व्यहोराको सुनिता गौतमले पेश गरेको निवेदन।

**ख)** **प्रितम शर्माको निवेदन**:-

मेरो श्रीमान गजेन्द्र बुढाथोकी समेतले मिति २०७९/०२/१८ गते श्रीमान लगायत अन्य बिभिन्न व्यक्तिहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भन्दै विश्वास दिलाई प्रलोभन र झुक्यानमा पारी सन्देश शर्मा समेतका व्यक्तिहरुले करोडौं रकम ठगी गरेको भनी यस कार्यालयमा जाहेरी दरखास्त दिई अनुसन्धान भई रहेकोमा यस मुद्दासँग सम्बन्धीत रही मेरो श्रीमानले प्रतिवादी सन्देश शर्मा बीच भएको फोन कुराकानीको तिनवटा अडियो क्लिपहरु यसै निवेदनसाथ पेश गरेको छु, प्रमाण लगाई पाउँ भन्ने समेत व्यहोराको प्रितम शर्माले पेश गरेको निवेदन।

ग) **यम बहादुर परियारको निबेदन:-**

उपरोक्त सम्बन्धमा नेपाल सरकार गृह मन्त्रालय, अन्तर्गत नेपाल हज समितीमा प्रयोग भएको गाडी तपाईले चलाई आईरहनु भएकोमा उक्त ईम्बोस नम्बर BAB 1405 भएको सेतो रंको निसान पेट्रोल गाडी जिल्ला प्रहरी परिसर काठमाण्डौमा दाखिला गराई आउनु भनी मलाई नेपाल हज समितीको कार्यालयबाट जानकारी प्राप्त हुन आएकोले मैले चलाउदै आईरहेको ईम्बोस नम्बर BAB 1405 भएको सेतो रंगको निसान पेट्रोल गाडी यसै निबेदन दाखिला गरेको छु, कानुन बमोजिम होस भन्ने ब्यहोराको यम बहादुर परियारको निबेदन।

**३.** **खानतलासी बरामदी मुचुल्काहरु:**

**क)** **ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं.-९ बालकुमारी स्थित खडा गरिएको खानतलासी बरामदी मुचुल्का कागज:**

ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं.-९ बालकुमारी स्थित पूर्वमा बालकुमारी पुल तर्फ जाने पक्की मूल सडकवाटो, पश्चिममा सातदोवाटो चोक तर्फ जाने पक्की मूल सडक वाटो, उत्तरमा बंगलामुखी मन्दिर तर्फ जाने पक्की सडक वाटो, दक्षिणमा ईमाडोल तर्फ जाने सडक वाटो, यति चार किल्ला भित्रमा पर्ने उत्तर तर्फ सडकवाटोमा हाल यकिन नाम, थर, वतन खुल्न आएका **सागर राई**लाई फेला पारी निजको शरिर खानतलासी गर्दा निजले लगाएको कालो रंगको ट्राउजरको अगाडीको दायाँ खल्तीमा IMEI No.356775084518379 भएको 9863500492 नम्वरको सिमकार्ड प्रयोग भएको Apple कम्पनीको सेतो रंगको I-Phone थान-१ फेला परेको, सोही खल्तीमा IMEI No.864721052746951/864721052746944 भएको 9819051988 नम्वरको सिमकार्ड प्रयोग भएको One Plus कम्पनीको आकाशे निलो रंगको पछाडीको भाग फुटेको चर्किएको मोवाईल थान-१ समेत फेला पारी उक्त मोवाईलहरु समेत बरामद गरी निज सागर राईलाई नियन्त्रणमा लिईएको भन्ने व्यहोराको खानतलासी तथा बरामदी मुचुल्का कागज।

ख) **ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं.-१२ स्थित खडा गरेको खानतलासी/बरामदी मुचुल्का कागज**:-

मिति २०८०।१। २१ गते जिल्ला ललितपुर ललितपुर महानगरपालिका वडा नं.१२ स्थित रहेको प्रतिवादी ईन्द्रजित राईको साढे २ तले पक्की घर रहेको सो घरको दोश्रो तलामा रहको ३ वटा कोठाहरु मध्ये दक्षीण

तर्फको कोठामा रहेको काठको दराज माथी रहेको कालो झोलाबाट **ईन्द्रजित राई**को नाममा रहेको ना.प्र.न.३५६७/३०८२ भएको सक्कल नेपाली नागरीकता प्रमाण पत्र थान-१,सुमिरा कार्कीको नाममा जारी भएको सक्कल जग्गाधनी पुर्जा थान-१, मिति २०७७।११।२६ गते बैना स्वरुप गरिएको सक्कल कागज थान-१,मेगा बैकको भौचर रसिदबाट ईन्द्रजित राईको नाममा रकम जम्मा गरीदिएको बिभिन्न मितिको सक्कल भौचर पाना-६ र किराँत ईन्टरनेशनल प्रा.लि.को नाममा काटिएको पाना-२ र नेपाल बैक लि.को भौचरबाट राजस्व दाखिला गरको भौचर पाना-१ तथा हस्त लिखित रुपमा लेखिएको चिटको पत्र पाना-१ समेत फेला पारी बरामद गरीएको भन्ने ब्यहोराको खानतलासी/बरामदी मुचुल्का कागज।

ग) **ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं.-१५ स्थित खुमलहाईटमा खडा गरेको खानतलासी/बरामदी मुचुल्का कागज**:-

ललितपुर जिल्ला ललितपुर महानगर पालिका वडा नं.-१५ स्थित खुमलहाईट स्थित पूर्वमा मित्रलाल बरालको २ तले पक्की घर, पश्चिममा कौशिला भुसालको ३ तले पक्की घर, उत्तरमा विष्णु शर्माको २ तले पक्की घर र दक्षिणमा माधब बन्जाडेको २ तले पक्की घर यति चार किल्ला भित्र पूर्व मोहडा भएको २.५ तले घर रही सो घरको माथिल्लो तलामा ट्रशले बारी कोठा बनाईएको, सो घरको मुनी फ्ल्याटमा भित्र प्रवेश गर्ने मूल ढोका रहेको, माथिल्लो तलामा प्रवेश गर्ने दक्षिण तर्फ कुनाबाट भऱ्याङ रहेको, सो घर भित्र कानूनी रितपुऱ्याई प्रवेश गरी हेर्दा मुनी फ्ल्याटमा ३ वटा बेड रुम, १ वटा बैठक कोठा रहेको, माथी दोश्रो तलामा १ वटा किचन रुम, २ वटा बेड रुम र २ वटा बैठक कोठा रहेको, सो माथी ट्रशले बनाएको २ वटा कोठा रहेको, सो कोठामा टोप बहादुर रायमाझी सुत्ने गरी १ वटा कोठा र १ वटा बैठक कोठा रहेको, सो घरको सम्पूर्ण कोठाहरु कानूनी रितपुऱ्याई तलासी लिंदा ठगी तथा संगठित अपराध मुद्दामा प्रमाण लाग्ने कुनै पनिचिज वस्तु सामान फेला नपरेको भन्ने ब्यहोराको खान तलासी एबम बरामदी मुचुल्का कागज।

**घ) जिल्ला काठमाण्डौ का.म.न.पा.वडा नं.-३१ स्थित खडा गरेको खानतलासी/बरामदी मुचुल्का कागज**:-

जिल्ला काठमाण्डौ का.म.न.पा.वडा नं.३१ स्थित फुर्वमा तिनकुने तर्फ जाने मूल वाटो, पश्चिममा नयाँबानेश्वर चोक, उत्तरमा यातायात विभागको कार्यालय, दक्षिणमा सिभिल अस्पताल, यति चार किल्ला भित्र सिभील अस्पताल गेटमा नजिक सडकमा फेला पारेका प्रतिवादी **गोबिन्द कुमार चौधरी र रामशरण के.सी.**लाई पक्राउ गरी निजहरूको शरीर तलासी गर्दा प्रतिवादी गोबिन्द कुमार चौधरीले लगाएको निलो रङको जिन्स पाईन्टको दायाँ खल्तीबाट IME नम्बर ३५३४१५४६३८५०९३६/३५५०२१९८३८५०९३१ भएको ९८२२१९९०५० नम्बरको सिम सहितको निलो रङको सामसुङ कि-प्याड मोबाईल थान-१ र प्रतिवादी रामशरण के.सी.को साथबाट IME नम्बर ३५१००४७३४३५६१६२/३५१००४७३४३५६१७० भएको ९८२८१६४८५३ नम्बरको सिम सहितको कालो रङको Colors कि-प्याड मोबाईल थान-१ र IME नम्बर ८६०१४६०४९०२१०९०/८६०१४६०४९०२१०८२ भएको ९८०४९२१२०५ र ९८१८२३२४२० सिम प्रयोग गएको रातो रङको ओप्पो कम्पनीको मोबाईल थान-१ समेत बरामद गरी निजहरुलाई समेत नियन्त्रनमा लिईएको भन्ने ब्यहोराको खानतलासी तथा बरामदी मुचुल्का कागज।

ङ) **<u>ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं.२८ स्थित खडा गरिएको खानतलासी/बरामदी मुचुल्का कागज</u>**:-

ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं.-२८ पाश्चल टोल स्थित पूर्वमा खाली जमिन, पश्चिममा खाली जमिन, उत्तरमा खाली जमिन, दक्षिणमा सार्वजनिक सडक, यति चार किल्ला भित्र रहेको स्थानमा प्रतिवादी **<u>सन्देश शर्मा</u>**को ३.५ तले पक्की घर रहेको, सो घरको मूल गेट दक्षिण तर्फ रहेको, मूल गेटबाट भित्र प्रवेश गरी हेर्दा घरको भुईं तलामा छिर्ने ढोका रहेको, सोही घरको पूर्व तर्फ माथिल्लो तलामा जाने सिंढी रहेको, सो सिंढीबाट माथिल्लो तलामा गई हेर्दा माथिल्लो तलामा ३ वटा कोठाहरु र तेश्रो भन्दा माथी गई हेर्दा भान्छा कोठा रहेको, उक्त कोठाहरु खानतलासी गर्दा भुईं तलामा रहेको कोठाहरु खाली रहेको, पहिलो, दोश्रो, तेश्रो तलामा रहेका कोठाहरु खानतलासी गर्दा ठगी तथा संगठित अपराधमा प्रमाण लाग्ने चिजवस्तुहरु फेला नपरेको भन्ने व्यहोराको खानतलासी/बरामदी मुचुल्का कागज।

च) **<u>ललितपुर जिल्ला, ललितपुर महानगरपालिका वडा नं.-२३ स्थित खडा गरिएको खानतलासी/बरामदी मुचुल्का कागज</u>**:-

ललितपुर जिल्ला ललितपुर महानगरपालिका वडा नं.-२३ धापाखेल स्थित रहेको प्रतिवादी टंक कुमार गुरुङको घरको पूर्वमा खाली जमिन, पश्चिममा सार्वजनिक सडक, उत्तरमा देव बहादुर पुनको घर, दक्षिणमा सार्वजनिक सडक, यति चार किल्ला भित्र रहेको सा।थानमा प्रतिवादी **<u>टंक कुमार गुरुङ</u>**को घरको पहिलो तलामा रहेको ४ वटा कोठाहरु प्रतिवादी केशव प्रसाद दुलालले भाडामा लिई बस्ने गरेको हुँदा उक्त कोठाहरुमा चेकजाँच गरी खानतलासी गर्दा ठगी तथा संगठित अपराध मुद्दामा प्रमाण लाग्ने कुनै चिजवस्तुहरु फेला नपरेको भन्ने व्यहोराको खानतलासी/बरामदी मुचुल्का कागज।

**छ)** **<u>ललितपुर जिल्ला, महालक्ष्मी नगरपालिका वडा नं.४ स्थित खडा गरिएको खानतलासी/बरामदी मुचुल्का कागज</u>**:-

जिल्ला ललितपुर, महालक्ष्मी नगरपालिका वडा नं. ४ स्थित पूर्वमा सार्वजनिक सडक, पश्चिममा खाली जमिन, उत्तरमा खाली जमिन, दक्षिणमा सार्वजनिक सडक, यति चार किल्ला भित्र रहेको स्थानमा प्रतिवादी **<u>सानु भण्डारी</u>**को पूर्व मोहडा भएको घर रहेको, सो घरको मूलगेट पूर्वतर्फ रहेको, सो गेटबाट भित्र प्रवेश गरी हेर्दा २.५ तले घर रहेको, सो घरको अगाडीबाट माथिल्लो तलामा जाने सिंढी रहेको, सो सँगै घरको भुईंतलामा जाने मूलढोका रहेको, उक्त ढोकाबाट भित्र प्रवेश गरी सिंढीबाट माथिल्लो तलामा रहेको ४ वटा कोठाहरु खानतलासी गर्दा उक्त कोठाहरु मध्ये पूर्वतर्फ भान्छा कोठा रहेको, सो सँगै रहेको सिटिङ कोठा (बैठक कोठा) मा रहेको भित्तामा एटेच भएको दराजमा बिभिन्न कागज पत्रहरु रहेको, उक्त कागज पत्रहरु चेक जाँच गर्दा ठगी तथा संगठित अपराधमा प्रमाण लाग्ने चिज, वस्तु तथा कागजातहरु फेला नपरेको, यसै गरी सो घरको माथिल्लो तलामा गई हेर्दा माथिल्लो तलाको पश्चिम पट्टीको बेड रुम भएको कोठाको पूर्व तर्फ रहेको दराजमा बिभिन्न कागज पत्रहरु रहेको, सो कागज पत्रहरु रहेको स्थानमा २०१६ नविल बैंक लेखिएको डायरी फेला परेको, सो डायरी चेक गर्दा उक्त डायरीको भित्री पानामा बिभिन्न हिसाब किताब लेखिएको पाईएको हुँदा उक्त डायरी प्रमाण लाग्न सक्ने भएको हुँदा बरामद गरिएको, सो बाहेक अन्य कोठाहरु चेकजाँच गर्दा प्रमाणमा लाग्ने चिज वस्तुहरु फेला नपरेको भन्ने व्यहोरा खानतलासी/बरामदी मुचल्का कागज।

**ज) <u>जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-३२ पुरानो सिनामंगल टाउनप्लानिङ स्थित खडा गरेको खानतलासी/बरामदी मुचुल्का कागज</u>:-**

जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.३२ पेप्सिकोला टाउन प्लानिङ पुरानो सिनामंगल स्थित पूर्वमा कल्याण पौडेलको जग्गामा विश्वास श्रेष्ठले सञ्चालन गरेको गार्मेण्ट कारखाना, पश्चिममा खाली जग्गा, उत्तरमा कार्कीचोक न्याकाटे मन्दिर तर्फ जाने वाटो, दक्षिणमा सबनम श्रेष्ठको २.५. तले पक्की घर, यति चार किल्ला भित्र पूर्व मोहडा भएको प्रतिवादी **टेक नारायण पाण्डे**को ३ तले घर रहेको, उक्त घर भित्र प्रवेश गरी हेर्दा भुईं तलामा ३ वटा कोठाहरु रहेको, दोश्रो तलामा ३ वटा कोठाहरु रहेको, घरको छतमा स्टोर कोठा रहेको, उल्लेखित कोठाहरुमा रितपूर्वक खानतलासी गर्दा ठगी तथा संगठित मुद्दामा प्रमाण लाग्ने चिज वस्तुहरु फेला नपरेको भन्ने व्यहोराको खानतलासी/बरामदी मुचुल्का कागज।

**झ) <u>जिल्ला मोरङ, पथरी शनिश्चरेनगरपालिका वडा नं.-१०सिविरडाँडामा खडा गरेको खानतलासी/बरामदी मुचुल्का कागज</u>:-**

जिल्ला मोरङ, पथरी शनिश्चरे नगरपालिका वडा नं. १० सिविरडाँडा स्थित पूर्वमा सागर राईको जग्गा, पश्चिममा पथरी शनिश्चरे आवत जावत गर्ने पक्की वाटो, उत्तरमा देउनाथ थक्लुङको घर, दक्षिणमा केशव जंग तामाङको घर, यति चार किल्ला भित्र काठको खम्बा, टिनको छानो भएको भुईं तलामा ३ वटा कोठा, टाँडमा ३ वटा कोठा गरी जम्मा ६ वटा कोठा भएको सागर राईको २ तले घर रहेको, सो घरमा मिति २०८०।०१।०८ गते खटिई आएको प्रहरी अधिकृत सहितको टोलीले रितपूर्वक खानतलासी गर्दा नेपाली नागरिकलाई अमेरिका पठाउने सम्बन्धी ठगी तथा संगठित अपराधमा प्रमाण लाग्ने कुनै कागजातहरु फेला नपरेको भन्ने व्यहोराको खानतलासी/बरामदी मुचुल्का कागज।

**ञ) <u>जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-७ मैजुबहाल स्थित खडा गरेको खानतलासी/बरामदी मुचुल्का कागज</u>:-**

जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.७ मैजुबहाल स्थित श्यामजंग सिंजापतिको घरमा भाडामा बस्ने **<u>बालकृष्ण खाँण</u>**को कोठा खानतलासी गर्दा कोठामा खैरो रंगको नोट बुक थान-१, कालो रंगको डायरी थान-३, I-Pad थान-२, सम्पति विवरन फारम पाना-३८, च्यातिएर ३ टुक्रा पारिएको कागज जोड्दा नरेन्द्र जी समेत भनी लेखिएको कागजको टुक्रा फेला परेको भन्ने समेतको मिति २०८०।०१।२८ गतेको खानतलासी/बरामदी मुचुल्का कागज।

**ट) <u>जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-२९ अनामनगर स्थित खडा गरिएको खानतलासी/बरामदी मुचुल्का कागज</u>:**

जिल्ला काठमाडौं, का.म.न.पा.वडा नं.-२९ अनामनगरमा रहेको प्रहरी वृत्त सिंहदरवारको हिरासत कक्षमा थुनामा रहेका प्रतिवादी टेक नारायण पाण्डे बस्ने गरेको टेक नारायण पाण्डेलाई राखिएको हिरासत कक्षमा निज सुत्ने गरेको सिरानी मुनी COUNCIL FOR TECHNICAL EDUCATIONAND VOCATIONAL TRAINING CTEVT शिपमूलक जनता समृद्धी नेपाल प्राविधिक शिक्षा तथा व्यवसायिक तालीम परिषद डायरी २०७९ लेखिएको डायरी थान-१ फेला परेको हुँदा बरामद गरिएको भन्ने व्यहोराको खानतलासी/बरामदी मुचुल्का कागज।

४. **प्रतिवादी टंक कुमार गुरूङको बयान:**

प्रतिवादी केशव प्रसाद दुलाल मेरो घरमा भाडामा बस्ने भएको कारण निजसँग चिनजान भएको हो, सानु भण्डारी मेरो छिमेकी भएको कारण चिनेको हुँ, सन्देश शर्मासँग मेरो रेष्टुरेन्टमा आउने भएको कारण चिनेको हुँ, निज वाहेक अन्य प्रतिवादीहरु सँग मेरो चिनजान छैन। मैले जाहेरवालाहरु गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीलाई चिनेको छैन, मैले निजहरूलाई अमेरिका पठाई दिने भनी कुराकानी गरेको छैन, जाहेरीमा उल्लेख भएको विषय बस्तुको सम्बन्धमा मलाई जानकारी भएन। जाहेरी दरखास्तमा नाम उल्लेख गरेका सन्तोष शर्मा, बिबेक थापा, प्रदिप अर्याल र धन बहादुर भण्डारी समेत ६१ जान व्यक्तिहरुसँग मेरो चिनजान र सम्पर्क छैन, निजहरु सँग मेरो सो विषयमा कुनै कुराकानी भएको छैन र मैले निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी रकम लिएको छैन। उक्त चेक के-कुन बिषयमा दिएका हुन, के लेनदेन हो मलाई कुनै जानकारी छैन, सो विषयमा निज सन्देश शर्मालाई नै थाहा होला। जाहेरवाला राम कुमार रेग्मी तथा जाहेरी दरखास्तमा नाम उल्लेख भएका श्रवण कुमार रेग्मी, कल्पना रेग्मी, उपेन्द्र बुढाथोकी, राजेश अर्याल लगायतका व्यक्तिहरुसँग मेरो चिनजान र सम्पर्क नभएको हुँदा सो विषयमा मलाई थाहा जानकारी छैन। मेरो निजहरु सँग चिनजान र सम्पर्क नभएको हुँदा सो सम्बन्धमा मलाई जानकारी भएन,मैले कोही कसैको कागज पत्र बनाई दिने भनी रकम लिएको छैन। निजहरुबाट मैले कुनै रकम लिएको छैन, सो सम्बन्धमा मलाई जानकारी भएन। जाहेरवाला गजेन्द्र बुढाथोकीले जाहेरी दरखास्त साथ पेश गरेको महेश कार्की समेतको नाममा जारी भएको शरणार्थी परिचय पत्रको प्रतिलिपीहरु, मुख्य सचिव शंकरदास वैरागीको दस्तखत भएको गृह मन्त्रालयबाट जारी भएको भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधानका उपायहरुको सबन्धमा भन्ने विषयको पत्रको प्रतिलिपी सम्बन्धमा मलाई जानकारी छैन, आधिकारीक भए नभएको सम्बन्धमा मलाई थाहा छैन। मैले निज जाहेरवालाहरुलाई चिनेको छैन, निजहरुसँग भेटघाट तथा कुराकानी समेत भएको छैन, निजहरुले के-कुन आधारमा मेरो उपर ठगीमा जाहेरी दिएका हुन मलाई जानकारी भएन भन्ने समेत व्यहोराको प्रतिवादी टंक कुमार गुरूङको वयान।

५. **प्रतिवादी सागर राईको बयान:**

मैले जाहेरवालाहरु रोशन खरेल र गोकुल भट्टराई तथा निजहरुको चिनजानका व्यक्तिहरुलाई अमेरिका पठाई दिने भनी कुराकानी गरेको छैन, जाहेरीमा उल्लेख भएको विषयवस्तुको सम्बन्धमा मलाई जानकारी भएन,सो विषयमा धैरै पहिले कान्तिपुर पत्रिका समाचार प्रकाशित भएको कारण सो समाचार मैले चलाउने गरेको मोवाईलबाट जाहेरवालाहरुको मोवाईलमा WhatsApp गरी पठाई दिएको मात्र हुँ, सो वाहेक अन्य कुरा मलाई जानकारी भएन मेरो जाहेरवाला रोशन खरेल र गोकुल भट्टराईसँग मात्र चिनजान छ, निजहरु वाहेक सुर्य कुमारी खड्का, चिरञ्जीवी खरेल, दामोदर लामिछाने, विकाश राई, रोशन पराजुली, चक्र बहादुर खत्री, जित बहादुर धिमालसँग मेरो चिनजान परिचय छैन, निजहरुसँग चिनजान परिचय समेत नभएको हुँदा मैले निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी प्रोसेसिङ्ग गर्नको लागी कोही कसै सँग कुनै रकम लिएको छैन, जाहेरीमा उल्लेख भएको उक्त कुरा निराधार हुन, यसमा कुनै सत्यता छैन। मेरो जाहेरवाला रोशन खरेल र गोकुल भट्टराईसँग मात्र चिनजान छ, निजहरु बाहेक अन्य व्यक्तिहरु सँग मेरो चिनजान छैन,जाहेरवाला गोकुल भट्टराई मेरो नजिकको साथी भएको हुँदा निजसँग मेरो पहिले देखी रकम सापटी लिने दिने हुने गरेको थियो, निजले जाहेरीमा उल्लेख गरेको रु.२,००,०००।-(दुई लाख) मैले निजबाट लिएको सही हो, तर उक्त रकम भुटानी शरणार्थी बनाई निजलाई अमेरिका पठाई दिने भनी लिएको रकम होईन, मेरो व्यक्तिगत घरायसी

कारोवार मात्र हो । यसै गरी जाहेरवाला रोशन खरेलको नाममा रहेको प्रभु बैकको खाता न.००१०३९००३०२८६०७००००४ को चेक मार्फत रु. २२,००,०००।-(वाईस लाख) मैले लिएको हुँ, उक्त रकम मैले जग्गा खरिद गर्नको लागी भनी केही महिनामा फिर्ता दिने भनी सापटी स्वरुप लिएको रकम हो, जाहेरीमा उल्लेख भएको विषयवस्तुको लागी लिएको रकम होईन। रोशन खरेलबाट मिति २०७६।०२।२७ गते प्रतिवादी अशोक पोखरेलको नाममा रहेको प्रभु बैंकको खाता नं.००१०३९००३०२८६०७००००४ मा रु.२०,००,०००।-( बिस लाख), ऐ.मिति रोशन खरेलको नामको प्रभु बैकको चेक मार्फत प्रतिवादी सानु भण्डारीलाई रु.२८,००,०००।-(अठ्ठाईस लाख),ऐ.मितिमा प्रतिवादी केशव प्रसाद दुलालको श्रीमती दिपा हुमागाञीको नाममा रु.२०,००,०००।-(विस लाख) दिएको भन्ने सम्बन्धमा मलाई जानकारी भएन । जाहेरवाला र अशोक पोखरेल, सानु भण्डारी र केशव प्रसाद दुलालको श्रीमती दिपा हुमागाञी विच के-कस्तो आर्थिक कारोवार भएको हो, के विषयको लेनदेन हो, मलाई जानकारी भएन, उक्त रकम मैले लिएको छैन। निज जाहेरवालाहरु सँग मेरो आर्थिक कारोवार भएको हो, निजहरुलाई मैले दिनु पर्ने सापटी वापतको रकम फिर्ता गर्नु पर्ने भएता पनि ठुलो रकम भएको र आर्थिक मन्दीको कारण समयमा रकम दिन नसकेको कारण निजहरुले मेरो समेत विरुद्धमा भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी रकम लिई ठगी गरेको भनी जाहेरी दिएको हुनु पर्दछ। निजहरुबाट लिएको रकम मैले दिनु पर्ने रकम हो, समय अनुकुल पारी म उक्त रकम फिर्ता गर्छु । निजहरुबाट मैले भुटानी शरणार्थी बनाई अमेरिका लैजान भनी कुनै रकम लिएको छैन, अन्य प्रतिवादीहरुले लिए नलिएको भन्ने सम्बन्धमा मलाई जानकारी भएन, सो सम्बन्धमा निजहरुले नै खुलाउने छन भन्ने समेत व्यहोराको प्रतिवादी सागर राईको वयान।

६. **प्रतिवादी सानु भण्डारीको बयानः**

मैले निज जाहेरवालाहरु गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीलाई चिनेको छैन, मैले निजहरुलाई अमेरिका पठाई दिने भनी कुराकानी समेत गरेको छैन, जाहेरीमा उल्लेख भएको विषयबस्तुको सम्बन्धमा मलाई जानकारी भएन। जाहेरी दरखास्तमा नाम उल्लेख गरेका सन्तोष शर्मा, बिबेक थापा, प्रदिप अर्याल, सन्देशजंग ठकुरी, संजिब गौतम, सन्देश गौतम, कुमार पोखरेल, अनिस बुढाथोकी र धन बहादुर भण्डारी समेत ६१ जान व्यक्तिहरु सँग मेरो चिनजान र सम्पर्क छैन, निजहरु सँग मेरो सो विषयमा कुनै कुराकानी भएको छैन र मैले निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी रकम लिएको छैन। जाहेरवाला राम कुमार रेग्मी तथा निजको चिनजान र सम्पर्कमा आएका निजका आफन्त र जाहेरी दरखास्तमा नाम उल्लेख भएका श्रवण कुमार रेग्मी, कल्पना रेग्मी, उपेन्द्र बुढाथोकी, राजेश अर्याल लगायतका व्यक्तिहरु सँग मेरो चिनजान र सम्पर्क नभएको हुँदा सो विषयमा मलाई थाहा भएन। जाहेरी दरखास्तमा नाम उल्लेख भएका बिराज पाण्डे, डम्बर खत्री, यज्ञ ओली, समिर लामिछाने, गौतम गिरी, सुजल के.सी., असिम ओली, चन्द्र बहादुर खड्का, पदमसिंह खत्री, महेन्द्र कुसारी, मान बहादुर खत्री, मनिस डि.सी.,मुमकान्त पाण्डे, मनोज के.सी.र अनुदान बस्नेतसँग मेरो चिनजान नभएको र मैले निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी कुराकानी नगरेको हुँदा सो सम्बन्धमा मलाई जानकारी भएन, मैले निजहरुलाई अमेरिका पठाई दिने भनी कुनै रकम लिएको छैन मेरो निजहरुसँग चिनजान र सम्पर्क नभएको हुँदा सो सम्बन्धमा मलाई जानकारी भएन। मैले कोही कसैको कागज पत्र बनाई दिने भनी रकम लिएको छैन। जाहेरवाला गजेन्द्र बुढाथोकी तथा हाल फरार रहेका प्रतिवादी सन्देश शर्मासँग मेरो चिनजान नभएको हुँदा यस सम्बन्धमा मलाई जानकारी भएन । मलाई समेत भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी म बाट डा.ईन्द्रजित राई समेतले रकम लिई काम समेत नगरी ठगी गरेको हुँदा म

आफै पीडित भएको छु, मैले जाहेरवालाहरुलाई नचिनेको र अमेरिका पठाई दिने भनी रकम लिएको खाएको छैन निजहरुले के-कुन आधारमा मेरो समेत विरुद्धमा किटानी जाहेरी दिएका हुन मलाई जानकारी भएन । जाहेरवाला गजेन्द्र बुढाथोकी र निजले जाहेरी दरखास्त नाम उल्लेख गरेका महेश कार्की समेतसँग मेरो चिनजान र सम्पर्क छैन, निजहरुको नाममा जारी भएको शरणार्थी परिचय पत्रको प्रतिलिपीहरु, मुख्य सचिब शंकरदास वैरागीको दस्तखत भएको गृह मन्त्रालयबाट जारी भएको भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधानका उपायहरुको सबन्धमा भन्ने विषयको पत्रको प्रतिलिपी को-कसले कहाँ बनाएका हुन, उक्त परिचय पत्र आधिकारीक हुन होईनन भन्ने सम्बन्धमा मलाई कुनै जानकारी भएन। जाहेरवाला गजेन्द्र बुढाथोकी तथा प्रहरी प्रतिवेदनमा नाम उल्लेख भएका लक्ष्मी महर्जन, हरिभक्त महर्जन समेत सँग मेरो चिनजान छैन, सो सम्बन्धमा मलाई कुनै जानकारी भएन, म सँग सरोकारको रकम होईन । मैले जाहेरवालाहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु भनी कुनै रकम लिएको छैन, जाहेरवाला रोशन खरेलसँग मेरो पहिले देखिनै आर्थिक करोवार हुने गरेको थियो, कहिले निजले म सँग सापटी लाने र कहिले निजसँग मैले सापटी चलाउने गरेको थिएँ, यसै क्रममा मलाई जग्गा खरिद गर्नको लागी रकम आवश्यक परेको कारण मैले निज रोशन खरेलसँग सापटी स्वरुप रु.२८,००,०००।-(अठ्ठाईस लाख) लिएको हो, उक्त रकम मैले चेकबाटै पटक-पटक गरी फिर्ता दिई सकेको छु, मैले फिर्ता दिएको भौचर हाल म सँग छैन, पछी अदालतमा पेश गर्ने छु, निजसँग मैले रु.२८,००,०००।-(अठ्ठाईस लाख) लिएको भएता पनि मैले निजलाई मिटर ब्याजको हिसाव गरी मैले हाल सम्म रु.७०,००,०००।-(सत्तरी लाख) दिई सकेको भएता पनि म हिरासतमा परेको भनी बिभिन्न पत्र-पत्रिकामा समाचार आएको कारण निजले म समेतको विरुद्धमा किटानी जाहेरी दिएको हुनु पर्छ । मैले जाहेरवाला सुमन दाहाललाई चिनेको छैन, निजबाट मैले कुनै रकम समेत लिएको छैन । निजको जाहेरी दरखास्तमा उल्लेखित विषयबस्तुको सम्बन्धमा मलाई जानकारी भएन । हाल म संगै पक्राउमापरी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल र प्रतिवादी सन्देश शर्मा विचमा लेनदेनको कारोवार भएको हुँदा म केशव दुलालसँग हिड्ने भएको कारण कुराकानीको क्रममा मेरो समेत नाम उल्लेख गरेको हुनु पर्छ । मैले जाहेरवालाले दावी गरे बमोजिमको ठगी सम्बन्धी कसूर नगरेको हुँदा मलाई सजाँय हुनु पर्ने होईन, मैले कसुरबाट सफाई पाउनु पर्छ । प्रस्तुत मुद्धाका जाहेरवाला गजेन्द्र बुढाथोकी,राम कुमार रेग्मी, रोशन खरेल, गोकुल भट्टराई र सुमन दाहालले म समेतको विरुद्धमा दिएको किटानी जाहेरीको सम्बन्धमा मैले माथिको स.ज.१ देखि स.ज.२६ सम्म सम्पुर्ण कुरा खुलाई लेखाई सकेको छु । यस भन्दा वाहेक प्रस्तुत ठगी मुद्दामा लेखाउन वाँकी छैनभन्ने समेत व्यहोराको प्रतिवादी सानु भण्डारीको वयान।

७. **प्रतिवादी केशव प्रसाद दुलालको बयान:**

जाहेरी दरखास्तमा उल्लेख भएका जाहेरवालाहरु गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीलाई मैले चिनेको छैन, निजहरूलाई अमेरिका पठाई दिने भनी कुराकानी समेत गरेको छैन, मैले कुनै उच्च अधिकारी र प्रधान मन्त्रीसँग कुरा गरेको छैन,मैले अमेरिका जान पाईन्छ भनी निजहरुलाई कुनै अफर(प्रस्ताव) गरी विश्वास दिलाएको समेत छैन,प्रतिवादी सन्देश शर्माको WhatsAppबाट पठाएको भनीएको श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धि समाचारको फोटो, कागज पत्रहरुको के-कुन प्रयोजनको लागी पठाएका हुन मलाई जानकारी भएन । निजहरुले जाहेरी दरखास्तमा उल्लेख गरे अनुसार मैले कोही कसैलाई ठगी गरेको छैन । जाहेरी दरखास्तमा जाहेरवाला गजेन्द्र बुढाथोकीको चिनजान र सम्पर्कमा रहेकासन्तोष शर्मा, बिबेक थापा, प्रदिप अर्याल, सन्देशजंग ठकुरी,

संजिब गौतम, सन्देश गौतम, दिपेन्द्र लामिछाने, दिपक के.सी र धन बहादुर भण्डारी समेत ६१ जना व्यक्तिहरुसँग मेरो चिनजान र सम्पर्क छैन, चिनजान नै नभएका व्यक्तिहरुलाई मैले काठमाण्डौको सुन्धारा भेट गर्ने भन्ने विषय हुनै सक्तैन, निजहरुले म माथी लगाएको आरोप निराधार र झुठ्ठा हो । निजहरुसँग मेरो सो विषयमा कुनै कुराकानी भएको छैन र मैले निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनीप्रोसेसिङ्ग गर्नको लागी प्रति व्यक्ति रु.५,००,०००।–(पाँच लाख)को दरले रकम लिएको छैन र मलाई उक्त प्रेसेसिङ सम्बन्धमा थाहा जानकारी छैन । जाहेरी दरखास्तमा जाहेरवालाले नाम उल्लेख गरेका बिराज पाण्डे, डम्बर खत्री, यज्ञ ओली, समिर लामिछाने, गौतम गिरी, सुजल के.सी.,असिमओली,चन्द्र बहादुर खड्का, पदमसिंह खत्री, महेन्द्र कुसारी, मान बहादुर खत्री, मनिस डि.सी.,मुमकान्त पाण्डे,मनोज के.सी.समेत २० जना व्यक्तिहरुसँग मेरो कुनै चिनजान छैन, निजहरुलाई भुटानी शरणार्थीको फारम भर्न लगाई बायोमेट्रिक गरी, फोटो खिची, ट्राभल डकुमेन्ट बनाउनु पर्छ भनेको छैन र सो कार्यको लागी रकम दिनु भनी रु.१०,००,०००।-(दस लाख) देखी रु.२०,००,०००।-(बिस लाख) सम्म रकम माग गरेको भन्ने सम्बन्धमा मलाई जानकारी भएन,मैले जाहेरीमा दावी लिएको कुनै रकम लिएको छैन, निजहरुको ट्राभल डकुमेन्ट बनी सकेको छ भनी मैले WhatsApp बाट नामावली कोही कसैलाई पठाएको छैन । जाहेरीमा लेखिएको व्यहोरा सम्बन्धमा मलाई थाहा भएन । जाहेरवालाले म उपर दावी लिएको विषय निराधार र झुठ्ठा हो । महेश कार्की समेतसँग मेरो चिनजान र सम्पर्क छैन, निजहरुको नाममा जारी भएको शरणार्थी परिचय पत्रको प्रतिलिपीहरु, मुख्य सचिब शंकरदास वैरागीको दस्तखत भएको गृह मन्त्रालयबाट जारी भएको भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधानका उपायहरुको सबन्धमा भन्ने विषयको पत्रको प्रतिलिपी को-कसले कहाँ बनाएका हुन, उक्त परिचय पत्र आधिकारीक हुन/होईनन भन्ने सम्बन्धमा मलाई कुनै जानकारी भएन । मैले आशिष बुढाथोकी र मोहन राई भन्ने व्यक्तिहरुको खातामा रकमजम्मा गर्न लगाएको छैन, गजेन्द्र बुढाथोकी र शन्देश शर्मा विच अडियोमा के कुराकानी भएकोहो मलाई केही थाहा छैन । सन्देश शर्माले आरजु देउवालाई दुई करोड बुझाएको हो, छ करोड रुपिया त्यो बाल कृष्ण खाँणलाई बुझाएको हो, उक्त रकम मञ्जु दिदीले लिनु भएको,हनुमान थान भित्र घर छ, त्यही बुझाएको हो भनी बोलेका कुरा सम्बन्धमा मलाई थाहा भएन । सन्देश शर्माले भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु भनी रु.१,००,००,०००।-(एक करोड) रकम लिएको हुँदा म लगायत मेरा आफन्त र साथीभाई समेत पीडित भएका छौं, सन्देश शर्मासँग मिली भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु भनी कसैलाई ठगी गरेको छैन र यो कार्यमा मेरो कुनै संलग्नता छैन । जाहेरवालाहरु रोशन खरेल तथा गोकुल भट्टराईले अशोक पोखरेलको प्रभु बैकको खातामा रु.२०,००,०००।-(बिस लाख), सानु भण्डारीलाई चेक मार्फत रु.२८,००,०००।-(अठ्ठाईस लाख) र सागर राईको नाममा रु.२२,००,०००।-(बाईस लाख) दिएको तथा जम्मागरेको भन्ने सम्बन्धमा मलाई जानकारी भएन । मेरो श्रीमती दिपा हुमागाञीको नाममा जम्मा भएको रकम रु.२०,००,०००।–(बिस लाख) मैले व्यक्तिगत ऋण लिएको हुँ, उक्त ऋण मैले निजको बैंक खातामा फिर्ता गरी सकेको छु, बैंक भौचर उपलब्ध गराउने छु, बैंक भौचर उपलब्ध नभए निजले दावी गरेको मितिबाट हाल सम्मको बैक स्टेटमेण्ट झिकाई पछी पेश गर्ने छु । जाहेरवाला रोशन खेरल मेरो गाउँको छिमेकी भाई हुन, तत्कालका समयमा मलाईऋण तिर्नका लागी रकम आवश्यक भएको हुँदा मैले निज सँग ऋण लिएको हुँ, सो ऋण मैले निजको बैंक खातामार्फत फिर्ता गरी सकेको छु, निजले फिर्ता गरी सकेको रकम किन दावी गरेका हुन, मलाई थाहा भएन । मलाई जिल्ला सरकारी वकील कार्यालय काठमाडौंमा कार्यालय प्रमुखको कार्यकक्षमा जिल्ला न्याधिवक्ता र अनुसन्धान अधिकृतले प्रारम्भिक सोधपुछको क्रममा जाहेरवाला जगेन्द्र बुढाथोकी

समेतले दिएको ठगी सम्बन्धी जाहेरी दरखास्तको व्यहोरा सम्बन्धमा सोधिएका कुराहरुको विषयमा मैले दिएको जवाफको रेकर्ड मलाई सुनाउँदा सुनी पाएँ, उक्त आवाज मैरै हो, आवाज सुनी सनाखत गरी दिएँ। सन्देश शर्माले म समेत मेरा आफन्त र साथीभाईहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजाने भनी रु.१,००,००,०००।-(एक करोड) लिएका बखत उल्लेखित व्यक्तिहरुको नाम लिई म अमेरिका पठाई दिन्छु भनेका थिए, म सन्देश शर्माबाट ठगिए पछी पटक-पटक रकम फिर्ता माग्दा ४ वर्ष विति सक्यो मलाई म आफु पीडित भई आर्थिक व्यवहारले मार्का परेको हुँदा प्रस्तुत मुद्दाका जाहेरवालाहरु गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरीले पक्राउ परी अनुसन्धानको क्रममा प्रारम्भिक सोधपुछको क्रममा तत्कालीन अबस्थामा सन्देश शर्माले भनेका कुराहरु सम्झी मेरो पिडा पोख्ने क्रममा भावावेशमा आई उक्त कुरा सोधपुछको क्रममा राखेको हुँ, उक्त रकम मैले कोही कसैलाई दिएको छैन, बिभिन्न मितिमा प्रकाशित समाचार सम्बन्धमा मलाई जनाकरी भएन, पत्रिका र बिभिन्न समाचारहरुमा आएका विषयहरु के-कसरी प्रकाशित भएका हुन मलाई थाहा भएन भन्ने समेत व्यहोराको प्रतिवादी केशव प्रसाद दुलालको बयान।

८. **प्रतिवादी सागर राईको थप बयान:**

निज जाहेरवालाहरु मध्ये कुमार खड्काबाट मैले जग्गाको कारोवार गर्न भनी निजबाट जम्मा रकम रु.११,००,०००।-(एघार लाख) लिएको हो, मैले सापटी लिएको उक्त रकम मैले नगदै निजलाई फिर्ता गरी सकेको छु,निज वाहेक प्रदिप फुयाँलसँग मैले कुनै रकम लिएको छैन, मिलन श्रेष्ठसँग मेरो चिनजान र सम्पर्क समेत नभएको हुँदा निजबाट कुनै रकम लिएको छैन, जाहेरी दरखास्तमा निजहरुले उल्लेख गरे अनुसार मैले निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी रकम माग नगरेको र सो विषयमा कुनै कुराकानी समेत नगरेको हुँदा जाहेरी दरखास्तमा भएको व्यहोरा झुठ्ठा हो । जाहेरी दरखास्तमा उल्लेखित आशिष बुढाथोकी र मोहन राईलाई मैले चिनेको छैन। मैले निजहरुको खातामा रकम जम्मा गर्नु भनी रकम जम्मा गर्न लगाएको छैन, जाहेरवाला रविन्द्र कार्कीले के-कसरी आशिष बुढाथोकी र मोहन राईको नाममा मैले रकम जम्मा गर्न लगाएको भनी खुलाएका हुन मलाई जानकारी भएन, निज रविन्द्र कार्की सँगबाट मैले सापटी स्वरुप जम्मा रकम रु.१,२१,०००।–(एक लाख एक्काईस हजार) लिएको हो। निज बाट लिएको उक्त रकम मैले नगदै निजलाई फिर्ता गरी सकें, निजलाई मैले कुनै रकम दिन बाँकी छैन। निजले जाहेरीमा के-कसरी मैले उक्त रकम लिएको भनी खुलाई लेखाएका हुन मलाई जानकारी भएन । मैले निज आशिष बुढाथोकी र मोहन राईलाई चिनेको छैन, मैले निजहरुको नाममा रकम जम्मा गर्न लगाएको छैन, मैले निजहरुलाई नचिनेको हुँदा निजहरुको यकिन नाम, थर, वतन मलाई जानकारी भएन । उक्त अडियोमा भएको आवाज सुनाउँदा सुनी पाएँ । उक्त आवाज मेरो आफ्नै हो, सो अडियोमा भएको कुराकानी मैले मेरो आफ्नो व्यक्तिगत प्रयोजनको लागी लिएको रकमको सम्बन्धमा कुराकानी गरेको हो, अमेरिका पठाईदिने भनी रकम लिई सो विषयमा कुराकानी गरेको होईन, आफ्नो व्यक्तिगत आर्थिक कारोवारको विषयमा मात्र कुरा गरेको हुँ। उक्त अडियोमा भएको आवाज सुनाउँदा सुनी पाएँ, उक्त आवाज मेरो आफ्नै हो,निज र मेरो विचमा भएको उक्त कुराकानी मैले जग्गा सम्बन्धी विषयमा गरेको कुराकानी हो, अमेरिका पठाई दिने भनी गरेको कुराकानी होईन। म आफु जिल्ला मोरङ पथरी शनिश्चरे नगरपालिका वडा न. १० को पुर्व वडा अध्यक्ष भएको र भुटानी शरणार्थीको शिविर समेत मैरै वडामा रहेको करण मैले सो विषयमा केही चासो लिएको हो,सो बाहेक मैले कोही कसैलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका लगीदिने भनी कोही कसैसँग कुराकानी समेत नगरेको, मेरो उच्च पदस्थ राजनैतिक व्यक्ति तथा कर्मचारीहरुसँग सम्पर्क समेत नभएको हुँदा पत्रिकामा प्रकाशित समाचार

झुठ्ठा हो, पत्रिकामा प्रकाशित समाचार जस्तो मैले कुनै कार्य गरेको छैन । मेरो आफ्नै वडामा शरणार्थी शिविर बसेको हुँदा सो सम्बन्धी समाचारहरु प्रकाशित भएको कारण मैले मेरो मोवाईलमा स्क्रिन सर्ट गरी राखेकोले सोही समाचारहरु प्रिन्ट गरी पेश गरेको हुनु पर्छ भन्ने समेत व्यहोराको प्रतिवादी सागर राईको थप वयान ।

९. **प्रतिवादी सन्देश शर्माको बयान:**

म काठमाण्डौमा बसी आफ्नो व्यावसाय गरी रहेको अबस्थामा जाहेरवाला राम कुमार रेग्मीले विगत ३ वर्ष अगाडी तिर मलाई बानेश्वरमा भेटी कुराकानी गर्ने क्रममा निजले मलाई भुटानी शरणार्थीको रुपमा अमेरिका जान पाईन्छ भन्ने सुनेको छु, यस बारे तपाईलाई के थाहा छ भनी मलाई भनेको र मैले यस सम्बन्धमा थाहा छैन, भनी जानकारी गराएको र पछि पुन निजसँग भेट भएको र सो समयमा समेत निजले भुटानी शरणार्थीको कुरा गरेको हुँदा मैले म यस विषयमा बुझ्छु भनी निजलाई जानकारी गराएको र के- कसो हो भनी मैले पहिले देखी चिनेका केशव प्रसाद दुलाललाई कुराकानी गर्दा निजले मैले राम कुमार रेग्मीलाई चिनेको छु, म निज सँग नै कुराकानी गर्छु भनी मलाई जानकारी गराएको र पछी निजहरु विचमा कुराकानी भई जाहेरवाला गजेन्द्र बुढाथोकी समेत अमेरिकाबाट नेपाल आई केशव प्रसाद दुलाल, राम कुमार रेग्मी र गजेन्द्र बुढाथोकी ३ जना बसी आपसमा अमेरिका जाने तथा लैजाने विषयमा कुराकानी गरी मलाई समेत बोलाएको हुँदा म आफु समेत निजहरुले बोलाएको ठाउँ जिल्ला ललितपुर जाउलाखेलमा गई निजहरुलाई भेटी कुराकानी गरेको र सो अबस्थामा प्रतिवादी केशव प्रसाद दुलालले भुटानी शरणार्थी सम्बन्धी सम्पुर्ण जानकारी गराएको र आवश्यक कागजपत्रहरु राम कुमार रेग्मी र गजेन्द्र बुढाथोकीलाई दिने सहमति गरी हामी सो ठाउँबाट छुट्टिएर हिडेका हौं । जाहेरवाला गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीले हामी सँग मानिस छन, निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजानु पर्‍यो भनी जानकारी गराएको र प्रतिवादी केशव प्रसाद दुलालले मैले माथिल्लो निकायका सम्पुर्ण मानिसहरु चिनेको छु, भुटानी शरणार्थीको कागज पत्र मिलाई नेपाली नागरिकहरुलाई अमेरिका पठाउन सकिन्छ भनी जानकारी गराएका र भुटानी शरणार्थी सम्बन्धी भए गरेका प्रतिबेदन तथा अन्य कागज पत्रहरु समेत निज केशव प्रसाद दुलालले उपलब्ध गराउने भन्ने कुरा भएको हो । जाहेरीमा नाम उल्लेख भएका ६१ जना व्यक्तिहरुलाई मैले चिनेको छैन, मैले निजहरुलाई नचिनेको हुँदा निजहरुको बायोमेट्रिक गरी फोटो खिची, ट्राभल डकुमेन्ट बनाउनु पर्छ सो कार्यको लागी रकम दिनु भनीमैले कोही व्यक्तिबाट रु.१०,००,०००।–(दश लाख) कोही व्यक्तिबाट रु.१५,००,०००।–(पन्ध्र लाख) को दरले नगदै रकम लिएको छैन, मेरो नामको चेकहरु जाहेरवाला गजेन्द्र बुढाथोकी समेत १५ जना जति व्यक्तिहरुले मलाई मिति २०७८।१०।१० गते ललितपुरको सातदोवाटोमा भेटी तँ दाङको मानिस होस हामीले केशव दुलाल र सानु भण्डारीको चेक लिदैनौं, तेरो नामको चेक हामीलाई ग्यारेन्टीको लागी दिनु पर्छ भनी जोर जवर्जस्ती गरी आफैले रकम र मिति भरी जवर्जस्ती चेकमा सहिछाप गर्न लगाई लिएर गएको हुँदा मैले चेक दुरुपयोग नहोस भनी सम्बन्धित बैंकमा गई निवेदन दिई खाता बन्द गराएको हो, निजहरुलाई मैले रकम दिनु पर्ने वापतको लागी उक्त चेक काटेको होईन । मेरो जाहेरवाला राम कुमार रेग्मीसँग मात्र चिनजान छ, जाहेरीमा नाम उल्लेख गरेका निजका अन्य आफन्तहरु सँग मेरो चिनजान र सम्पर्क छैन, मैले निज राम कुमार रेग्मी तथा निजका अन्य चिनजानका मानिसहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी कुनै रकम लिएको छैन, जाहेरीमा लेखिएको व्यहोरा झुठ्ठा हो । जाहेरी दरखास्तमा नाम उल्लेख भएका बिराज पाण्डे, डम्बर खत्री, यज्ञ ओली, समिर लामिछाने, गौतम गिरी, सुजल के.सी., असिम ओली, चन्द्र बहादुर खड्का, पदमसिंह खत्री, महेन्द्र कुसारी, मान बहादुर खत्री, मनिस डि.सी., मुमकान्त पाण्डे, मनोज के.सी.र अनुदान बस्नेतसँग मेरो चिनजान नभएको र मैले निजहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका

पठाई दिने भनी कुराकानी नगरेको हुँदा सो सम्बन्धमा मलाई जानकारी भएन, मैले निजहरुलाई अमेरिका पठाई दिने भनी कुनै रकम लिएको छैन, जाहेरवाला राम कुमार रेग्मीले जाहेरीमा के-कसरी सो कुरा उल्लेख गरेका हुन मलाई जानकारी भएन । मैले जाहेरवाला राम कुमार रेग्मी र निजको परिवार तथा साथीहरु समेत २० जना व्यक्तिहरुको भुटानी शरणार्थी फारम भर्न लगाई बायोमेट्रिक गरी, फोटो खिची, ट्राभल डकुमेन्ट बनाउनु पर्छ सो कार्यको लागी रकम दिनु भनी रु.१०,००,०००।–(दश लाख) देखी रु.२०,००,०००।–(बिस लाख) सम्म रकम माग गरेको छैन, निजबाट मैले कुनै रकम समेत लिएको छैन, जाहेरवाला राम कुमार रेग्मी तथा निजको सम्पर्कमा आएका व्यक्तिहरुको ट्राभल डकुमेन्ट लगायतका अन्य कागजातहरु केशव दुलालले मलाई पठाई दिने भएको हुँदा निजले पठाएको उक्त कागजातहरु मैले जाहेरवाला राम कुमार रेग्मीले चलाउने गरेको Whatsappमा पठाई दिएको हुँ। जाहेरी दरखास्तमा नाम उल्लेख भएका बिराज पाण्डे, डम्बर खत्री, यज्ञ ओली लगायतका व्यक्तिहरुसँग मैले जनही रु.१५,००,०००।–(पन्ध्र लाख) देखी रु.२०,००,०००।–(बिस लाख) सम्म गरी २० जना बाट जम्मा रकम रु.३,८५,००,०००।–(तिन करोड पचासी लाख) लिएको भन्ने राम कुमार रेग्मीको जाहेरी दरखास्तका सम्बन्धमा मलाई जानकारी भएन, उक्त रकम मैले लिएको छैन, अन्य व्यक्तिहरुले लिएको भए मलाई जानकारी भएन । जाहेरवालाहरु गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीले जाहेरी दरखास्तमा नाम उल्लेख गरेका व्यक्तिहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी आफैले जनही रु.५० देखी ६० को दरले रकम संकलन गरी उक्त रकम प्रतिवादी केशव प्रसाद दुलाललाई बुझाएको भन्ने मैले थाहा पाएको हुँ , पछी भने अनुसार काम नभएको हुँदा प्रतिवादी केशव प्रसाद दुलालबाट केही रकम फिर्ता समेत लिएको भन्ने कुरा मैले थाहा पाएको हुँ, निज जाहेरवाल तथा प्रतिवादी केशव प्रसाद दुलालले लिएको उक्त रकम फिर्ता नगरेको र भने अनुसार अमेरिका समेत नपठाई दिएको कारण पीडित मानिसहरुले निजहरुलाई अप्ठ्यारो पार्ने भएको हुँदा मेरो नाम लिई आफुले गरेको अपराधबाट बच्नको लागी जाहेरीमा सबै रकम मैले लिएको भनी खुलाई जाहेरी दिएको हुनु पर्छ, मैले जाहेरीमा उल्लेख गरे अनुसार कुनै कार्य गरेको छैन । जाहेरवाला गजेन्द्र बुढाथोकीले जाहेरी दरखास्त नाम उल्लेख गरेका महेश कार्की समेत सँग मेरो चिनजान र सम्पर्क छैन, निजहरुको नाममा जारी भएको शरणार्थी परिचय पत्रको प्रतिलिपीहरु, मुख्य सचिव शंकरदास वैरागीको दस्तखत भएको गृह मन्त्रालयबाट जारी भएको भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधानका उपायहरुको सबन्धमा भन्ने विषयको पत्रको प्रतिलिपी को-कसले कहाँ बनाएका हुन, उक्त परिचय पत्र आधिकारीक हुन/होईनन भन्ने सम्बन्धमा मलाई कुनै जानकारी भएन जाहेरवाला गजेन्द्र बुढाथोकी २४ जुन २०२१ मा लक्ष्मी महर्जनको खातामा रु.९,९९,०००।–(नौ लाख उनान्सय हजार) र १४ डिसेम्बर २०२१ मा रु.१०,००,०००।–(दश लाख) जम्मा गरेको देखिएको, उक्त रकमहरु सोही मितिमा हरि भक्त महर्जनको खातामा पठाएको र हरि भक्त महर्जनको खाताबाट मिति २४ अगष्ट २०२१ मा रु.८,५३,०००।–(आठ लाख त्रिपन्न हजार) र रु.३,००,०००।–(तिन लाख) फरक-फरक खातामा पठाएको भन्ने सम्बन्धमा मलाई कुनै जानकारी भएन, मैले कोही कसैसँग रकम माग नगरेको र रकम पठाउनु भनी कोही कसैको नाम र खाता न. समेत नदिएको हुँदा सो रकम सम्बन्धमा मलाई जानकारी भएन । जाहेरवाला गजेन्द्र बुढाथोकिले जाहेरी दरखास्त साथ पेश गरेको सि.डी.मा भएको वार्तालाप सुनाउँदा सुनी पाएँ, उक्त वार्तालाप म र जाहेरवाला गजेन्द्र बुढाथोकी विचमा भएको हो, निज जाहेरवाला गजेन्द्र बुढाथोकीले मैले निज लगायत निजका अन्य चिनजानका मानिसहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी रकम लिई ठगी गरेको भनी अपराध महाशाखामा जाहेरी दिई मेरो नाममा सम्मानित काठमाडौं जिल्ला अदालतबाट पक्राउ अनुमति समेत जारी भए पछी म सँग निज जाहेरवाला

गजेन्द्र बुढाथोकीको फोन सम्पर्क भएको र सो अबस्थामा निजले तपाईको नाममा पक्राउ अनुमति ल्याई सकेको छु भनी जानकारी गराएको हुँदा काम गर्ने व्यक्तिहरु केशव प्रसाद दुलाल र सानु भण्डारीको नाममा समेत पक्राउ पुर्जी ल्याउनु पर्ने किन मेरो नाममा मात्र ल्याउनु भएको हो भनी मैले सो अबस्थामा निजहरुको नाम उल्लेख गरेको सही हो । जाहेरवाला गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीले मलाई पहिले नै फोन सम्पर्क गरी हामीले पैसा लिएका मानिसहरुले हामीलाई समस्यामा पारी सके निजहरु आएको समयमा हामी तपाईलाई फोन गर्छौं सो समयमा तपाईले हामीले भनेको मानिसलाई रकम बुझाएका छौ भनी जानकारी गराई दिनु भयो भने हामी बाच्छौ भनी पहिले नै निजहरुको नाम लिई पैसा दिएको हो भनी भन्नु भनेको हुँदा निजहरुले भने अनुसार आरजु देउवा तथा बाल कृष्ण खाँण र मञ्जु खाँणको समेत नाम लिई मैले रकम बुझाएको हो भनी कुरा गरेको हो, उक्त कुरा वास्तबिक होईन, जाहेरवालाहरुले भन्नु भने अनुसार मात्र भनेको हुँ, मैले निजहरुलाई चिनेको छैन, चिन्दै नचिनेको व्यक्तिहरुलाई यति धैरै रकम नगदै बिना काम दिने कुरै भएन । मिति २०७९।१२।२४ गतेको कान्तिपुर पत्रिकामा म लगायत टोप बहादुर रायामाझी समेतका व्यक्तिहरु हेलीकेप्टर चढी गोसाई कुण्ड समेत गएको भनी मेरो समेतको फोटो राखी समाचार प्रकाशित भएको पत्रिका देखाउँदा देखि पाएँ, म समेत गोसाई कुण्ड गएको हो, सो समयमा सिम्रिक एअरको गोसाई कुण्ड घुम्नको लागी प्याकेज चलेको हुँदा संयोगबस एउटै हेलीकेप्टरमा गएका हौं, पुर्व चिनजान भई भुटानी शरणार्थी बनाई नेपालीहरुलाई अमेरिका लैजाने प्रसङगको लागी गएको होईन जाहेरवाला गजेन्द्र बुढाथोकीले भुटानी शरणार्थी भई अमेरिका जाने मानिसहरु संकलन गर्ने, रकम उठाउने काम गर्ने गरेका र प्रतिवादी केशव प्रसाद दुलालले गजेन्द्र बुढाथोकीले संकलन गरेका मानिसहरुको नाम माथिल्लो निकायमा पुऱ्याउने, सो सम्बन्धी कागजातहरु तयार पार्न लगाउने जस्ता कार्य गर्ने भएकोले निज प्रतिवादी केशव दुलालको जाहेरवालासँग सम्पर्क नहुँदाको अबस्थामा निजले केही कागजातहरु मेरोमा पठाएकोले मैले निजले पठाई दिएको उक्त कागजातहरु जाहेरवाला गजेन्द्र बुढाथोकीको Whats app मा पठाई दिएको मात्र हुँ, सो वाहेक अन्य कुरा मलाई जानकारी भएन । निज प्रतिवादी केशव प्रसाद दुलाल, जाहेरवाला गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीले हामीबाट आएका मानिसहरु अमेरिका गए पछी वा काम सम्पन्न भई सके पछी प्रति व्यक्ति केही रकम दिने भन्ने कुरा गरेको हुँदा सोही रकमको लोभमा परी उक्त कागज पत्रहरु सामाजिक संजाल मार्फत आदान प्रदान गरेको हुँ । प्रति व्यक्ति यति नै दिने लिने भन्ने विषयमा कुराकानी भएको थिएन, काम भई सके पछी केही रकम दिने भन्ने कुरा भएको हो । उक्त नामावली जाहेरवाला गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीले मेरोमा पठाएका हुन निजहरुले पठाएको उक्त नामावली मैले प्रतिवादी केशव प्रसाद दुलालकोमा पठाएको हुँ । जाहेरवाला गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीले निज व्यक्तिहरु मेरोमा आउँछन, मेरोमा आई सके पछी हामी तपाईलाई फोन गर्छौं, तपाईले निजहरुको काम हुँदैछ भनी जानकारी गराई दिनु भनी मलाई भनेकोले मैले सोही कुरा फोनबाट जानकारी गराएको र उक्त नामावली प्रतिवादी केशव प्रसाद दुलाललाई पठाई दिएको हुँ । जाहेरवाला गजेन्द्र बुढाथोकीले मलाई फोन सम्पर्क गरी मलाई केशव प्रसाद दुलालले फाईनल लिष्ट भनी आकाश कार्की समेत ११६ जना व्यक्तिहरुको नामवली पठाएको छ, उक्त नामावली एक पटक तपाईले हेर्नु, हो/ होईन भनी मलाई जाहेरवाला गजेन्द्र बुढाथोकीले पठाई दिएको हो । प्रतिवादी केशव प्रसाद दुलाल र सानु भण्डारीले मलाई भन्दा माथीको आदेश अनुसार हुन्छ भनी भन्ने गरेका थिए, प्रहरी प्रतिबेदन साथ पेश भएको मिसिल संलग्न कल रेकर्डको चार्टमा देखिएका यम फगानी ९८५११७६३९२ र मिलन गौतमको ९८५२०३००४५ मेरो चिनजानका मानिस भएको कारण कुराकानी भएको हो, निजहरुको यस ठगी मुद्धामा कुनै संलग्न छैन । प्रहरी प्रतिबेदन साथ पेश भएको म र जाहेरवाला गजेन्द्र बुढाथोकी विच भएको अडियो रेकर्डमा

जाहेरवाला गजेन्द्र बुढाथोकीले मलाई केशव प्रसाद दुलालले मेरो १२८५ खाई दियो भनेको हुँदा मैले १२८५ दिई हाल्छन नि भनी कुरा गरेको हुँ, उक्त पैसा के वापतको हो भन्ने मलाई थाहा भएन। प्रतिवादी केशव प्रसाद दुलाल र जाहेरवाला गजेन्द्र बुढाथोकीको विचमा राम्रो सम्बन्ध रहेको, निजहरु विचमा आर्थिक कारोवार समेत हुने गरेको कारण निज प्रतिवादी केशव प्रसाद दुलालले आफुले गरेको अपराधबाट उन्मुक्ति पाउन निजले आफ्नो बयानमा मेरो नाम लिएको हुनु पर्दछ। प्रतिवादी सानु भण्डारी, केशव प्रसाद दुलाल, सागर राई समेतले जाहेरवालाहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी रकम लिएको भन्ने सम्म सुनेको हुँ, के-कति रकम को सँग लिएका हुन मलाई जानकारी भएन भनी प्रतिवादी सन्देश शर्माको बयान।

१०. **प्रतिवादी सागर राईको थप बयान:**

मोहन राई भन्ने ब्यक्तिसँग मेरो चिनजान छैन, जाहेरवाला रविन्द्र कार्कीसँग मेरो जग्गाको कारोवार गर्ने क्रममा लेन देन व्यवहार रहेको हुँदा मैले मोहन राज राईको नाममा रु.८,८०,०००।–(आठ लाख असी हजार) जम्मा गर्न लगाएको हुँ। मैले निज मोहन राज राईलाई बैंकमा भेटी मानवीय सहयोग गरी दिनु भनी निजको बैंक खाता मागी निजको खातामा रकम जम्मा गर्न लगाएको हुँ, निजको खातामा जम्मा भएको रकम निजले निकाली ल्याई मलाई नगदै दिएको हुँदा मैले लिएको हुँ। उक्त रकम भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी लिएको रकम होईन, जग्गा सम्बन्धीको रकम हो। यस मुद्दामा निज मोहनराज राईको कुनै संलग्नता छैन। सो अवस्थामा मेरो नामको बैंक खाता बन्द भएको कारण मेरो आफ्नो व्यवहार चलाउनको लागी निज व्यक्तिलाई बैंकमा भेटेको हुँदा मैले मानवीय सहयोग गरी दिनु भनी निजको बैंक खाता प्रयोग गरेको हुँ, अन्य कुनै अपराधबाट उन्मुक्ति लिने मनासय लिई उक्त कार्य गरेको होईन।उक्त चेक मैले दिएको सही हो, सो चेकमा भएको रकम मैले जग्गा सम्बन्धी व्यवहार मिलाउनको लागी दिएको चेक हो, अन्य कारोवारको रकमको लागी दिएको होईन। निज रविन्द्र कार्कीबाट आएको रकम मैले प्रतिवादी केशव प्रसाद दुलाल लाई सापटी स्वरुप दिएको छु, निजले हाल सम्म फिर्ता गरेका छैनन्।म आफु सम्बन्धित वडाको वडाध्यक्ष भएको कारण पत्र पत्रिकामा छापिएका समाचारहरु मैले निजहरुलाई सेयर गरी दिएको हुँ, मैले बनावटी नक्कली समाचारहरु पठाएको होईन। नक्कली समाचार पठाएको पाईएमा सजाँय भोग्न तयार छु। जाहेरीमा उल्लेख भए अनुसार भुटानी शरणार्थी सम्बन्धमा लेनदेन भएको होईन, उक्त रकम मैले अन्य प्रयोजनकोलागी लिई प्रतिवादी केशव प्रसाद दुलाललाई घरायसी समस्या भएको कारण म आफु विश्वासिलो पात्र भएको र केशव प्रसाद दुलालसँग निजको चिनजान नभएको कारण दिलिप गौतमलाई विश्वास दिलाउनको लागी ग्यारेन्टी स्वरुप मैले उक्त रकमको चेक दिएको हुँ। भुटानी शरणार्थी सम्बन्धीको विषयमा उक्त रकम लेनदेन गरेको होईन भन्ने समेत व्यहोराको प्रतिवादी सागर राईको थप वयान।

११. **प्रतिवादी सन्देश शर्माको थप बयान:**

डिल बहादुर कुसारी तथा निजको छोरा महेन्द्र कुसारी, राजेश अर्याल,डम्बर बहादुर खत्री, पदम सिंह खत्री,शोभाराम राना क्षेत्री र निजको ज्वाई यज्ञ बहादुर वली, सन्दिप ओली र असिम वली,सुस्मा चन्द र निजको श्रीमान लोक बहादुर डि.सी., मन बहादुर खत्री समेतलाई मैले चिनेको छैन, निजहरुबाट मैले कुनै रकम लिएको छैन, के कसरी मैले रकम लिएको हो भनी जाहेरी दरखास्तमा खुलाई मेरो विरुद्धमा जाहेरी दिएका हुन मलाई जानकारी भएन।राम कुमार रेग्मीको श्रीमती सुनिता गौतमले निवेदन साथ पेश गरेको पेन ड्राईभमा भएको कुराकानी मलाई सुनाउँदा सुनी पाएँ, उक्त आवाज मेरो र जाहेरवाला राम कुमार रेग्मीको हो। उक्त कुराहरु निज राम कुमार रेग्मीले पहिले नै मलाई भन्नु भनी फोनमा भने अनुसार मैले निजसँग उक्त कुराकानी गरेको हुँ। निज

राम कुमार रेग्मीले दाङ लगायत बिभिन्न जिल्लाका व्यक्तिहरुबाट भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी प्रति व्यक्ति ५० लाख देखी ६० लाख सम्म रकम उठाएको भन्ने जानकारी आए पछी जग्गा बिक्री गरेर भए पनि निजहरुको पैसा फिर्ता दिनुहोस भनी कुराकानी गरेको हो, केशव प्रसाद दुलालले दिएको कुनै कागजातहरु छन भने उक्त कागजातहरु समेत फिर्ता दिनु भनी मैले निज रामकुमार रेग्मीसँग कुरा गरेको सही हो । निज जाहेरवाला राम कुमार रेग्मीलाई यो काम इलिगल रैछ, तपाईले नगरेको भए हुने रैछ भनी भनेको हुँ । तपाईले भुटानी शरणार्थी बनाई अमेरिका लैजान्छु भनी पैसा लिएका व्यक्तिहरु मेरो सम्पर्कमा आएकोले तपाईले कि पैसा फिर्ता दिनु या आफु बसेको ठाउँ नभन्नु भनी भनेको हुँ, बाँकी कुरा जाहेरवाला राम कुमार रेग्मीले पहिले नै फोन गरी यी कुराहरु भनी दिनु भनी मलाई भनेकोले मैले भनेको हुँ । जाहेरवालाहरुले पेश गरेका कागजात र अडियोहरु आफु अनुकुल हुने गरी मात्र प्रहरीकोमा पेश गरेको जस्तो देखिएको छ, सो सम्बन्धमा समेत अनुसन्धान गरी पाउँ भन्ने व्यहोरा उल्लेख गरी प्रतिवादी सन्देश शर्माको थप बयान ।

१२. **प्रतिवादी सानु भण्डारीको थप बयान:**

मैले २०७६।०३।०२ गते तिर निरज राई र डा. इन्द्रजित राईलाई सँगै उक्त होटलमा भेटी नगद रु.१,५०,००,०००।-(एक करोड पचास लाख) दिएको हुं । सो रकम मैले ईन्द्रजित राईलाई दिने बेलामा निजको चालक खटिएका हाल एकिन नाम याद नभएको प्रहरी पनि सँगै थिए निजलाई पनि पैसा दिएको कुरा थाहा छ ।मलाई यकिन मिति थाहा भएन २०७६ सालको श्रावण महिनाको १४/१५ गते तिर मैले उक्त रकम ईन्द्रजित राईलाई बुझाएको हुँ । त्यति वेला ईन्द्रजित राईले हाल बसोवास गरिरहेकोललितपुर जिल्ला गोदावरी नगरपालिका वडा नं.-१२ ठेचोको घर किन्न लागेका थिए । हाल बसोबास गरेको घरको तत्कालिन घरधनिलाई ईन्द्रजित राईले दिनु भनेर ईन्द्रजितराईको तर्फबाट नगदै रु.१,००,००,०००/-(एक करोड) दिएको हुँ । रकम मैले मिति २०७६ सालको श्रावण महिनाको २५ गते मन्त्री क्वाटर पुल्चोकमा गई नैनाकला थापालाई नगदै रु.१,००,००,०००।-(एक करोड) बुझाएको हुँ । सो बेलामा ईन्द्रजित राईका चालक खटिएका प्रहरीका व्यक्ति पनि साथै थिए ।उक्त रकम मैले मिति २०७६ सालको भाद्र महिनाको १० गते दिएको हुँ । मलाई डा.ईन्द्रजित राईले यो गाडी सचिव ज्यूको हो, उक्त रकम गाडीमा राखी दिनु भनी मलाई भनेको हुँदा मैले साथमा लिई गएको नगद रकम रु.१,००,००,०००।–(एक करोड) गाडीमा राख्न लगाई मलाई सचिव प्रेम कुमार राईको कार्य कक्षमा बोलाएको हुँदा म निजको कार्य कक्षमा गएको र अब तपाईहरुको काम हुन्छ तपाई जानु भनी प्रेम कुमार राईले मलाई भनेकोले म निजलाई भेटी निजको विश्वासमा परी सो ठाउँबाट फर्किएको हुँ । उक्त रकम मैले मिति २०७६।०३।२८ गते निजको घर जिल्ला ललितपुर सातदोबाटोमा रहेको सेल्सवेरी सुपर मार्केट पछाडी रहेको निजकै घरमा गई उक्त नगद रु.१,६०,००,०००।–(एक करोड साठी लाख) दिएको र अन्य वाँकी रकम रु.४०,००,०००।–(चालिस लाख) निजको छोरा सन्दिप रायामाझीलाई चेकबाट भुक्तानी पाउने गरी चेक काटी दिएको हुँ, कुन बैकको चेक भन्ने मलाई यकिन भएन चेकको फोटो कपी पछी घरबाट झिकाई पेश गर्ने छु । निज डा.ईन्द्रजित राईले म र राम शरण के.सी.लाई जिल्ला काठमाण्डौ धापासीमा रहेको राम शरण के.सी.को आमाको नाममा रहेको घर र जग्गा तथा मेरो नाममा रहेको काठमाडौं जिल्ला फुकुलाछीमा रहेको ८ आना जग्गा समेत बैना गरी पछी काम भई सके पछी तिमीले पैसा नदिएको अवस्थामा म अदालतमा गई यही घर जग्गा दाबी लिने भनी कागज गराएका हुन, उक्त कागजको प्रतिलिपी म सँग सुरक्षीत छ, म पछी पेश गर्ने छु । निज दिलिप गौतमलाई मैले चिनेको छैन, निजबाट मैले कुनै रकम लिएको छैन । मैले गजेन्द्र बुढाथोकीलाई चिनेको छैन, निजले पेश गरेको उक्त कागज तथा परिचय पत्रहरु निजले के-कहाँबाट ल्याएका हुन मलाई

जानकारी भएन । निज रोशन खरेलसँग मैले सापटी स्वरुप उक्त रकम लिएको हो, मैले निजलाई उक्त रकमको मिटर व्याजको हिसावले रु.२८,००,०००।–(अट्ठाईस लाख) को सट्टा रु.७२,००,०००।–(बहत्तर लाख) दिई सकेको छु । मैले दिएको रु.७२,००,०००।–(बहत्तर लाख) मध्ये रु.४२,००,०००।–(बयालिस लाख) निजको बैंक खातामा नै जम्मा गरी दिएको छु । जाहेरवाला खगेन्द्र थेवेसँग चिनजान नभएको हुँदा सो सम्बन्धमा मलाई जानकारी भएन । निज भेषराज शर्मा लम्सालसँग मैले जग्गा सम्बन्धी कारोवार गर्न भनी रकम माग गरेकोले निजले जाहेरी दरखास्तमा उल्लेख गरे अनुसार बैंकिङ प्रणालीबाट देखिन आएको रकम मैले काठमाण्डौको फुकुलाछीमा रहेको राम शरण दुलालको नाममा रहेको २ रोपनी ७ आना जमिन प्लानिङ गर्नको लागी निजबाट लिएको हुँ, निजबाट उक्त रकम लिएको भएता पनि जग्गाको कारोवार नभएको हुँदा निजले रिसिईवि साँध्नको लागी पत्र-पत्रिकामा समाचार प्रकाशित भए पछी मैले भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी रकम लिई ठगी गरेको भनी मेरो समेत विरुद्धमा किटानी जाहेरी दिएका हुन । निजले जाहेरीमा उल्लेख गरेको नगद रकम मैले निजबाट लिएको छैन, मैले बैंकिङ प्रणालीबाट लिएको रकम मध्ये रु.३०,००,०००।-(तिस लाख) निजलाई घरायसी कागज गरी फिर्ता गरी सकेको छु, वाँकी रहेको रकम पछी दिनेछु । निजले जाहेरी साथ पेश गरेको भनीएको चेकहरुबाट मैले रकम लिएको छैन, म मार्फत दिवाकर बुढाथोकी समेत रु.१,८९,४७,०००।–(एक करोड उनान्नब्बे लाख सढचालिस हजार) लिएको भन्ने सम्बन्धमा मलाई कुनै जानकारी छैन । मलाई उक्त डायरी देखाउँदा देखि पाएँ, सो डायरी मेरो घरमा मैले राखेको अवस्थामा प्रहरीले बरामद गरी ल्याएको हो, उक्त डायरी मेरो हिसाव किताब भएको डायरी हो, हेरी सनाखत गरी दिएँ । वरामदी डायरीको पाना 29 सुक्रबार १५ माघ २०७२ साल लेखिएको पानामा सन्दिप रायामाझी भाईलाई दिएको रकम विवरण शिर्षकमा २०७४।१।४ गते देखी २०७४।१२।३० सम्म पटक-पटक गरी २० पटकमा रु.६९,६५,५००।–(उनान्सत्तरी लाख पैंसठ्ठी हजार पाँच सय) दिएको भनी लेखिएको रकम लिने सन्दिप रायामाझी भन्ने व्यक्ति पुर्व उप-प्रधानमन्त्री तथा उर्जा मन्त्री टोप बहादुर रायामाझीका आफ्नै छोरा हुन, निजको बुबाले मलाई र मेरो परिवारलाई समेत भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु, त्यसको लागी रकम दिनु पर्छ भनी मलाई भनेको हुँदा सोही रकम मैले निजलाई उक्त मितिमा दिई मेरो आफ्नो डायरीमा पछी सम्झना र प्रमाण पुग्छ भनी रकम दिएको विवरण उक्त डायरीमा लेखेको हुँ, मैले रकम दिएको भएता पनि निज टोप बहादुर रायामाझीले मलाई अमेरिका नपठाई दिएको र म बाट लिएको रकम समेत पटक-पटक माग गर्दा फिर्ता नगरी ठगी गरेका हुन । उक्त वरामदी डायरीको 3February बुधबार २०,माघ २०७२ साल लेखिएको पानामा टोप बहादुर मामालाई दिएको विबरण शिर्षकमा २०७३/१२/१० देखी २०७४।०२।१० सम्म ३ पटक गरी रु.५,४५,०००।–(पाँच लाख पैंतालिस हजार) दिएको भनी लेखिएको विवरण ठिक हो, मैले डायरीमा टोप बहादुर मामा भनी लेखेको व्यक्ति पुर्व उप-प्रधानमन्त्री तथा उर्जा मन्त्री टोप बहादुर रायामाझी नै हुन, मैले उक्त रकम माथीको जवाफमा खुलाए अनुसार भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भन्ने प्रयोजनको लागी निजलाई दिएको रकम हो । उक्त डायरीको 17 April आईतबार ५ बैशाख २०७३ लेखिएको पानामा भएको हिसाव कितावको विवरण भुटानी शरणार्थी सम्बन्धिको हिसाव किताव होईन मेरो आफ्नो घर जग्गाको कारोवारको हिसाव किताव हो । उक्त बरामदी डायरीको 21 April बिहिबार, ९ वैशाख २०७३ साल लेखिएको पानामा निरज सरलाई नगद दिएको भन्ने शिर्षकमा २०७६।३।२ गते नगद रु.५०,००,०००।–(पचास लाख), मिति २०७६।०३।२३ गते निरज राई सरलाई दिएको रु.३५,००,०००।–(पैंतिस लाख), मिति २०७६।०३।२६ गते निरज राई सरलाई फेरी नगद र डा.ईन्द्रजित राई सरलाई दिएको रु.६५,००,०००।–(पैंसठ्ठी लाख) भनी लेखिएको रकम लेखेको हिसाव किताव सही हो,उक्त

रकम निज डा.ईन्द्रजित राईले मलाई र मेरो परिवारलाई समेत भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु, त्यसको लागी रकम दिनु पर्छ भनी मलाई भनेको हुँदा मैले मेरो ललितपुर महालक्ष्मी नगरपालिका वडा नं.-४ मा रहेको घर ICFC फाईनान्समा राखी रकम निकाली सोही रकम मैले निजलाई उक्त मितिमा दिई मेरो आफ्नो डायरीमा पछी सम्झना र प्रमाण पुग्छ भनी रकम दिएको विवरण उक्त डायरीमा लेखेको हुँ। मैले रकम दिएको भए तापनि निजले मलाई भने अनुसार अमेरिका नपठाएको र म बाट लगेको रकम पटक-पटक माग गर्दा समेत निजले मलाई रकम फिर्ता नगरी प्रेम कुमार राईको नाम लिई मलाई धाकधम्की समेत दिने गरेका हुन। मैले निजलाई डायरीमा लेखिए अनुसारको रकम दिएको सही हो। मैले नाम उल्लेख गरेका पुर्व उप-प्रधानमन्त्री तथा उर्जा मन्त्री टोप बहादुर रायामाझी र निजको छोरा सन्दिप रायामाझीको घर जिल्ला अर्घाखाँची, अर्घा गा.वि.स.वडा नं.-२ हो, हाल सन्धिखर्क नगरपालिकामा पर्दछ, निजहरु हाल जिल्ला ललितपुर सातदोबाटोमा रहेको घरमा बस्ने गरेका छन। अर्का डा.ईन्द्रजित राई र निजको छोरा निरज राईको घर जिल्ला भोजपुर साविक वसीङ थर्पु गा.बि.स.वडा नं.-१ मा हो भन्ने सुनेको हुँ, हाल निज जिल्ला काठमाण्डौ त्रिपुरेश्वरमा रहेको अपार्टमेण्टमा बस्ने गरेका छन। बरामदी डायरीको पाना 14-4 मा भुटानी शरणार्थीको रकमबाट खर्च भएको विवरण शिर्षकमा मैले मिति २०७६/३/१९ गते सन्दिप भाईलाई दिएको रु.३,००,०००/-(तिन लाख), मिति २०७६/३/२० गते टोप मामालाई नगद दिएको रु.५,००,०००/-(पाँच लाख), मिति २०७६/३/२८ गते टोप मामालाई दिएको रु.३,००,०००/-(तिन लाख) टिपोट रहेकोमा टोप मामा भन्ने व्यक्ति टोप बहादुर रायमाझी हुन र सन्दिप भाई भन्ने व्यक्ति निज टोप बहादुर रायमाझीको छोरा सन्दिप रायमाझी हुन, अन्य मानिसहरु मेरो साथी भाई आफन्तहरु हुन। निजहरुसँग व्यवहारीक सर-सापट लेनदेन हो।बरामदी डायरीमा मैयाको हिसाब, डि.बी.मामा, सुर्य दाई, डम्बर राई, खरेल भाई, शिबजी सर, आमत बुबा भन्ने नामहरु मेरो साथीभाई तथा आफन्तहरु हुन्। निजहरुसँग मेरो व्यवहारीक लेनदेन सर-सापटको हिसाब हो।निज नैनकला थापा पुर्व गृहमन्त्री राम बहादुर थापाको श्रीमती हुन, तत्काल निज मन्त्री क्वाटर पुल्चोकमा बस्ने गरेकी थिईन। निजको पुरानो वतन मलाई जानकारी भएन, निजको सम्बन्धमा सम्बन्धित निकायलाई जानकारी होला।भुटानी शरणार्थी सम्बन्धी बिभिन्न समाचारहरु बिभिन्न पत्र-पत्रिकाले निकालेको हुँदा सोही समाचारहरु मैले MukeshKafle ९८५१०४१२७८, Keshab mama2 9801142999,Ashok mama 9802051470 समेतलाई सेयर गरी समाचारको जानकारी लिउन भन्ने मनासय लिई पठाई दिएको हुँ, अन्य कुनै प्रयोजनको लागी पठाएको होईन, निजहरु सबै मेरै आफन्तहरु हुन। उक्त मोवाईल नं.टिका चौधरीको हो, निजसँग मेरो जग्गाको कारोवार रहेको र जग्गाको कारोवार पहिलेको जस्तो नभएको हुँदा केही लेनदेन कारोवारको विषयमा निजले मलाई सो कुरा लेखेको हो, यो मुद्धासँग सम्बन्धित विषयवस्तु होईन। उक्त कुराकानी म र गृह मन्त्रालय अन्तर्गत झापाको जिल्ला प्रशासन कार्यालयमा कार्यरत ना.सु.सुरेन्द्र कुमार दाहाल विचमा भएको कुराकानी हो, निजलाई प्रेम कुमार राईले म सँग चिनजान सम्पर्क गराई दिएका हुन, केही समस्या परेमा म सहयोग गर्छु भन्ने कुराकानी गरेका हुन, यस मुद्दामा निजको अन्य संलग्नता छैन, मेरो मोवाईलमा रहेको Top Mama-Phone 9857027815 भएको स्क्रिन सर्टमा देखिएको सो मोवाईल नं.टोप बहादुर रायमाझीको हो। Audio मा टोप मामा भनी कुरा गरेका व्यक्ति निज टोप बहादुर रायमाझी नै हुन।मैले पहिले दिएको वयानको स.ज.२७ मा उल्लेख गरे अनुसारको रकम म र अन्य ८५ जना व्यक्तिहरुबाट लिई दिएको भनी सोही वयानको स.ज.४४ मा खुलाएको भएतापनि उक्त रकम मैले मेरो घर, जग्गा, गाडी विक्री गरी वाँकी रकम ICFC फाइनान्सबाट ऋण लिई निजहरुलाई बुझाएको हुँ, मैले सो अबस्थामा बयान दिदा भुल बस ८५ जना व्यक्तिहरुबाट लिई दिएको भनी

लेखाएको भएतापनि उक्त रकम मैले मेरो घर जग्गा र गाडी विक्री गरी तथा ऋण समेत लिई दिएको रकम हो भनी प्रतिवादी सानु भण्डारीको थप बयान।

१३. **प्रतिवादी केशव प्रसाद दुलालको थप बयानः**

प्रतिवादी सानु भण्डारीले डा.ईन्द्रजित राईसँग त्रिपुरेश्वरमा रहेको आगन होटल भेट गरी उक्त रकम दिएको भनी मलाई भोली पल्ट जानकारी गराउनु भएको र सोही दिन डा.ईन्द्रजित राई, म र सानु भण्डारी ३ जना भएको अबस्थामा डा.ईन्द्रजित राईले उक्त रकम मैले लिएको भनी मलाई समेत जानकारी गराएका हुन। उक्त रकम दिएको भनी प्रतिवादी सानु भण्डारीले मलाई समेत जानकारी गराएका हुन, रकम दिएको भोली पल्ट गृह मन्त्रालयमा रहेको डा.ईन्द्रजित राईको कार्य कक्षमा म र सानु भण्डारी गएको अबस्थामाउक्त रकम मैले लिएको भनी जानकारी गराएका हुन। प्रतिवादी सानु भण्डारीले निज नैनकला थापालाई समेत रकम दिएको भनी मलाई जानकारी गराएका हुन, जानकारी पाए पछी सानु भण्डारी र म निज नैनाकला थापाका छोरा तत्कालिन गृहमन्त्री राम बहादुर थापा बादलका प्रमुख स्वकिय सचिव प्रतिक थापा मगरलाई नक्साल स्थित निलगिरी थकाली भान्साघरको आँगनको उत्तर तर्फ होटलको १ तला माथी प्रतिक थापालाई भेटेपछी निज नैनकला थापालाई प्रतिक थापा मगरले आमालाई फोन गरी पैसा पाउनु भयो/भएन भनी सोध्दा पैसा पाएको कुरा प्रतिक थापालाई भने पछी मेरो आमाले सानु भण्डारीसँग उक्त रकम लिएको भनी जानकारी गराएका हुन। प्रतिवादी सानु भण्डारीले उक्त रकम दिई सकेको भनी मलाई जानकारी गराएका र हामी दुबै जनाले गृह मन्त्रालयमा रहेको निजकै कार्य कक्षमा गई कुरा हुँदा सानु भण्डारीसँग उक्त रकम बुझी सकेको भनी मलाई समेत जानकारी गराएका हुन प्रतिवादी सानु भण्डारीले तत्कालिन गृह सचिव प्रेम कुमार राईलाई उक्त रकम दिएको भनी मलाई जानकारी गराए पछी सानु भण्डारीसँग गृह मन्त्रालय गई डा.ईन्द्रजित राईसँग सचिव प्रेम कुमार राईले उक्त रकम पाएको कुरा जानकारी गराएका हुन। प्रतिवादी सानु भण्डारीले तत्कालिन नेपाल सरकारका उर्जा मन्त्री टोप बहादुर रायामाझी र निजको छोरा सन्दिप रायामाझी समेतलाई पटक-पटक नगद र बैंक खातामा समेत पठाई दिएको भनी मलाई सानु भण्डारीले जानकारी गराएको र पछी टोप बहादुर रायामाझीको सातदोबाटोमा रहेको घरमा सानु भण्डारी र म समेत गई वहाहरु सँग रकम पाए/नपाएको सम्बन्धमा बुझ्दा हामीले रकम पाई सकेका छौं भनी जानकारी गराएका हुन। प्रतिवादी सानु भण्डारीले डा.ईन्द्रजित राईलाई काम भए पछी दिनु पर्ने रकमका लागी घर जग्गा बैना गरेको झुठ्ठा कागज बनाएर राखेका छन भनी जानकारी गराएको हुँदा मैले समेत थाहा पाएको हुँ। जाहेरी दरखास्तमा जाहेरवालाले दावी गरेको कुरा झुठ्ठा हो, मेरो जाहेरवाला तथा निजका चिनजान र सम्पर्कमा रहेका अन्य व्यक्तिहरुसँग समेत मेरो चिनजान नभएको हुँदा निजहरु बाट मैले कुनै रकम लिएको छैन। जाहेरवाला गजेन्द्र बुढाथोकीसँग मेरो चिनजान छैन, निजसँग चिनजान नभएको हुँदा निजले जाहेरी दरखास्त साथ पेश गरेको भनीएको बिभिन्न व्यक्तिहरुको नाममा जारी भएको भुटानी शरणार्थी परिचय पत्रहरु निजले के-कहाँ बनाई के-कसरी पेश गरेका हुन मलाई जानकारी भएन, उक्त कार्यमा मेरो कुनै संलग्नता छैन। जाहेरी दरखास्तमा जाहेरवाला खगेन्द्र थेवेले दावी गरेको कुरा झुठ्ठा हो, मेरो जाहेरवाला तथा निजका चिनजान र सम्पर्कमा रहेका अन्य व्यक्तिहरुसँग समेत मेरो चिनजान नभएको हुदा निजहरुबाट मैले कुनै रकम लिएको छैन ।जाहेरी दरखास्तमा जाहेरवाला खगेन्द्र थेवेले दावी गरेको कुरा झुठ्ठा हो,जाहेरवाला तथा निजको श्रीमती र बैनीसँग मेरो चिनजान छैन, चिनजान नै नभएका मानिसहरुको नाम परिवर्तन गरी अर्कै नामबाट परिचय पत्र बनाई दिएको भन्ने कुरामा कुनै सत्यता छैन, उक्त कार्यमा मेरो संलग्नता छैन। जाहेरी दरखास्तमा जाहेरवाला भुवन सिंह लिम्बुले दावी गरेको कुरा झुठ्ठा हो, निज र निजको चिनजान र सम्पर्कमा रहेका आफन्तहरुसँग समेत

मेरो कुनै चिनजान छैन, चिनजान नै नभएको मानिससँग रकम लिई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी मैले समेत रु.१०,००,०००।–(दश लाख) लिएको छैन र सो कुरामा कुनै सत्यता छैन। जाहेरी दरखास्तमा जाहेरवाला भुवन सिंह लिम्बुले दावी गरेको कुरा झुठ्ठा हो, भुवन सिंह लिम्बु, निजको भाईचेत बहादुर लिम्बु र पबिन लिम्बुसँग मेरो कुनै चिनजान छैन, निजहरुलाई नाम परिवर्तन गरी भुटानी शरणार्थीको परिचय पत्र बनाई दिएको भन्ने व्यहोरा झुठ्ठा हो। जाहेरी दरखास्तमा जाहेरवाला डिल बहादुर कुसारीले दावी गरेको कुरा झुठ्ठा हो, निज र निजको छोरा महेन्द्र कुसारीसँग मेरो चिनजान र सम्पर्क छैन, निजहरुलाई मैले भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी कुनै कुराकानी समेत नगरेको र निजले दावी गरेको रु.२०,००,०००।–(बिस लाख) रकम मैले लिएको छैन । मेरो जाहेरवाला तथा निजले जाहेरीमा नाम उल्लेख गरेका राजेश अर्यालसँग समेत चिनजान नभएको हुँदा मैले निजबाट कुनै रकम लिएको छैन र निज राजेश अर्यालको खातामा रकम पठाउन समेत लगाएको छैन, जाहेरीमा उल्लेख भएको विषय झुठ्ठा हो, सो बारेमा मलाई कुनै जानकारी छैन । जाहेरी दरखास्तमा जाहेरवालाले गरेको दावी झुठ्ठा हो, जाहेरवाला डम्बर बहादुर खत्रीसँग मेरो कुनै चिनजान छैन, भुटानी शरणार्थी बनाई अमेरिका लैजाने भनी जाहेरवालाले दावी गरेको रकम रु.१५,५०,०००।–(पन्ध्र लाख पचास हजार) मैले लिएको छैन । जाहेरवाला सन्दिप वली र निजको दाई असिम वलीसँग मेरो कुनै चिनजान छैन, निज असिम वलीलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजाने भनी २०७७ साल देखी २०७८ सालको पौष सम्म पटक-पटक गरी रु.२०,००,०००।–(बिस लाख) लिएको छैन ।जाहेरवाला सुस्मा चन्द र निजको श्रीमान लोक बहादुर डि.सी.सँग मेरो कुनै चिनजान छैन, निज लोक बहादुर डि.सी.लाई भुटानी शरणार्थी बनाई अमेरिका लैजाने भनी २०७७ साल देखी २०७८ सालको पौष सम्म पटक-पटक गरी रु.२०,००,०००।–(बिस लाख) लिएको छैन।जाहेरवाला मन बहादुर खत्रीसँग मेरो कुनै चिनजान छैन, निजलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजाने भनी २०७७ साल देखी २०७८ सालको पौष सम्म पटक-पटक गरी रु.२५,००,०००।–(पच्चिस लाख) लिएको छैन । जाहेरवाला भेषराज शर्मा लम्साल,जाहेरीमा नाम उल्लेख भएका दिवाकर बुढाथोकी र पुर्ण बहादुर पुनसँग समेत मेरो चिनजान र सम्पर्क छैन, जाहेरवालाले जाहेरीमा दावी गरे अनुसार NMB बैकको चेक मार्फत दिवाकर बुढाथोकीको नाममा चेक काटी रु.१०,००,०००।–(दश लाख), सानु भण्डारीलाई रु.१,७९,४७,०००।–(एक करोड उनासी लाख सतचालिस हजार) रनिज जाहेरवालाको साथी पुर्ण बहादुर पुन मार्फत रु.१,५०,००,०००।–(एक करोड पचास लाख) गरी जम्मा रकम रु.३,३९,४७,०००।–(तिन करोड उनान्चालिस लाख सतचालिस हजार) मैले लिएको छैन, सानु भण्डारीले लिएको भन्ने सम्बन्धमा मलाई जानकारी भएन । जाहेरवाला रोशन शिवाकोटीसँग मेरो चिनजान र सम्पर्क छैन,निजलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी पटक-पटक गरी जम्मा रकम रु.१५,००,०००।–(पन्ध्र लाख) बैंक मार्फत तथा नगदै लिई भने अनुसार काम नगरी ठगी गरेको भन्ने व्यहोरा झुठ्ठा हो, मैले कुनै रकम लिएको छैन, यस सम्बन्धमा मलाई कुनै जानकारी भएन । जाहेरवाला समिर शिवाकोटीसँग मेरो चिनजान र सम्पर्क छैन,निजलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी पटक-पटक गरी जम्मा रकम रु.१५,००,०००।–(पन्ध्र लाख) बैंक मार्फत तथा नगदै लिई भने अनुसार काम नगरी ठगी गरेको भन्ने व्यहोरा झुठ्ठा हो, मैले कुनै रकम लिएको छैन, यस सम्बन्धमा मलाई कुनै जानकारी भएन । जाहेरवाला सन्तोष भट्टराईसँग मेरो चिनजान र सम्पर्क छैन,निजलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी पटक-पटक गरी जम्मा रकम रु.१४,५०,०००।–(चौध लाख पचास हजार) बैंक मार्फत तथा नगदै लिई भने अनुसार काम नगरी ठगी गरेको भन्ने व्यहोरा झुठ्ठा हो, मैले कुनै रकम लिएको छैन, यस सम्बन्धमा मलाई कुनै जानकारी भएन । जाहेरवाला सन्तोष भट्टराई र राम

शरण के.सी.सँग मेरो कुनै चिनजान छैन, चिनजान नै नभएको व्यक्तिलाई अर्कै चिनजान नभएको व्यक्तिको बैंक खातामा रकम पठाउन लगाएको भन्ने कुरामा कुनै सत्यता छैन, चिनजान नै नभएका व्यक्तिबाट रकम लिएको भन्ने सम्बन्धको व्यहोरा झुठ्ठा हो,मैले मिति २०७६।०४।२१ मा रु.४,५०,०००।–(चार लाख पचास हजार) र पुन:मिति २०७६।०५।२० गते रु.१०,००,०००।–(दश लाख) गरी जम्मा रकम रु.१४,५०,०००।–(चौध लाख पचास हजार) रकम जम्मा गर्न लगाई उक्त रकम मैले लिई ठगी गरेको छैन। मिति २०८०।०१।०६ गते प्रहरीले प्रतिवादी सानु भण्डारीको घर कोठा खानतलासी गर्दा निजको घरको तेश्रो तलामा रहेको दराज भित्रबाट २०१६ NABIL BANK लेखिएको हरियोमा रातो रङ मिसिएको डायरी बरामद गरी ल्याएको हुँदा उक्त डायरी मलाई देखाउदा देखी पाएँ , सो डायरीको 17 April आईतबार ५ बैशाख २०७३ लेखिएको पानामा भुटानी शरणार्थीको लागी उठाईएको रकम बिबरण भनी मिति २०७६०२-२९ गते देखी २०७६-०३-२७ सम्म मेरो नाम दुलाल मामा भनी उल्लेख गरी मैले बुझाएको रकमको विवरण देखिपाएँ, उक्त मेरो नामबाट जम्मा भएको रकम मेरो आफैसँग भएको रकम हो। उक्त रकम डा.ईन्द्रजित राईले मलाई र मेरो आफन्तहरु समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु त्यसको लागी केही रकम दिंदै गर्नु भनेको हुँदा निज ईन्द्रजित राईलाई बुझाउनको लागी भनी उक्त रकम मैले प्रतिवादी सानु भण्डारीलाई दिएको हुँदा मैले दिएको रकमको विवरण निजले आफ्नो डायरीमा उल्लेख गरेका रहेछन। उक्त रकम निज सानु भण्डारीले माथी वयानमा उल्लेख भए अनुसारको ठाउँ र मितिमा डा.ईन्द्रजित राईलाई बुझाएका हुन। उक्त रकम मैले सानु भण्डारीलाई दिएकोमा मेरो घरायसी काम काजको लागी सापटी स्वरुप लिएको हुँ, रकम पछी फिर्ता गरी सकें, प्रतिवादी सानु भण्डारीले मलाई दुलाल मामा भनी सम्बोधन गर्ने भएको हुँदा डायरीमा दुलाल मामा भनी लेखेका रहेछन। म आफु र मेरो अन्य आफन्तहरु समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी डा.ईन्द्रजित राई समेतले कुराकानी गरी रकम समेत लिई विश्वास दिलाएको र सोही विषयका समाचारहरु पत्र पत्रिकामा प्रकाशित भएको हुँदा सोही समाचारहरुमा प्रकाशित भएका विवरणहरु मैले मेरो मोवाईलमा फोटो खिची राखेको हुँदा उक्त बिबरण मेरो मोवाईलमा देखिएको हुनु पर्दछ। मैले प्रयोग गर्ने गरेको KAI संकेत दिईएको सामसुङ कम्पनीको मोवाईलमा रहेको Viber AccountKeshab+9863591446 बाट 9860052100 लाई Sir Refusee Card holder komatralagatliyekoxare CA, new entcry&nonenterykolagat liyeko xana re sabaiko garne hoena r hajur, sir Bikranta Basnet name garekomanxe la hajurko name liyera Bhutanese Refuseeko 70,80 Janako card and travel Document banauxuvanerahidirahekoxarehajur भन्ने व्यहोराको म्यासेज मैले आफैले लेखेको म्यासेज हो, उक्त म्यासेजहरु मैले तत्कालीन गृह मन्त्रालयमा गृह सचिवको रुपमा बहाल रहेका टेक नारायण पाण्डेलाई पठाएको म्यासेज हो, निजले म र मेरा आफन्तलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी रु.१,२४,५०,०००।–(एक करोड चौबिस लाख पचास हजार) रकम लिई विश्वास दिलाए पछी हामीलाई भुटानी शरणार्थी परिचय पत्र उपलब्ध नगराएको अबस्थामा माथी म्यासेजमा उल्लेखित मैले नचिनेको बिक्रान्त बस्नेतले भुटानी शरणार्थी परिचय पत्र र ट्राभल डकुमेण्ट बनाएको सूचना पाएको हुँदा सो कुरा हो/होईन भनी गृह सचिवलाई हाम्रो काम किन भएन भनी बुझ्नका लागी उक्त म्यासेज पठाएको हुँ। मैले म्यासेज पठाएको 9860052100 नं को मोवाईल तत्कालीन गृह सचिव टेक नारायण पाण्डेले नै चलाउने गरेको मोवाईल नं. हो। उक्त मोवाईल नम्बर निजले नै मलाई दिई यो नम्बरमा सम्पर्क गर्नु भनी निजले नै दिएको हुँदा उक्त मोवाईलमा मैले सम्पर्क गरी म्यासेज लगायत फोन सम्पर्क गर्ने गरेको थिएँ। निजले म र मेरा आफन्तलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी विश्वास दिलाए पछी मैले

निजलाई उक्त रकम दिएको हुँ, रकम दिंदा के-कहाँ ल्याई दिनु पर्‍यो भनी निजलाई सोध्दा निजले गृह मन्त्रालयमा नै ल्याई दिनु भनेको हुँदा मैले पटक-पटक गरी निज कार्यरत रहेको कार्यालयमा रहेको गोप्य कोठामा लगी उक्त रकम नगदै बुझाएको हुँ । उक्त रकम मध्येको रु.२५,००,०००।–(पच्चिस लाख) निजको पि.एस.ओ.को रुपमा कार्यरत कामती थरका प्रहरीले सिंहदरवार भित्र रहेको कानून मन्त्रालय अगाडी सचिव ज्यू चढ्ने गाडी ल्याई नगदै बुझी लिएका हुन । मैले उक्त रकम निजलाई बुझाई सकें पछी मैले सचिव टेक नारायण पाण्डेलाई फोन गरी रकम पाउनु भयो/भएन भनी बुझ्दा निजले मैले रकम पाई सकें भनी मलाई जाकारी गराएका हुन । मैले प्रयोग गर्ने गरेको मोवाईलमा भएको Whatsapp बाट Bpanthi (9851015795),Yam2(9851332392) लाई जिल्ला प्रशासन कार्यालय शरणार्थी समन्वय ईकाई झापाको सूचना पठाएको देखिएको सही हो, उक्त सूचनाहरु पत्र-पत्रिकामा प्रकाशित भएको र तत्कालिन गृह सचिव टेक नारायण पाण्डेसँग बुझ्दा निजले Bpanthi (9851015795), Yam2(9851332392) र accThulungZytha (9827379611) लाई समेत पठाई दिनु भनी निजले नै नं. पठाई दिएको हुँदा मैले निजले पठाई दिएको Whatsapp नं.मा मैले नचिनेका मानिसहरुलाई उक्त सूचना पठाउदिन भन्दा निजले केही फरक पर्दैन पठाई दिनु भनेको हुँदा मैले उक्त सूचनाहरु पठाई दिएक हुँ । तत्कालिन गृह सचिव टेक नारायण पाण्डेले म र मेरा आफन्त साथीहरुसँग भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु भनी माथी उल्लेखित रकम लिई काम गरी दिन्छु भनी सरकारले गरेका निर्णयका कागजपत्रहरु पठाई दिने गरेको हुँदा उक्त कागज पत्रहरु आदान प्रदान भएको हो । हामी ठगीएको थाहा पाई दिएको रकम फिर्ता माग्दा हाल सम्म फिर्ता पाएको छैन, आफै पीडित भई हाल झुठ्टा मुद्दा लगाई अनुसन्धानमा रहेको छु, हामी पीडितको रकम फिर्ता र झुठ्ठा मुद्दा खारेज गरी सफाई पाउँ । मैले माथी नाम उल्लेख गरेको भुटानी शरणार्थी बनाई रकम लिने भनीएका Whatsapp Account मा पटक-पटक कुराकानी गर्ने गरेका TN PANDAY29860052100 को मोवाईल चलाउने व्यक्ति टेक नारायण पाण्डे नै हुन, निजको व्यक्तिगत मोवाईल नं. र सरकारी मोवाईल नं.समेत मलाई याद भएन, निजले चलाउने गरेको निजको व्यक्तिगत तथा सरकारी मोवाईल नं.मा समेत मेरो पटक-पटक कुराकानी, टेक्स्ट म्यासेज र Whatsapp मा मैले तत्कालीन अबस्थामा चलाउने गरेको हाल हराएको मोवाईल न.९८५११३२९९९ र ९८०११४२९९९ समेतबाट कुराकानी र म्यासेज आदान-प्रदान गर्ने गरेको थिएँ । उक्त म्यासेज र कुराकानी समेतको विवरण हेरी पाउँ, निजको यकिन वतन जिल्ला अर्घाखाँची साविक भगवती गा.वि.स.हाल छत्रदेव गाउँपालिका वडा नं.७ मा पर्दछ, निजको बुबाको नाम भगवती प्रसाद पाण्डे, आमा नमकला पाण्डे भन्ने सुनेको हुँ, निज हाल अं.५२/५३ वर्षका भएका होलान, हाल निज नेपाल सरकारको उप-राष्ट्रपतीको कार्यालयमा सचिव पदमा कार्यरत रहेका छन ।TN PANDAY2 को सम्बन्धमा मैले माथीको जवाफमा खुलाई सकेको छु । उक्त म्यासेज म लगायत मेरा आफन्तहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी रकम लिई ठगी गरी काम नगरेको हुँदा भुटानी शरणार्थी क्याम्पमा शरणार्थीको विवरण लिई फोटो खिच्ने काम भई राखेको सूचना पाए पछी मेरो र आफन्तको काम नभएको सिन्धुपाल्चोक तिरका मैले नचिनेका मानिसहरुको फोटो खिच्ने कामभई रहेको छ भनी निज गृह सचिव TN PANDAY2 भन्ने टेक नारायण पाण्डेलाई म्यासेज लेखी म सँग लगेको सम्पुर्ण रकम फिर्ता गरी दिनुहोस भन्दा हाल सम्म फिर्ता नपाई पीडित भएको कुरा अवगत गराउँछु । तत्कालीन गृहमन्त्री राम बहादुर थापा वादलले तपाई र तपाईको आफन्त लाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु भनी निजका छोरा प्रतिक थापा मार्फत मन्त्री क्वाटर पुलचोकमा बोलाई निज राम बहादुर थापा बादल राष्ट्रिय सभागृहको चुनाव हुनु भन्दा अगाडी रु.३,००,००,०००।-(तिन करोड) नगदै बुझी लिएको, प्रतिक

थापाले नक्साल निलगिरी थकाली भन्सा घरको आँगनको उत्तर तर्फ रहेको होटलको माथिल्लो तलामा बोलाई मिति २०७६ साल असारमा रु.१,००,००,०००।-(एक करोड) बुझी लिएको, त्यसै गरी तत्कालीन गृह सचिव प्रेम कुमार राईले डा.ईन्द्रजित राई मार्फत गृह मन्त्रालयको सचिवको कार्य कक्षमा बोलाई मिति २०७६ साल श्रावण महिनामा रु.३,००,००,०००।-(तिन करोड) नगदै बुझी लिएको, तत्कालिन प्रधानमन्त्री के.पी.वलीका प्रमुख स्वकिय सचिव राजेश वज्राचार्यले प्रधानमन्त्री क्वाटर बालुवाटारमा उर्जा मन्त्री टोप बहादुर रायामाझीका प्रमुख स्वकिय सचिव लिला जि.सी.मार्फत मलाई बोलाई मिति २०७६ साल असोजमा रु.१,००,००,०००।-(एक करोड) नगदै बुझी लिएको, तत्कालिन उर्जा मन्त्री टोप बहादुर रायमाझी प्रमुख स्वकिय सचिव लिला जि.सी.ले प्रधानमन्त्रीकोमा पैसा पुगी सक्यो, सामाजिक समितीबाट भुटानी शरणार्थीको बिषय निर्णय गर्नु पर्ने रहेछ, उर्जा मन्त्री ज्यू र मलाई पनि रकम चाहियो भनी उर्जा मन्त्रीको क्वाटर पुल्चोकमा बोलाई सामाजिक समितीबाट निर्णय भएको अघिल्लो दिन बेलुका रु.१,००,००,०००।-(एक करोड) नगदै बुझी लिएका हुन, त्यसै गरी तत्कालीन प्रधानमन्त्री के.पी.शर्मा वलीका पुर्व सल्लाहकार डा.अजय क्रान्ती शाक्य (तत्कालीन ईजरायलका नेपाली राजदुत अन्जना शाक्यका श्रीमान) र तत्कालीन काठमाडौं महानगरपालिकाका मेयर विध्या सुन्दर शक्यका निजी सचिव राजेश्वर स्थापितले सामाजिक समितीबाट भुटानी शरणार्थीको विषयलाई निर्णय गर्न माथी रकमको अपुग भयो भनी तत्कालीन गृहमन्त्री राम बहादुर थापा बादल बस्ने पुल्चोकमा रहेको मन्त्री क्वाटरमा गृहमन्त्री राम बहादुर थापा बादल र उर्जा मन्त्री टोप बहादुर रायामाझीसँग मिटिङ गराई सके पछी तपाईहरुको काम हुने भयो भनी डा.अजय क्रान्ती शाक्य र राजेश्वर स्थापितले जनही रु.१,००,००,०००।-(एक करोड) बुझी लिएका हुन। काम नभए पछी पटक-पटक रकम फिर्ता माग्दा धाक धम्की दिई हामी पावरमा छौं,तिमीहरुको केही लाग्दैन हामीलाई फोन सम्पर्क गर्ने, भेट्ने काम नगर्नु भनी प्रतिक थापा मार्फत खवर पठाउने गरेको र तपाईहरुले दिएको सम्पूर्ण रकमको ४० प्रतिशत हामी राख्छौं ६० प्रतिशत लानु भनी प्रतिक थापा मार्फत नाम्लो रेष्टुरेन्ट पुल्चोकमा तत्कालीन गृहमन्त्री बाट हटेको ५/६ दिन पछी म सँग भेट गरी प्रस्ताव गर्दा मैले र साथीहरुसँग ऋण खोजेर दिएको रकम हो, सम्पुर्ण रकम चाहियो भन्दा माथी उल्लेखित मानिसहरुसँग कुरा गरी खवर गर्छु भनी हाल सम्म रकम फिर्ता नदिई पीडित बनाई ठगी गरेको र हाल झुठ्ठा मुद्दा लगाई थुनामा राखेको हुँदा सम्पुर्ण रकम फिर्ता गरी झुठ्ठा मुद्दाबाट सफाई पाउँ भन्नी प्रतिवादी केशव प्रसाद दुलालको थप बयान।

**१४. <u>प्रतिवादी डा. ईन्द्रजित राईको बयान</u>:**

प्रतिवादी सानु भण्डारी कार्यालयमा १/२ दफा आउनु भाको थियो र वहासँग १ पटक एउटा व्यक्ति केशव दुलाल पनि आउनु भाको थियो। निजहरुको विषय भुटानी शरणार्थी सम्बन्धमा म सँग १ दुई दफा टेलिफोन द्वारा मलाई सोध्नु हुन्थ्यो। मैले वहाँहरुलाई यस विषयमा मेरो केही जानकारी छैन भनेर जवाफ दिएको थिएँ। सानु भण्डारी वाहेक अरु कसैलाई म चिन्दिन। म गृह मन्त्रालयमा कार्यरत हुँदा दिनमा थुप्रो मान्छेहरु सँग बिभिन्न विषयहरुमा कार्यालय सम्बन्धी कुराकानी हुन्थ्यो, त्यसमा निजले भुटानी शरणार्थीको वारेमा के हुँदै छ भनी जानकारी लिन खोज्नु भएको थियो, मैले केही थाहा नभएको र यस विषयमा मैले केही सूचना नदिएको हो। तत्पश्चात निज सानु भण्डारीसँग मेरो फोनमा तथा सामाजिक संजालमा कुराकानी भएको हुन सक्छ, कति पटक कुरा भयो भन्ने मलाई याद भएन तर भुटानी शरणार्थीको विषयमा केही कुराकानी भएको छैन। केशव प्रसाद दुलालसँग मेरो कुराकानी भएको छ/छैन मलाई याद भएन। म तत्कालिन गृहमन्त्री राम बहादुर थापा गृहमन्त्री भएको ३ महिना पछी लगभग २०७६ असार देखी कार्यरत रहेको र उक्त सरकार वाहाल रहुन्जेल सम्म

कार्यरत रहेको हुँ । सो अबस्थामा म विशिष्ट श्रेणीमा सुरक्षा सल्लाहकारको रुपमा कार्यरत रहेको हुदा सोही अनुसारको सेवा सुविधा समेत राज्यबाट पाएको थिएँ । मेरो ३ वर्ष ६ महिनाको कार्यकालमा बिभिन्न समयमा भिन्न-भिन्न चालक, पि.ए. र कार्यालय सहयोगी एवम पि.एस.ओ.हरु मेरोमा कार्यरत रहे,निजहरुको सबैको नाम मलाई याद भएन । धेरै समय काम गरेका व्यक्तिहरु मध्ये पि.एस.ओ.मा मगर थरका स.ई.थिए, ड्राईभरमा सहायक हवल्दार डोलराज पाण्डे थिए, पि.ए.मा रोमा पाण्डे हुन, अन्यको नाम थाहा भएन । सम्पुर्ण आरोप सबै सत प्रतिसत असत्य हो, निजले भनेको आरोप सिद्ध प्रमाणित भएमा सजाँयको भागिदार हुने छु । यो समिती म कार्यरत रहेकै समयमा गठन भएको हो तर समिती गठन भएको १ दिन पछी मैले यो समितीको बारेमा जानकारी प्राप्त गरें, सो समयमा म सल्लाहकारको रुपमा कार्यरत भएकोले मेरो हस्ताक्षर मन्त्रालयको कुनै पनि पत्रमा आधिकारीक नहुने कारणले मलाई यो जानकारी पछी प्राप्त भयो । सबै मनगढन्ते कुरा हो, थापाथलीको आँगन होटलमा मेरो र सानु भण्डारीसँग कहिलै पनि भेट भएको छैन, मेरो जानकारी अनुसार कुनै पनि व्यक्ति शरणार्थीको विषयलाई लिएर प्रेम राईको कार्य कक्षमा कहिल्यै पनि नगएको हुँदा उक्त आरोप प्रेम राई तथा अन्य प्रतिष्ठित व्यक्तिहरुको नाम मुछेर उनिहरुलाई व्यर्थमा वदनाम गर्ने कु लक्षित प्रयास हो । उक्त घर मेरो श्रीमती भुवन देवी राईको नाममा मेघा बैंक त्रिपुरेश्वरबाट ऋण लिई खरिद गरेको हो, उक्त घर सुमिता के.सी.बाट विगत २ वर्ष अगाडी तिर खरिद गरेको हुँ, खरिद गरेको विवरण बैंकबाट जानकारी लिन सकिन्छ । मैले उक्त घर खरिद गर्दाको अवस्थामा घर धनीलाई नै रकम दिएको भन्ने कुरा झुठ्ठा हो । आरोपितले लगाएको सबै माथीको आरोपहरु जस्तै तथ्यहिन र प्रमाण विहिन आरोपहरु हुन, यो आरोप पनि उसले आफ्नो वयानमा भनेको कुराहरु हो र उसैको डायरीमा पाईएको कुराहरु हो । जसको सत्यता माथी सिधा प्रश्न उठ्छ र यो मनगढन्ते, कपोकल्पित आरोप हो । आरोप प्रमाणित भएमा सजायको भागिदार हुने छु । काल्पनिक व्यहोरा मैले दिएको भनेर म माथी आरोप गलत हो, मैले उपरोक्त सबै आरोपित बुँदाहरुको जवाफ माथी उल्लेखित मेरो जवाफमा दिएकै अनुसार सत्य हो । असत्य भएको खण्डमा कानून अनुसार सजाँय भोग्न तयार छु । यो कारोवार म सँग नभएको र यसको फोटो फोल्डरमा भएको मलाई जानकारी छैन । जहाँ सम्म रु.१,५०,००,०००।–(एक करोड पचास लाख) र रु.२,००,००,०००।–(दुई करोड) गरी जम्मा रु.३,५०,००,०००।-(तिन करोड पचास लाख) सवाल छ, बैकमा साटिएको छ/छैन सम्बन्धित बैंकबाट जानकारी लिन अनुरोध छ भन्ने व्यहोरा उल्लेख गरी प्रतिवादी डा. ईन्द्रजित राईको बयान ।

**१५. प्रतिवादी टेक नारायाण पाण्डेको बयान:**

निज प्रतिवादीहरु मध्ये केशव प्रसाद दुलालसँग मात्र मेरो चिनजान छ, निजहरु वाहेक अन्य प्रतिवादीहरु सँग मेरो चिनजान छैन, प्रतिवादी केशव प्रशाद दुलालसँग म आफु गृह मन्त्रालयमा कार्यरत रहँदाको अबस्थामा चिनजान भएको हो । म मिति २०७८ साल श्रावण २७ गते देखि मिति २०७९ भाद्र मसान्त सम्म कार्यरत रहेको हुँ । प्रतिबेदन मेरो कार्यकालमा तयार भएको होईन । मुख्य सचिवज्यूको हस्ताक्षरित नेपाल सरकारको निर्णय मेरो कार्यकाल भन्दा पूर्वको हो, मेरो कार्यकालमा थप परिचय पत्र वितरणको(वास्तविक भुटानी शरणार्थीका सन्तान वाहेक) मन्त्रालय र नेपाल सरकारको तहबाट कुनै निर्णय भएको छैन, पेश भएका परिचय पत्रको सत्यताको विषयमा सम्बन्धित शरणार्थी ईकाई र जिल्ला प्रशासन कार्यालय झापालाई बुझ्नु पर्ने हुन्छ । म कार्यरत रहँदाको समयमा परिचय पत्रहरु वितरण गर्ने कार्य भएन, शरणार्थी सम्बन्धी कार्य मन्त्रालयको स्थानिय प्रशासन शाखाले गर्दछ । मेरो कार्यकाल भन्दा पूर्व नै प्रतिवेदन तयार भएको र प्रतिवेदनमा शरणार्थीको नाममा व्यक्तिहरुको नामावली समावेश भएकोसो नाममा सम्पूर्ण लेनदेनको कार्य त्यही समयमा भएको देखिन्छ । मेरो

कार्यकालमा गैह्र भुटानी शरणार्थीलाई शरणार्थी पहिचान दिने गरी कुनै काम कारवाही भएको छैन, साथै भुटानी शरणार्थीको तेश्रो देश स्थानान्तरण नहुने र शरणार्थीको नाममा हुने अवैध चलखेल प्रति सचेत रहन मिति २०७८ र २०७९ मा UNHCR, शरणार्थी ईकाई झापा र जिल्ला प्रशासन कार्यालय झापाबाट सूचना तथा विज्ञप्ति जारी भएको थियो। यस अवस्थामा शरणार्थीको नाममा लेनदेन गर्नु मेरो कल्पना र आचरण विपरितको कार्य भएकोले सो कार्य म बाट भएको छैन। यस विषयमा तत्कालिन अवधिका सम्बन्धित विषयका कागजात र प्रतिवेदनबाट स्पष्ट हुन्छ। शरणार्थीको सम्बन्धमा मानवीय रुपमा समाधान गर्नु पर्ने विषयमा मेरो कार्यकालमा नेपाल सरकारबाट भुटानी शरणार्थीलाई उपलब्ध गराउने मानवीय सहायताको सम्बन्धमा निर्णय भएको छ। गृह मन्त्रालयबाट भुटानी शरणार्थी र प्रतिवेदनको फिल्डको अबस्था सम्बन्धमा वास्तविकता पेश गर्न मिति २०७८ सालमा जिल्ला प्रशासन कार्यालय झापाका सहायक सि.डि.ओ.को संयोजकत्वमा समिती गठन भई उक्त समितीले काम गरी रहेको अवस्था थियो। शरणार्थी र प्रतिवेदनमा भएका व्यक्तिहरुको शरणार्थी सिविर सँगको सम्बन्ध र वास्तविकता सो समितीबाट बुझ्न सकिन्छ। मेरो कार्यकालमा भुटानी शरणार्थीको नाममा विदेश पठाउने चलखेल जवाफ १६ को सन्दर्भबाट रोक लागेको हो। उक्त कार्यमा रोक लागे पछी भुटानी शरणार्थीको नाममा पैसा उठाईएका/पैसा दिने व्यक्तिहरुले पैसा फिर्ता माग गरे पछि निजले प्रतिसोध स्वरुप मलाई आक्षेपित गरेको हो। निजको आरोपमा कुनै सत्यता छैन। उक्त कुराकानी निज र म विच भएको कुराकानी हो, गृह सचिवले अनुसन्धान प्रयोजनको लागी सम्पर्कमा आउने मध्ये आवश्यक ठानिएका व्यक्तिसँग आवश्यक सूचना संकलन गर्न, सूचनाको विश्लेशण गर्न र सो को आधारमा आवश्यक निर्णय गर्न वा नगर्न उक्त सूचनाको उपयोग गर्न सक्छ, प्रस्तुत कुराकानीको आधारमा भुटानी शरणार्थीको लामो समय देखी चली आएको विषयलाई एउटा टुङगोमा पुर्‍याउन निर्णय प्रकृयाको लागी उपयोग गरिएको छ। गृह मन्त्रालय राजनितिक प्रकृतिको तथा जन-सम्पर्क मन्त्रालय रहेको छ, सम्पर्कमा आउने व्यक्तिहरुलाई राजनितिक रुपमा, व्यक्तिगत रुपमा र सुरक्षा तथा गुप्तचरी प्रकृयाबाट सम्पर्क गर्ने तथा थप सूचना लिनु पर्ने हुन्छ। सूचना, गुप्तचरी र अनुसन्धानकै क्रममा निजसँग सम्पर्क भएको, प्राप्त सूचना र सम्पर्कको राजनितिक नेतृत्वलाई समय-समयमा जानकारी गराउने गरेको थिए। प्राप्त सूचना समेतको आधारमा भुटानी शरणार्थीको समस्या माथिको विकृतिजन्य अबस्थाको अन्त्य गर्न नेपाल सरकार र गृह मन्त्रालयबाट आवश्यक निर्णय भएको थियो। निजसँग रकम लेनदेनको उद्देश्यले सम्पर्क स्थापित गरिएको थिएन, उक्त सिम बुबासँग भएको मोवाईलमा छ। तत्काल मैले Viber Account र WhatsApp प्रतिवेदन साथ पेश भएको oneplus कम्पनीको मोवाईल सेटमा चलाउने गरेको थिएँ। म गत असोजमा दिल्लीमा उपचारमा जाँदा मोवाईल विग्रेको हुँदा बनाउन लगाएको थियो, बनाउने क्रममा मोवाईलमा भएको डाटाहरु उडेको हुन सक्छ, यसमा मेरो कुनै बदनियत छैन। सूचना संकलनकै क्रममा उक्त कुराकानी भएको हो। उक्त सूचना प्राप्त भए पछी एअरपोर्टका तत्कालीन प्रहरी प्रमुख र प्रहरी महानिरीक्षकसँग एअरर्पोटबाट तस्करीकोलागी दलालहरुले यसरी प्रयास गरी रहेका छन, सो नियन्त्रण गर्नको लागी कदम चाल्न निर्देशन भएको हो र सो पश्चात सबै भन्दा प्रभावकारी रुपमा सुन तस्करी नियन्त्रण भएको अभिलेखबाट समेत देख्न सकिन्छ। वदनियत राखी आर्थिक लेनदेनको लागी कुनै पनि कुराकानी भएको छैन र कुराकानीमा भनीए जस्तै कुनैपनि प्रकृतिको सहयोग प्रतिवादीलाई गरिएको छैन। मेरो कार्यकालमा कसैलाई शरणार्थी बनाउने र परिचय पत्र वितरण गर्ने काम भएको थिएन,निज प्रतिवादीलाई शरणार्थी बनाउने आश्वासन पनि दिएको थिएन र सो वापत प्रतिवादीले भने जस्तै रकम लेनदेन हुने कुरै भएन। हाल सम्म मेरो पि.एस.ओ.तथा ड्राईभरको रुपमा कामती थरको कुनै प्रहरी कर्मचारी खटिएको अवस्था छैन। साथै निजले भने जस्तो रकम लिएको र फोनबाट

जवाफ दिएको छैन। भुटानी शरणार्थी समस्याका विषयमा मेरो स्पष्ट बुझाई छ। जुन उद्देश्य र प्रयोजनका लागी समिती गठन र प्रतिवेदन तयारी भयो,त्यसले समस्यालाई सुल्झाउने भन्दा विकृति सृजना गरेको मेरो कार्यकालमा सूचना प्राप्त भयो । प्रतिवादी लगायतलाई सोही विषयको सूचना संकलनको लागी उपयोग गरिएको हो । प्रतिवेदन र त्यसबाट श्रृजित परिस्थितिलाई मेरो मन्त्रालयको टिमले सशंकित र सचेत रुपमा विश्लेषण गरेका थियौं । प्रतिवेदनमा उल्लेखित व्यक्तिहरुको शरणार्थी सिविर र शरणार्थी सँगको सम्बन्धको विषयमा यथार्थ विश्लेषण गर्नु आवश्यक थियो, त्यसको लागी सो विषयमा नेपाल सरकार र मन्त्रालयको तहबाट आवश्यक निर्णय भएको हो। शरणार्थी समस्याको विकृतिमा संलग्न मानिसहरुसँग जोडिएर उनिहरुको लोभ लालचमा पर्ने भन्ने मेरो कल्पना र आचरण बाहिरको विषय हो। त्यसमा म लोभिएको,झुक्किएको र कुनै रुपमा पनि संलग्न छैन। अवैध कृयाकलापमा संलग्न व्यक्तिहरुको समूहलाई उपयुक्त समयमा सकभर एकै पटक कानूनको दायरामा ल्याउन तत्कालिन अपराध महाशाखा प्रमुख र प्रहरी महानिरीक्षक सँग छलफल तथा निर्देशन भएको थियो। मैले पदिय जिम्मेवारी दायित्व र आचरण अनुसार आफ्नो भूमिका निर्वाह गरेको छु। अवान्छित गतिविधिमा मेरो कुनै संलग्नता छैन। शरणार्थीको सम्बन्धमा जे-जति विषयहरु उठान भए र मुद्धाहरु श्रृजित भए ती सबै प्रतिवेदन तयारीको लागी समिती गठन र प्रतिवेदन तयारी बीचको अवधिमा भएको देखिन्छ। मेरो कार्यकालमा शरणार्थी समस्याका विषयमा प्राप्त सूचनाका आधारमा तेश्रो देश स्थानान्तरणका नाममा सूचीमा नाम समावेश व्यक्तिहरुलाई अल्झाउने, अल्मल्याउने प्रकृया चली रहेकोमा त्यसको निकास खोज्न आवश्यक निर्णय भई विचल्लीमा परेकाहरुले गुहार माग्ने र थप विचल्लीमा कोहीपनि व्यक्ति नपर्ने अवस्थाको सृजना भएको हो। मेरो कार्यकालमा शरणार्थीको नाममा व्यक्तिलाई अल्झाउने र नाजायज फाईदा लिने उद्देश्यले कुनै काम भएको छैन भन्ने व्यहोरा उल्लेख गरी प्रतिवादी टेक नारायाण पाण्डेको बयान।

१६. **प्रतिवादी सन्दिप रायमाझीको बयान:**

प्रतिवादी सानु भण्डारीले मेरो बुबालाई मामा भनी सम्बोधन गरी घरमा आउने गरेका थिए, निज मेरो घरमा बुबालाई भेट्न आउने क्रममा निजसँग चिनजान हुन गएको हो। पछी निज र म मिली पाटनर सिपमा २ वर्ष टायल र मार्वलको व्यापार समेत गरेका हौं । निजसँग विगत ६/७ वर्ष अगाडी टायल मार्वलको सेयरमा बसी काम गरेको हो। निजले २ वर्ष सम्म काम गरी सेयर बसेको र विचमा १ वर्ष छाडे पछी पुन:पाटनर सिपमा काम गर्ने भनी आएको हुँदा संयुक्त रुपमा काम गरेको हो। म समेतले संचालन गरेको कम्पनीको नाम लियोन ट्रेडर्स प्रा.लि.हो। उक्त कम्पनी कम्पनी रजिष्ट्रारको कार्यालयमा दर्ता गरेको छु, उक्त कम्पनी दर्ता गर्दाको अवस्थामा संचालकमा म, प्रतिवादी सानु भण्डारी, सरोज बुढाथोकी र जोसेफ रायमाझी गरी ४ जना थियौं। हाल सानु भण्डारीको स्थानमा भिष्म पोखरेललाई राखेका छौं। उक्त कम्पनीको कार्यालय हाल काठमाडौंको टेकुमा रहेको छ, मैले निज प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी र सन्देश शर्मा मार्फत कोही कसैलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी कुनै रकम लिएको छैन । निज प्रतिवादी सानु भण्डारी, सरोज बुढाथोकी,जोसेफ रायामाझी र म समेत ४ जना मिली विगत ६/७ वर्ष अगाडी लियोन ट्रेडर्स प्रा.लि.नामको कम्पनी दर्ता गरी व्यापार गरेको र निजले सोही कम्पनी मार्फत व्यापारको लागी भनी नगद र चेक मार्फत दिने गरेका हुन। निजले दिएको रकम कम्पनीको खातामा जम्मा भएको छ। टोप बहादुर रायामाझीले शरणार्थी बनाई पठाई दिन्छु भनी रकम लिएको भन्ने कुरा गलत हो। लियोन ट्रेडर्स प्रा.लि नामको कम्पनीको साविक नेपाल ईन्भेष्टमेण्ट बैंक र मेघा बैंकमा खाता संचालन थियो,हाल नेपाल ईन्भेष्टमेण्ट मेघा बैकमा, नबिल बैंक, माछापुच्छ्रे बैंकमा खाता संचालन छ, उक्त खाताहरु लियोन ट्रेडर्स प्रा.लि.को नाममा नै खाता संचालन रहेको।

निज प्रतिवादी सानु भण्डारीले म आफु पुन:कम्पनीमा रही काम गर्छु भनी कम्पनीको लागी मलाई रु.२०,००,०००।–(बिस लाख) को दरले २ पटक गरी २/३ महिनाको अवधिमा रु.४०,००,०००।–(चालिस लाख) दिएका हुन, उक्त रकम दिंदा निजले चेक मार्फत नै दिएका हुन, निजले दिएको चेक मैले मेरो नाममा रहेको माछापुच्छ्रे बैंकमा रहेको खाता नं.मा जम्मा गरी पुन:सो खाताबाट निकाली कम्पनीको खातामा जम्मा गरेको हुँ। निजले दिएको अर्को रु.२०,००,०००।–(बिस लाख) को चेक मैले कम्पनी कै खातामा जम्मा गरेको हुँ । शरणार्थीको विषयमा थाहा भएन । निजले किम्पनीमा सेयर होल्डरको रुपमा पहिलेबाट रहेका सरोज बुढाथोकीलाई सेयर होल्डरबाट हटाई मलाई सेयर होल्डरको रुपमा राख्नु भनी शर्त राखेको र सोही शर्त पालना गर्ने गरी निजले उक्त रकम मलाई दिएकोमा सरोज बुढाथोकी कम्पनीको सेयर होल्डरबाट हट्न नमानेको हुँदा निजलाई सेयर होल्डरको रुपमा आवद्ध गराउन नसकिएको हो । निजबाट लिएको रकम मध्ये निजले टायल मार्वल खरिद गर्न पठाएका निजका व्यक्ति र निजले सामान लगेको हुँदा अं.रु.१५,००,०००।–(पन्ध्र लाख) जति हिसाव मिलान भईसकेको र वाँकी रहेको रु.२५,००,०००।-(पच्चिस लाख) बजारमा रहेको उधारो रकम उठेपछी दिने भन्ने निज र कम्पनी विच सहमति भएको थियो । मैले माथीको जवाफमा खुलाएको कम्पनीको खातामा निजले जम्मा गरेको रकम एकमुष्ट जोड्दा जति हुन्छ सो रकम मैले कम्पनीको लागी लिएको हो, कम्पनीलाई रकम दिए वापत निज समेत सेयर होल्डरमा बसेका हुन । मिति २०७६।०३।२८ गते मेरो घर परिवारमा आको रकम रु.३,००,००,०००।-(तिन करोड) जो मेरो व्यक्तिगत र कम्पीनिको लोन छ, त्यो तिरेर बस्थे कि व्याज तिरेर बस्थे आजको मिति सम्म । निज सानु भण्डारी मेरो कम्पनीमा विगत ४ वर्ष देखी CEO भएर किन आउनु भयो,सोको प्रमाण म सँग छ । मेरो वयान झुठ्ठा होईन । सो विषयमा सबै विवरण मलाई जानकारी भएन, मेरो बुबा टोप बहादुर रायामाझी संसदको सदस्य भएको कारण वार्षिक रुपमा बुबाले सम्पत्ति विवरण बुझाउने गर्नु भएको हुदा सोहीबाट विवरण झिकाई बुझ्न सकिन्छ भन्ने व्यहोरा उल्लेख गरी प्रतिवादी सन्दिप रायमाझीको बयान।

१७. **प्रतिवादी टेक नारायण पाण्डेको थप बयान:**

विगत देखिको गतिविधि र हाम्रो कार्यकालमा यस विषयमा सम्पर्कमा आएका व्यक्तिहरुको कनेक्सन हेर्दा शरणार्थी समस्या लाई राजनीतिक परियोजनाका रुपमा विकास गरेको देखिन्छ । मन्त्रालयमा राजनीतिक रुपमा सम्पर्कमा आएका वेचन झा सँग वयान लिए पछी यस विषयमा थप गहिराईमा पुग्न सकिन्छ ।राजनीतिक कनेक्सनको विषय भएकाले मैले यस विषयलाई सचेतना र सतर्कतापूर्वक लिएर जाहेरीका प्रतिवादी केशव प्रसाद दुलालसँग आवश्यक सूचना प्राप्तिका लागी निकटता कायम गर्न आवश्यक भएकाले बढी कुराकानी भएको देखिएको हो । केशव प्रसाद दुलालले मन्त्रीज्यूलाई भेटघाट गर्न चाहन्छौ भने पछी मैले सचिवालय मार्फत वहासँग नै सम्पर्क गर भनेर भनेको हो । फर्किने क्रममा हामिले मन्त्रीज्यू सँग सम्पर्क गऱ्यौ भनेका थिए। प्रतिवादीले वयानमा भनेको रकमको सन्दर्भमा मन्त्रीज्यू र वहाँको सचिवालयमा भेटघाट पश्चात प्रत्यक्ष रुपमा भयो वा अन्य व्यक्तिलाई जिम्मा दिए मलाई थाहा भएन । प्रतिवादीले वयानमा खुलाई लेखाई दिए अनुसार मलाईनै प्रत्यक्ष उक्त रकम दिएको भन्ने सम्बन्धमा सत्यता छैन। सचिवालय मार्फत निज केशव प्रसाद दुलाल र मन्त्रीज्यू बीच सिधै सम्पर्क भएको हुँदा निजले लिई आएको रकम सिधै मन्त्रीज्यू लाई दिए वा सचिवालय मार्फत अन्य कसैलाई जिम्मा दिईयो,सो सम्बन्धमा सचिवालय वा मन्त्रीज्यू बाट खुल्ने छ । उक्त विषयमा मेरो कुनै चासो, लोभ र संलग्नता थिएन । मन्त्रीज्यू भनेको तत्कालिन विभागिय मन्त्री वालकृष्ण खाँण हुन । शरणार्थीको विषयमा मन्त्रालय र अन्तर सम्बन्धित निकाय विच भएको छलफलको प्रकृयाको विषय मात्र हो।

कार्यदलका संयोजक वालकृष्ण पन्थीसँग निजको समूहले तयार पारेको प्रतिवेदनको सन्दर्भमा छलफल भएको हो । उक्त छलफल पश्चात मन्त्रालय र UNHCR सँग आन्तरिक छलफल गरी उक्त विषयको वास्तविक अबस्था विश्लेषण भएको हो। निजसँग सो विषयमा निजको चासो के रहेछ भनी जानकारी लिन सम्पर्क भएको हो। निजले सम्पर्कमा भने जस्तो पन्थी प्रतिवेदन भन्दा वाहिर गएर निज सँग छलफल भएको होईन। यसको जवाफ मैले स.ज.२ मा खुलाई लेखाई सकेको छु। सो गिफ्ट के थियो मलाई थाहा भएन। स.ज.२ मा लेखाईदिए अनुसार सचिवालय मार्फत मन्त्रीज्यू सँग भेट भएको हुँदा सो गिफ्टका सम्बन्धमा मन्त्रीज्यू र स्वकिय सचिवले खुलाउनु मन्त्रीपरिषदमा पठाउने प्रतिवेदनका लागी समितीका संयोजकसँग समेत बसी अनुभव आदान प्रदान गरी समितीकै प्रतिवेदन पेश भएको अबस्था हो। तर अफिस कपी तयार गर्ने क्रममा मलाई गुमराहमा राखी दोश्रो प्रतिवेदनमा हस्ताक्षर गराउने कार्यबाट गम्भिर आसङ्का पैदा भएको छ। तसर्थ त्यस्ता संवेदनशिल प्रतिवेदन को सँग कहाँ जिम्मामा रहन्छन, दोश्रो प्रतिबेदन मन्त्रालयमा कहिले कसरी प्रवेश गऱ्यो, कसको कम्प्युटरमा त्यसको सफ्ट कपी छ, कसरी सचिवलाई त्यो प्रतिमा हस्ताक्षर गराईयो लगायतका विषयमा सो अवधिमा महाशाखा र शाखामा कार्यरत जिम्मेवार कर्मचारीहरु माथि छानविन गरी सत्यतथ्य पत्ता लगाउनु पर्दछ। मन्त्रीपरिषदमा पेश भएको प्रतिबेदननै आधिकारीक प्रतिबेदन हो। मन्त्रीपरिषदमा पेश हुने आधिकारिक र समितीकै प्रतिबेदन चेकजाँच गरी हस्ताक्षर गरी सकेपछी दोश्रो प्रतिपनि सोही अनुसार हुन्छ भन्ने विश्वासमा नै हस्ताक्षर गरिन्छ। मन्त्रालयमा धेरै कागजातमा हस्ताक्षर गर्नुपर्ने अवस्थामा पहिलो प्रति चेकजाँच गरी सकेपछी अर्को प्रतिको प्रत्येक पेज चेक जाँच गर्न सम्भव पनि थिएन। मन्त्रालयले मन्त्रीपरिषदमा पेश गरेको प्रतिवेदन आधिकारीक हुनेनै हुँदा दोश्रो प्रति प्रतिबेदन स्वभाविक रुपमा खारेज भागी हुन्छ। प्रतिबेदनको जिम्मा सम्बन्धित महाशाखा र शाखाको हुने हुँदा उक्त फरक-फरक प्रतिबेदन कहिले कसरी तयार भए, किन र कहिले मन्त्रालयमा अभिलेखित भए सो सम्बन्धमा सम्बन्धित जिम्मेवार अधिकारीहरु माथि छानविन गर्नुपर्ने हुन्छ। पत्र-पत्रिकाले समाचारलाई आफु अनुकुल लेख्ने अतिरञ्जित गर्ने र व्यक्तिलाई अदालतले जस्तै आफै न्यायाधीशको भूमिक खेल्छन, तसर्थ यस विषयमा मेरो धेरै चासो र थाहा हुने विषय भएन।सरकार अविछिन्न उत्तराधिकारवाला संस्था हो,भुटानी शरणार्थीलाई मानवीय पहिचान र मानवीयसहायत प्रदान गर्ने पवित्र उदेश्यका साथ मन्त्रीपरिषदमा प्रस्ताव पेश भएको हो। उक्त प्रस्ताव पेश गर्नुपूर्व मुख्य सचिव, परराष्ट्र सचिव लगायतसँग विस्तृत छलफल तथा परामर्श भएको थियो। म निजामति सेवामा आफूलाई ईमान्दार र नैतिकवान कर्मचारीका रुपमा परिचित व्यक्ति हुँ, मेरो सरल स्वभावको गलत प्रयोग गरी माथी मैले जवाफमा खुलाएका विषयमा मेरो संलग्नता भएको जस्तो देखिने गरी अन्य व्यक्तिहरुले गलत कार्य गरी फाईदा लिएको र बदनाम गर्न खोजेको देखिन्छ भन्ने व्यहोरा उल्लेख गरी प्रतिवादी टेक नारायण पाण्डेको थप बयान।

१८. **प्रतिवादी राम शरण के.सी. को बयान:**

मैले सामान्य रङको काम गरेर बसी रहेको अबस्थामा मेरो भाई मार्फत चिनेको जनक कार्कीसँग मेरो भेटघाट भई चिनजान हुन गएको र निज मार्फत नै मेरो गोकुल थापासँग समेत मिति २०७४ सालमा चिनजान हुन गएको र निजसँग चिनजान भई सके पछी मलाई जनक कार्कीले फोन सम्पर्क गरी म टेकनाथ रिजालको मुख्य सल्लाहकार हुँ, हामीले नेपालीहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने काम गरी रहेका छौं, तपाई पनि जाने भए हामी पठाउन सक्छौं भनी जानकारी गराएको र सोही समयमा जनक कार्कीले बोलेको फोनबाट गोकुल थापा समेत म सँग बोली सोही कुरा गरी तपाई र तपाईका अन्य आफन्तहरु समेत भए खोज्दै गर्नु हामी मिलाएर पठाउँछौं भनेको हुँदा म आफु समेत भुटानी शरणार्थी भई अमेरिका जान राजी भई मैले मेरो सम्पर्कमा आएका

अन्य आफन्त तथा साथीभाईहरु सँग समेत कुरा गरी निजहरु समेत जान ईच्छुक भएको हुँदा मैले जनही रु.३,००,०००।–(तिन लाख) को दरले रकम संकलन गरी मेरो आफ्नो समेत गरी जम्मा रकम रु.५२,००,०००।–(बाउन्न लाख) भेला जम्मा पारी उक्त रकम मैले गोकुल थापालाई निजको भक्तपुरको बालकोट सिरुटारमा रहेको घरमा लगी रु.९,५०,०००।–(नौ लाख पचास हजार) दिएको, सो पश्चात महराजगञ्जमा रहेको भाटभटेनी नजिकको बेकरी क्याफेमा गई नगद रु.१२,००,०००।–( वाह्र लाख) दिएको त्यस पछी गौशालामा रहेको पशुपती भिजन होटलको पछाडी गई निजलाई भेटी रु.१८,५०,०००।–(अठार लाख पचास हजार) दिएको हुँ । वाँकी रहेको नगद रु.१२,००,०००।–(बाह्र लाख) रकम तिनकुनेमा लगी निजलाई नगदै दिएको हुँ । उक्त रकम लिदा निज गोकुल थापाले यो रकम पेश्की स्वरुप हो, अन्य रकम पछी काम हुदै गए पछी दिनु भनी रकम लिंदाको अवस्थामा निज गोकुल थापाले म लगायत १८ जना व्यक्तिहरुको नागरिकताको फोटोकपी र १ थान फोटो समेत लिएर गएका थिए, पछी गोकुल थापा मेरो सम्पर्क भन्दा वाहिर गएको र सम्पर्कमा नआएको कारण मैले जनक कार्कीसँग सम्पर्क गरी जनक कार्की र गोकुल थापा समेतलाई साथमा लिई निजले भने अनुसार निज टेकनाथ रिजालको मुख्य सल्लाहकार हो/होईन ? मेरो काम के भई राखेको छ भनी बुझ्नको लागी जिल्ला झापामा रहेको टेकनाथ रिजालको घरमा गई निजलाई भेटी म सँगबाट लिएको रकमको सम्बन्धमा बुझ्दा काम हुन्छ केही ढिलो भएको मात्र हो भनी जानकारी गराएको । पछी गोकुल थापासँग सम्पर्क गरी काम किन ढिला भयो मेरो रकम फिर्ता दिनु भनी मैले रकम फिर्ता मागेको हुँदा निजले पटक-पटक गरी मलाई रु.३२,००,०००।–(वत्तिस लाख) फिर्ता गरेको । पछी पुन:निज गोकुल थापाले मलाई र मेरा अन्य साथीहरु समेतलाई सम्पर्क गरी अब काम हुने भयो तपाईहरुले रु.५०,००,०००।–(पचास लाख) जम्मा गर्नु त्यो रकम जम्मा गर्नु भयो भने २ जना व्यक्तिहरुलाई हामी विना पैसामा पठाई दिन्छौ र तपाईहरुले जम्मा गरको रकम समेत १ महिनामा फिर्ता गर्छौ भनेको हुँदा म लागयत मेरा अन्य चिनजानका ५ जना मानिसहरुसँगबाट जनही रु.८,००,०००।–(आठ लाख) को दरले रु.४०,००,०००।–(चालिस लाख) उठाई उक्त रकम मेरो खातामा जम्मा गरी मेरो ग्लोवल आई.एम.ई.बैकको चेकबाट निज गोकुल थापाको श्रीमती रमा थापाको नाममा चेक काटी रु.४०,००,०००।–(चालिस लाख) दिएको र निज गोकुल थापाबाट पहिले लिन वाँकी रकम रु.२०,००,०००।–(विस लाख) समेत गरी जम्मा रकम रु.६०,००,०००।–( साठ्ठी लाख) निज गोकुल थापाको हिसावमा मिलान गरी दिएको हुँ । मैले उक्त रकम दिई सके पछी पुन:निज गोकुल थापा २ महिना सम्म गायव भएको र पछी निजले नै मलाई सम्पर्क गरी टेक नाथ रिजाल काठमाडौं आएका छन निजलाई फोन गर्नु भनी निजको फोन नं.समेत दिएको हुँदा मैले निज टेकनाथ रिजाललाई फोन सम्पर्क गर्दा निजले चावहिलको A1(एवान) पार्टी प्यालेसमा आउनु भनेको हुँदा म निजलाई भेट्न सो ठाँउमा गएको र निजलाई भेटी सके पछी निजले हाल हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल र भेषराज लम्सालसँग भेट गराई चिनजान गराई दिएको र सोही अवस्थामा निज टेकनाथ रिजालले अब काम हुन्छ भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने सम्पुर्ण कार्य वहाँहरुले गर्नु हुन्छ भनी जिम्मेवारीका साथ निज टेकनाथ रिजलले मलाई भनेको र सोही अवस्थामा प्रतिवादी केशव प्रसाद दुलालले निजको मोवाईलमा भुटानी शरणार्थी सम्बन्धि समिती गठन भएको भनी ३ सदस्य समिती गठन भएको पत्र समेत मलाई देखाएको हुँदा म आफु समेत विश्वासमा परी मेरा आफ्ना साथीहरु समेतलाई काठमाण्डौको सुकेधारा नजिक रहेको भेटघाट सेकुवामा निज प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी र अर्का व्यक्ति भेषराज लम्साल समेतलाई सोही ठाउँमा भेटघाट गरी भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भन्ने विषयमा प्रकृया अगाडी बढाउने निधो गरिएको हो ।निज

प्रतिवादीहरुले हामीहरुलाई भुटनी शरणार्थी बनाई अमेरिका पठाई दिनको लागी भनी मिति २०७६ असार महिना देखी श्रावणको पहिलो हप्ता सम्म म लगायत मेरो चिनजान र सम्पर्कमा रहेका ३४ जना व्यक्तिहरुको भुटानी शरणार्थी कार्ड (परिचय पत्र) बनाई सो कार्डमा टेकनाथ रिजालले सहिछाप गरी हामीहरुलाई दिएको । प्रतिवादी सानु भण्डारी र केशव प्रसाद दुलालले भुटानी शरणार्थीको फारम भर्नु पर्छ भनी परिचय पत्रमा भरेको नामको आधारमा निजहरुले नै फारम भर्न लगाई सो फारममा हामीहरुलाई सहिछाप गर्न लगाएको र सो अवस्थामा प्रति व्यक्ति रु.१०,००,०००।–(दस लाख) को दरले ३४ जनाको जम्मा रकम रु.३,४०,००,०००।–(तिन करोड चालिस लाख) रकम दिएको हो । उक्त रकम दिनु भन्दा अगाडी अं.२०७७ सालको असोज महिनामा हाल हिरासतमा रहेका प्रतिवादी सागर राईले मलाई फोन गरी जोरपाटी साँखु जाने बाटोमा रहेको नाम थाहा नभएको रेष्टुरेन्टमा बोलाएको हुँदा म सो ठाउँमा गएको र म जाँदा सो रेष्टुरेन्टमा तत्कालीन गृहमन्त्री राम बहादुर थापाको छोरा प्रतिक थापा, सागर राई, प्रेम राज पन्थी र केशव प्रसाद दुलाल पहिले नै भेला जम्मा भई सकेका रहेछन, म पुगे पछी अब काम अगाडी बढाउनु पर्‍यो त्यसको लागी जम्मा रकम रु.२,५०,००,०००।–(दुई करोड पचास लाख) जम्मा गर्नु पर्‍यो भनी मलाई भनेको र मैले यति धेरै रकम जम्मा गर्न सक्तिन भनी निजहरुलाई जानकारी गराएकोमा प्रेमराज पन्थीलाई रु.१,००,००,०००।–(एक करोड) बाँकी रकम मैले जम्मा गर्नु पर्छ, रकम जम्मा गरी सके पछी उक्त रकम केशव प्रसाद दुलाललाई दिंदा हुन्छ, म चाहिंदैन भनी सोही अवस्थामा प्रतिक थापाले हामीलाई जानकारी गराएका हुन ।मैले उक्त रकम दिंदा प्रतिवादी सानु भण्डारीलाई निजको ICFC फाईनान्स, हिमालय बैंक र अर्को बैंकमा गरी खातामा नै रु.१,३४,००,०००।–(एक करोड चौतिस लाख) जम्मा गरी दिएको हुँ, रकम जम्मा गरेको भौचर म सँग छ, म निवेदन साथ दाखिला गराउन सक्छु । यसै गरी मेरो घर जग्गा दृष्टी बन्धक राखी रु.१,५०,००,०००।–(एक करोड पचास लाख) सविन महर्जन भन्ने व्यक्तिसँग लिई सो रकम दिनको लागी प्रतिवादी केशव प्रसाद दुलालले मलाई काठमाडौंको नक्सालमा रहेको निलगिरी रेष्टुरेन्टमा बोलाएको हुँदा म र प्रेम राज पन्थी संगै नगद लिएर गएको र प्रतिवादी केशव प्रसाद दुलाल सोही रेष्टुरेन्टको पार्किङमा हुण्डाई कम्पनीको नयाँ सिल्भर रङको गाडी लिएर आएको हुँदा रकम दिनु भन्दा अगाडी प्रतिक थापा खोई भनी मैले प्रतिवादी केशव प्रसाद दुलाललाई सोधेको र निजले सोही अबस्थामा प्रतिक थापालाई फोन गरेको, फोन गर्दा प्रतिक थपा सोही रेष्टुरेन्टको माथिल्लो तलाबाट तल हेरी लिएर आएको रकम केशव प्रसाद दुलाललाई नै दिनु भनी निजले माथीबाट भनेको हुँदा मैले लिएर गएको नगद रु.१,५०,००,०००।–(एक करोड पचास लाख) र प्रेम राज पन्थीले लिएर गएको रु.१,००,००,०००।–(एक करोड) समेत गरी जम्मा रकम रु.२,५०,००,०००।–(दुई करोड पचास लाख) निज प्रतिवादी केशव प्रसाद दुलालले लिएर आएको गाडीको डिकीमा राखी दिएका हौं ।निज टेकनाथ रिजालले म लगायत मेरा चिनजानका ५ जना मानिसहरु समेतलाई मेरो नाम भुटानी शरणार्थीमा छुटेको हुँदा नाम समावेश गरी पाउँ भनी फोटो समेत निवेदनमा टाँसी सो निवेदनमा सहिछाप गर्न लगाएको र सोही अबस्थामा निज टेक नाथ रिजालले म लगायत अन्य ५ जना व्यक्ति समेतको रु.११,००,०००।–(एघार लाख) नगदै निजको घर झापा गई दिएको हुँ। यहाँ शिविरमा बसेका व्यक्तिहरु अब विदेश जादैनन्, निजहरुको नामबाट तिमीहरुको परिचय पत्र बनाई म लगायत केशव प्रसाद दुलाल र सानु भण्डारी समेत भई तिमीहरुलाई अमेरिका पठाई दिन्छौं भनी निज टेकनाथ रिजालले मलाई रकम माग गरेको हुँदा उक्त रकम मैले निजलाई दिएको हुँ । निज प्रतिवादी केशव प्रसाद दुलाल र सानु भण्डारीले म लगायत मेरो चिनजानका मानिसहरु समेतलाई पहिलो चरणमा काठमाण्डौ रवि भवन नजिक रहेको क्राउन होटलको १४ तलामा लागी मिति २०७८ फागुन महिनाको अन्तिम तिर मेरो सम्पर्कमा

रहेका १३ जनाको वायो मेट्रिक गराएको र सो अबस्थामा हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी टंक कुमार गुरूङ र सन्देश शर्मा समेत सँगै रहेको अवस्थामा बायो मेट्रिक गराएका हुन । त्यसको केही समय पछी २०७९ सालको जेष्ठ महिनामा ललितपुरको सानेपामा रहेको ईन्टरनेशनल क्लबमा लगी केशव प्रसाद दुलाल र सानु भण्डारीले म लगयत अन्य ७ जनाको बायो मेट्रिक गराएका हुन । त्यस पछी मिति २०७९ भदौ महिनामा ईटहरीको गोकुल रिसोर्टमा केशव दुलालले सागर राईलाई पठाएको र निजले सोही ठाउँमा १४ जनाको बायोमेट्रिक गराएका हुन ।पहिलो पटक गर्दा टंक कुमार गुरूङ र सन्देश शर्माले लिएर आएका, दोश्रो पटक सानु भण्डारी र केशव प्रसाद दुलालले ल्याएका, तेश्रो पटक सागर राईले लिएर आएका हुन । टेकनाथ रिजालले म लगायत मेरो चिनजानका मानिसहरुको समेतको परिचय पत्र बनाई हामीहरुलाई फोटो खिच्न दिएको, हामी सबैले आ-आफ्नो फोटो खिचेर राखेकोमा निज भेषराज लम्सालले मलाई सम्पर्क गरी टेकनाथ रिजालको वाकस छ, झापा घर सम्म लगी दिनु भनी दिएको हुँदा मैले उक्त बाकस लिएर निजको घरमा गएकोमा निज टेकनाथ रिजालले बाकस खोली हेर्दा वाकसमा म लगायत अन्य धैरै जनाको परिचय पत्रहरु रहेको हुँदा सो सबै परिचय पत्रहरु घरको पछाडी कम्पाउण्ड वाहिर आगोबाली जलाउन लगाएकोले मैले जलाई दिएको हुँ ।मलाई सबैको नाम थाहा भएन,निज प्रतिवादीहरुले अमेरिका पठाई दिने भनी बायो मेट्रिक गर्दा फारम भराएको र सो फारममा सबैको नाम र फोन नं.समेत लेखिएको छ, सो फारम मैले घरमा सुरक्षित राखेको छु, म झिकाई दिन सक्छु । जाहेरवालाले मेरो बैंक खातामा जम्मा गरेको रकम मैले निकाली प्रतिवादी सानु भण्डारीको खातामा जम्मा गरेको हुँ, मेरो बैंक खातामा छैन । म समेतलाई प्रतिक थापाले रु.१,५०,००,०००।–(एक करोड पचास लाख) रकम भेला जम्मा पारी उक्त रकम केशव प्रसाद दुलाललाई दिनु भनी जोरपाटी साँखु जाने बाटोमा रहेको नाम थाहा नभएको रेष्टुरेन्टमा भेट हुँदा भनेको र निजले भने अनुसार नै मैले पछी रकम भेला जम्मा पारी सो रकम ल्याई निजले भने अनुसार प्रतिवादी केशव प्रसाद दुलाललाई दिएको हुँ, गोकुल थापालाई मैले नगदै दिएको हुँ, निजको श्रीमतीको खातामा समेत रकम जम्मा गरेको हुँ, भेषराज लम्साल आफै पीडित हुन, जनक कार्कीले गोकुल थापासँग चिनजान गराई दिएका मात्र हुन अन्य भूमिका छैन भनी प्रतिवादी राम शरण के.सी.को बयान ।

१९. **प्रतिवादी बिक्रम भन्ने गोविन्द कुमार चौधरीको बयान:**

प्रतिवादी केशव प्रसाद दुलाल मेरो छिमेकी समेत भएको र नेपाली काङग्रेसमा समेत आवद्ध भएको हुँदा सोही सिलसिलामा निज सँग चिनजान हुन गएको हो,पछी निजले मलाई पशुपती विकास कोषको ठेक्का मिलाई दिन्छु भनी आश्वासन दिएको भएतापनि ठेक्का नपरेको र सोही क्रममा निजले मलाई टेकनाथ रिजाल भन्ने व्यक्तिको लागी झापा भद्रपुरबाट काठमाण्डौ सम्म आउनको लागी प्लेन टिकट काटीदिनु भनेको हुँदा मैले निजले भने अनुसार विराटनगर एअरपोर्ट मोडमा रहेको जाग्रति ट्रभल्सबाट टिकट काटी दिएको हो । निज १ हप्ता सम्म काठमाण्डौ बसेर फर्किए पछी पुन: सानु भण्डारीले निजलाई फोन गरी काठमाण्डौ बोलाएकोमा निज र सानु भण्डारी विच सामान्य खटपट भई सानु भण्डारीले बोलाउँदा टेकनाथ रिजाल नआएको हुँदा निज टेकनाथ रिजाललाई टोप बहादुर रायामाझीले फोन गरी काठमाण्डौ आउनु भनी बोलाएको भनी मलाई टेकनाथ रिजालले जानकारी गराएका हुन । त्यसको १५ दिन पछाडी सानु भण्डारीले मलाई फोन गरी जसरी पनि टेकनाथ रिजाललाई काठमाण्डौ झिकाउनु पर्‍यो, मैले बोलाउँदा आउन मानेनन् भनेको हुँदा मैले टेकनाथ रिजाललाई सम्पर्क गरी जसरी पनि तपाई काठमाण्डौ आउनु पर्ने भयो, मेरो आफ्नो काम छ भनी भनेको हुँदा मैले टेकनाथ रिजाललाई सम्पर्क गरी काठमाण्डौ बोलाएको र काठमाण्डौ आई सके पछी निज सानु भण्डारीले पहिले नै भने अनुसार टेकनाथ रिजाललाई मैले एअरपोर्टबाट टोप बहादुर रायामाझीको घरमा पुर्‍याई दिएको हो । पछी

प्रतिवादी सानु भण्डारी र केशव प्रसाद दुलालले मलाई भुटानी शरणार्थीको रुपमा नेपालीहरुलाई कागज पत्र मिलाई अमेरिका पठाउँदै छौं, त्यसको लागी गृह मन्त्रालयमा एउटा समिती बन्दै छ, तपाईले पनि मानिसहरु खोज्नु भनी मलाई भनेको हुँदा मैले के-कुन आधारमा मानिस खोज्ने भनी जानकारी माग्दा निजहरुले भुटानी शरणार्थीको नेता टेकनाथ रिजालले प्रमाणित गरेको परिचय पत्र दिन्छौ, सोही आधारमा जनही रु.२,००,०००।–(दुई लाख) को दरले रकम समेत जम्मा गराउनु, समिती बनाउनको लागी खर्च चाहिने भयो भनेको हुँदा मैले निजहरुको कुरालाई विश्वास गरी मेरो चिनजान र सम्पर्कमा रहेका मानिसहरुलाई अमेरिका जानको लागी कुराकानी गरेको र निजहरु समेत जान ईच्छुक भएको हुँदा मैले २५ जना व्यक्तिहरुको परिचय पत्र लिई निजहरुलाई देखाई जनही रु.२,००,०००।–(दुई लाख) को दरले रु.५०,००,०००।–(पचास लाख) रकम संकलन गरी संकलन भएको उक्त रकम मैले प्रतिवादी सानु भण्डारी लाई गौशालामा रहेको भण्डारखाल रिसोर्टमा लगी प्रतिवादी सानु भण्डारीलाई नगदै दिएको हुँ। मैले उक्त रकम दिई सके पछी समिती गठन भएको र समिती गठन भई सके पछी निजहरुले पुन:फारम भर्नु पर्छ अनि मात्र ढड्डामा नाम आउँछ भनी भनेको र सोही समयमा निजहरुले जनही रु.५,००,०००।–(पाँच लाख) को दरले रकम माग गरेको हुँदा मैले जाहेरवाला सुमन दाहालको १६ जना र अन्य गरी जम्मा २६ जना व्यक्तिहरुको जनही रु.५,००,०००।–(पाँच लाख) को दरले जम्मा रकम रु.१,३०,००,०००।–(एक करोड तिस लाख) रकम उठाएकोमा प्रतिवादी सानु भण्डारीले निराजन खरेल भन्ने मानिस फारम लिएर आउँछ, फारम भरी मलाई दिनु पर्ने रकम समेत निजलाई नै दिएर पठाउनु भनी मलाई भनेको हुँदा मैले जस-जसको फारम भरिन्छ, उसैको तर्फबाट रकम लिई तिन पटक गरी म र जाहेरवाला सुमन दाहाल समेत सँगै भएको अवस्थामा रु.१,३०,००,०००।–(एक करोड तिस लाख) निज निराजन खरेल भन्ने मानिसलाई दिएको हुँ। पछी निज प्रतिवादीहरुले गौशालामा रहेको होटल पशुपति प्लाजाको माथिल्लो तलामा रहेको कोठामा बिभिन्न व्यक्तिहरु गरी ८० जनाको बायो म्याट्रिक गराएको र सो समयमा मेरो चिनजानका ८ जना व्यक्तिहरुको समेत बायोमेट्रिक गराएको। सो बायो मेट्रिक गराई सके पछी मैले प्रतिवादी सानु भण्डारीलाई नगद रु.३६,००,०००।–(छत्तिस लाख) दिएको हो। पछी निज प्रतिवादीहरुले गौशालामा रहेको भण्डारखाल रिसोर्टमा खाँदा बस्दाको रकम समेत मलाई तिर्न लगाएको हुँदा मैले जम्मा रकम रु.२६,००,०००।–(छब्बिस लाख) सोही रिसोर्टमा तिरेको र निज प्रतिवादीहरुले समितीमा रहेका व्यक्तिहरु काठमाण्डौ तथा झापा र भद्रपुरमा ओहोर दोहोर गर्दा प्लेन टिकटको विल समेत मलाई तिर्न लगाएको हुँदा मैले रु.५,००,०००।–(पाँच लाख) विराटनगरको जागृति ट्राभलमा तिरेको हुँ। मलाई निराजन खनाल नाम गरेको मानिस रकम लिन आउँछन भनी प्रतिवादी सानु भण्डारीले भनेका थिए, निज सानु भण्डारीले निराजन भन्ने मानिस प्रहरीको अ.स.ई.हो। निज मेरो बडिगार्ड हो भनी जानकारी गराएका थिए, निज रकम लिन आउँदा ४४० न.को आई.टन.गाडी लिएर आएका थिए, हाल आएर बुझ्दा निजको वास्तबिक नाम निरञ्जन कुमार खरेल भन्ने थाहा पाएँ। मैले माथी खुलाई लेखाई दिए अनुसार तथा होटल खर्च तथा अन्य खर्च समेत गरी रु.२,४७,००,०००।–(दुई करोड सढचालिस लाख) दिएको हुँ, निजहरुले म सँगबाट उक्त रकम दिंदा गृह मन्त्रालयमा दिनु पर्ने भनी लिएर जाने गरेका थिए, गृह मन्त्रालयमा को-कसलाई दिने भन्ने विषयमा निजहरुले कुनै कुरा गरेका थिएनन्, निजहरुले उक्त सामग्रीहरु लिएर आउँदा गृह मन्त्रालयको कर्मचारी हो भन्ने मानिसहरु लिएर आउने गरेका थिए। सो अवस्थामा सानु भण्डारी र केशव प्रसाद दुलाल आएका थिए भन्ने व्यहोरा उल्लेख गरी प्रतिवादी बिक्रम भन्ने गोविन्द कुमार चौधरीको बयान।

## २०. प्रतिवादी नरेन्द्र के.सी. को बयान:

मैले उल्लेखित प्रतिवादीहरु मध्ये प्रतिवादी बालकृष्ण खाँण, टेक नारायण पाण्डेलाई मैले गृह मन्त्रालयमा तत्कालिन माननिय गृहमन्त्री बालकृष्ण खाँणको तत्कालिन सचिव भई काम गर्ने क्रममा निजहरुसँग चिनजान भएको हो। अन्य प्रतिवादीहरु सानु भण्डारी, केशव प्रसाद दुलाल, टंक कुमार गुरुङ, सन्देश शर्मा, सागर राई, डा.ईन्द्रजीत राई, सन्दिप रायमाझी, गोविन्द कुमार चौधरी र राम शरण के.सी.लाई मैले यस भन्दा पूर्व चिनेको थिईन। म तत्कालगृह मन्त्रालयमा तत्कालिन गृहमन्त्रीको निजी सचिवको रुपमा मिति २०७८ भाद्र महिना देखि २०७९ माघ १० गते सम्म कार्यरत रहेको हुँ, निज बालकृष्ण खाँणसँग निजी सचिव रहनु पूर्व देखि नै चिनजान थियो भने टेक नारायण पाण्डे पनि सोही मन्त्रालयमा सचिव पदमा कार्यरत रहेको हुँदा निजलाई समेत चिनेको हो ।म मिति २०७८ साल भाद्र महिना सम्म उक्त स्कुलमा कार्यरत रहेको र तत्पश्चात गृह मन्त्रालयमा तत्कालिन गृहमन्त्रीको निजी सचिवको रुपमा मिति २०७८ भाद्र महिना देखि २०७९ माघ १० गते सम्म कार्यरत रहेको हो । मैले प्रयोग गर्दै आएको ९८६१६१९५११ र आङटावा शेर्पाले चलाउने गरेको ९८५१०६२०८९ सँग पटक-पटक गरी ४९ पटक कुराकानी भएको भन्ने सम्बन्धमा मलाई सम्झना भएन। मेरो नाम उल्लेख गरी लेखिएको कागज को-कसले, के-कुन प्रयोजनको लागी लेखेको हो, के-कसरी प्रतिवादी बालकृष्ण खाँणको घरबाट वरामद भएको हो मलाई थाहा भएन। प्रतिवादी केशव प्रसाद दुलाल र प्रतिवादी टेक नारायण पाण्डे विचमा के-कुन आधारमा मलाई रकम दिने भनी मेरो नाम जोडी निजहरु बीचमा उक्त कुराकानी भएको हो, मलाई जानकारी भएन। म बालकृष्ण खाँणको निजी सचिव भएकै आधारमा म सँग कुनै सरोकारको विषय नै नभएको ठगी र संगठित अपराधमा उक्त कागज बरामद भएकै कारणबाट म दोषी भएको भनी आरोप लगाउनु गलत हो भनी प्रतिवादी नरेन्द्र के.सी. को बयान।

## २१. प्रतिवादी डा.ईन्द्रजित राईको थप बयान:

म गृह मन्त्रालयमा सल्लाहकार पदमा कार्यरत रहँदा सयौं मानिसहरुको दिनमा फोन आउने गरेकोमा को-को सँग कुरा हुन्थ्यो मलाई याद भएन, निज सानु भण्डारी सँग पनि मेरो फोन सम्पर्क भई कुराकानी भएको हुन सक्छ तर, भुटानी शरणार्थीको बिषयमा कहिले कुरा भएको थिएन । गैह्र भुटानी शरणार्थी नेपाली नागरिक जाहेरवालाहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लगायतका तेश्रो मुलुकमा आफुलाई फाईदा पुग्ने गरी पठाउने कार्य दुर्भाग्यपूर्ण, खेदपूर्ण र गलत छ, म एक जिम्मेवार नागरिक हुनाले यस बिषयमा कुनै प्रकारको गैह्रकानूनी कारवाहीमा संलग्न आज सम्म भएको छैन। दोषीलाई सजाँय हुनुपर्छ, निर्दोषले सफाई पाउनु पर्छ। प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी बीच आर्थिक लेनदेनको बिषयमा कहिले झै-झगडा भएको थिएन र छैन। मेरो PSO प्र.स.नि.दुर्गा बहादुर राना मगर र प्रतिवादी टोप बहादुर रायमाझी समेतले झगडा भएको भन्ने कसरी उल्लेख गरेका हुन मलाई थाहा छैन। निजहरु मेरो अफिसमा १/२ पटक आउँदा सामान्य भेटघाट र बिभिन्न बिषयहरुमा छलफल हुने गरेको थियो भनी प्रतिवादी डा.ईन्द्रजित राईको थप बयान।

## २२. प्रतिवादी टोप बहादुर रायमाझीको बयान:

हाल पक्राउमा परी आएका प्रतिवादी केशव प्रसाद दुलालसँग सुजाता कोईरालाको घरमा जाने आउने क्रममा चिनजान भएको हो, प्रतिवादी सानु भण्डारी मेरो छिमेकी भएको हुँदा चिनजान भएको हो, प्रतिवादी टेक नारायण पाण्डे मेरो जिल्लाबासी भएको र नेपाल सरकारको सचिव भएको हुँदा चिनजान भएको हो, प्रतिवादी ईन्द्रजीत राईसँग पार्टीको कामको सिलसिलामा चिनजान भएको हो, प्रतिवादी वालकृष्ण खाँणलाई विद्यार्थी राजनिती गर्ने क्रममा चिनेको हुँ। भुटानी शरणार्थी सम्बन्धी समस्याको स्थाई र दिर्घकालिन समाधानको

उपायहरू पहिल्याउन बाल कृष्ण पन्थीको संयोजकत्वमा कार्यदल गठन भएको सम्म जानकारी छ, सो बाहेक अन्य कुरा मलाई जानकारी भएन। मैले ईन्द्रजीत राईलाई चिनाई दिएको भन्ने कुरा सरासर गलत हो। प्रतिवादी ईन्द्रजीत राई र प्रतिवादी सानु भण्डारी विचको लेनदेन विषयमा वहाहरुले जान्ने कुरा हो, मलाई जानकरी छैन। निजले मलाई दिएको भनेको रकम बाट मैले कुनै रकम लिएको छैन, सन्दिप रायमाझीको खातामा जम्मा गरेको रकम सम्बन्धमा निजले नै स्पष्ट पार्ने छन। प्रतिवादी सानु भण्डारीले मलाई मामा भनी सम्बोधन गर्ने विषयमा मैले माथीको जवाफमा खुलाई सकेको छु, निज प्रतिवादी सानु भण्डारीको घर बाट बरामद भई आएको डायरीमा मेरो नाम लेखि पटक पटक मलाई रकम दिएको भनी लेखिएको कुरामा सत्यता छैन, निजले के कुन प्रयोजनको लागी उक्त कुरा लेखेका हुन मलाई जानकारी भएन, सो रकम मैले लिएको छैन।मेरो छोरा सन्दिप रायमाझीसँग कम्पनीमा साझेदारीको कुरा सन्दिप रायामाझीले दिएको वयान बाट नै देखिन्छ, मलाई रकम दिएको भन्ने जति पनि विवरणहरु छन, त्यसमा कुनै आधार र सत्यता छैन, निजले ठुलो रकमको चेक काटेर आफ्नै घरमा राखेको सवाल होस वा आफ्नो डायरीमा बिभिन्न प्रकारका रकमहरु के-कुन प्रयोजनका लागी लेखेका हुन मलाई जानकारी भएन। प्रतिवादी केशव प्रसाद दुलाल र सानु भन्डारीले हामीहरुको भेटघाट नभएको धेरै समय भयो, व्यवसायिक साथीहरुले हेलीको व्यवस्था गरेका छन, गोसाईकुण्ड गई फ्रेस भएर आउनु पर्‍यो भनी मलाई प्रतिवादी केशव प्रसाद दुलालले आग्रह गरेको र मैले समय छैन भन्दा निजहरुले धेरै समय लाग्दैन जान आउन ३० मिनेट, १५ मिनेट घुम्न गरी जम्मा ४५ मिनेट मात्र हो भनेको हुँदा म निजहरुको कुरामा सहमत भई गोसाईकुण्ड गई फोटो खिचाई फर्किएका हौ। म सो ठाउँमा घुम्न जादाको अबस्थामा मैले सामान्य रुपमा लिएको थिए। ईन्द्रजीत राईलाई मैले पहिले देखी चिनेका व्यक्ति हुन्। काम विशेषले गृह मन्त्रालय जाँदा मैले प्राय:ईन्द्रजीत राईलाई नै बढी भेट्ने गरेको थिए। मिति २०७७।०९।१६ गते म आफ्नै काम विशेषले गृह मन्त्रालय गएको बखत स्वकिय सचिवको कार्यालयमा बसिरहेको अवस्थामा इन्द्रजीत राईको कार्यकक्षमा छलफल हुँदा ठुलो स्वरमा आवाज आएको हुँदा म पनि निजको कार्य कक्षमा छिरे, त्यहाँ जाँदा ईन्द्रजीत राई, सानु भण्डारी र केशव प्रसाद दुलाल बीच लेनदेन सम्बन्धि बिबाद भएको सुनेको हुँ, कार्यकक्षबाट बाहिर आए पछी सानु भण्डारी र केशव प्रसाद दुलाललाई डुप्लिकेट काम गरेका त छैनौ ? भनी सोध्दा निजहरुले हामी पूर्वका मानिस हौ, शरणार्थीका लागी पनि हामीले डुप्लिकेट काम गर्छौं होला भनी प्रति प्रश्न गरेका थिए। ईन्द्रजीत राईलाई सानु भण्डारी सँग मैले परिचय गराई दिएको भन्ने कुरा सत्य होईन। भुटानी शरणार्थीको विषयमा कार्यदल बनाउने सम्मको कुरा मलाई थाहा छ, उक्त समितीका संयोजक बालकृष्ण पन्थी मेरो छिमेकी जिल्ला र सह-सचिव समेत भएको हुँदा चिनजान थियो। मैले यो विषयमा सुरू देखी नै आफ्नो धारणा स्पष्ट राख्दै आएको छु, वाँकी रहेका पिडीत भुटानी शरणार्थीहरुको दिर्घकालिन समस्याको समाधन हुनु पर्दछ भन्ने मेरो धारणा रही आएको छ। गैह्र भुटानी शरणार्थीलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्यले नेपालको अन्तराष्ट्रिय छवी उपर अपमान हुन्छ भन्ने मलाई लाग्छ।मेरो छोरा पक्राउ परी हतकडी लगाएको खबर सुनेकोले आफुलाई पनि पक्राउ गरी हतकडी लगाउँछन भन्ने लागेकोले मन विग्रिएको हुँदा केही अवधि सम्पर्क विहिन भएको थिएँ, सोही क्रममा प्रहरीले खोजतलास गर्ने क्रममा पक्राउ परेको हुँ। कदम रोकिएको मात्र हो, आफै सम्पर्कमा आउने क्रममा थिएँ भनी प्रतिवादी टोप बहादुर रायमाझीको बयान।

२३. **<u>प्रतिवादी बालकृष्ण खाँणको बयान:</u>**

प्रतिवादीहरु मध्ये टेक नारायण पाण्डे नेपाल सरकारको सचिव भएको कारण चिनेको हुँ, नरेन्द्र के.सी.मेरो निजी सचिव थिए, टोप बहादुर रायमाझी संबिधान सभा सदस्य, प्रतिनिधी सभा सदस्य र पूर्व मन्त्री समेत भएकोले

चिनजान छ। म मिति २०७८ साल असार महिनाको २९ गते देखी मिति २०७९ पौष महिना सम्म गृहमन्त्रीको रुपमा काम काज गरेको हुँ। म गृह मन्त्री रहँदा संविधान र कानूनको अधिनमा रही देशमा शान्ति सुरक्षा अमनचयन, कायम गर्ने लगायत मन्त्रीले गर्नु पर्ने काम ईमान्दारीपूर्वक सम्पादन गरेको हुँ। बरामद कालो रङको डायरीमा लेखिएको अंक र अक्षर मेरो हो। सो वाहेक अन्य थप २ वटा कालो रङ, एउटा खैरो रङको डायरी र सम्पत्ति बिवरण भरीएका पाना-३८ समेत मेरो हो। भुटानी शरणार्थी सम्बन्धी समस्याको स्थाई र दीर्घकालिन समाधानको उपायहरू पहिल्याउन बनेको बालकृष्ण पन्थीको संयोजकत्वमा गठित कार्यदलले पेश गरेको प्रतिबेदन सोही कार्यदलका साथै सम्बन्धित निकाय र महाशाखालाई जानकारी होला।गृहमन्त्रालयको च.नं.८४३ मिति २०८०।१।२६ गतेको पत्र साथ प्राप्त कागजातहरू हेर्दा मिति २०७६।०७।०१ मा समितीले प्रस्तुत गरेको उपरोक्त प्रतिवेदनमा संयोजक बालकृष्ण पन्थी, विज्ञ गणेश बहादुर के.सी.रहेको २ जनाले दस्तखत गरेको प्रतिवेदनमा, तत्कालिन मन्त्रीले तत्कालीन सचिवको नाममा प्रतिवेदनको अध्ययन तथा कार्यान्वयन अगाडी बढाउन हुन भनी तोक लगाई अगाडी बढाएको देखिन्छ, भुटानी शरणार्थी समस्या स्थायी समाधानका उपायहरू पहिल्याउन गठित पूर्ब सह सचिब बालकृष्ण पन्थिको संयोजकत्वको कार्यदलले दिएको प्रतिबेदन तत्कालिन गृह मन्त्रीको पालामा लिने कार्य भएको। भुटानी शरणार्थी समस्या स्थायी सामाधानका उपायहरू पहिल्याउन गठित कार्यदलले दिएको प्रतिबेदन उपर थप छलफल भए पश्चात गरिएका निर्णयहरु कार्यान्वयनका लागी नेपाल सरकार, मन्त्रीपरिषद समक्ष प्रस्ताव पेश गर्न म बाट मिति २०७८।०८।१२ मा स्वीकृत दिई सो प्रस्ताव मन्त्रीपरिषदमा पेश भएको हो। नेपाल सरकार कार्य सम्पादन नियामावली अनुसार सम्बन्धित विभागले प्रस्ताव उठाउने, सचिवले प्रस्ताव प्रस्तुत गर्छन, मन्त्रीले सदर गर्ने र मन्त्रीपरिषदले प्रस्ताव पारित गर्ने गरिएको छ। भुटानी शरणार्थी सम्बन्धी समस्या समाधानको उपायहरुको सम्बन्धमा प्रस्ताव मन्त्रीपरिषदमा पेश भयो। कागजातहरु के-के पेश भए मलाई अहिले सम्झना भएन। नेपाल सरकार कार्य सम्पादन नियामावलीले मन्त्री, सचिव र अन्य पदाधिकारीहरुको कार्य क्षेत्र तोकेको छ। मन्त्रीले आफ्ना केही अधिकार सचिवलाई समेत प्रत्यायोजन गरिएको हुन्छ। तसर्थ मन्त्रालयको अभिलेखहरुको सुरक्षा गर्ने जिम्मेवारी समेत तोकिएको छ, एउटै प्रतिवेदनको एउटै विषयमा फरक व्यहोरा हुन सक्तैन। मन्त्रालयको कागज पत्र, प्रतिवेदन, सम्झौता लगायत बिभिन्न अभिलेख राख्ने निकाय छुट्याईएको हुन्छ, यो मन्त्रालयको प्रशासनिक जिम्मेवारी हो। पूर्ववर्ति सरकारले भुटानी शरणार्थी समस्या स्थायी सामाधानका उपायहरू पहिल्याउन गठित कार्यदलको प्रतिबेदन तत्कालीन गृहमन्त्रीले बुझी कार्यान्वयनकालागी अगाडी बढाएको अवस्थामा भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधानको उपाय सम्बन्धमा मन्त्रीपरिषदमा उक्त समयमा नै प्रस्ताव प्रस्तुत गरेको हो। उक्त प्रस्तावलाई नै निरन्तरता दिएको हो। म गृहमन्त्री भए पछी देशमा शान्ति सु व्यवस्था र अमनचयनकालागी गृहमन्त्रालयका उच्च पदाधिकारी र जिम्मेवार अधिकृतहरुलाई निर्देशन दिंदै आएको सर्वविदितै छ। यसै सन्दर्भमा भुटानी वा तिब्बती शरणार्थीहरुले कुनै अवान्छनिय गतिविधी नगरून भनी त्यसका लागी पनि निर्देशन दिंदै आएको हुँ। शरणार्थीहरुलाई मानवीय प्रवन्ध गर्नु राज्यको दायित्व हो, पछिल्लो पटक भुटानी शरणार्थीहरुलाई अन्तराष्ट्रिय दात्र निकायहरुले सहयोग रोकेको अवस्थामा उनीहरुलाई जीवन जिउन असहज भएकोले त्यसलाई ध्यानमा राखेर शरणार्थीहरुले पनि सरकारी वा सामुदायिक विद्यालयहरुमा पढ्न पाउने, आधारभूत स्वास्थ्य सेवाको अवसर प्रधान गर्नुका साथै सरकारी अस्पतालमा उचारको सुविधा प्रदान गर्ने, प्रचलित कानूनको अधिनमा रही, कानूनको पालना गर्ने गरी स्थानिय तहको स्वीकृतमा सामान्य व्यापार व्यावसाय गर्नुका साथै कृषिजन्य उत्पादन गर्न सामुहिक खेतीका लागी जग्गा

लिजको प्रबन्ध गर्ने लगायतका व्यावस्था गरी उनीहरुको जीवन जीउन सहज बनाउन मन्त्रीपरिषदले भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधनको उपायहरुको सम्बन्धमा प्रस्ताव पास गरीएको हो । यो प्रस्ताव भुटानी शरणार्थीहरुको व्यवस्थापनका लागी असल मनसायले गरिएको हो । शरणार्थीका नाममा अवान्छनिय गतिविधी रोक्नका साथै कसैलाई पनि भ्रममा नपर्न मन्त्रालयले बिभिन्न समयमा परिपत्र समेत गरेको थियो । यसै सन्दर्भमा जिल्ला प्रशासन कार्यालय झापा शरणार्थी समन्वय ईकाई बेलडाँगी झापाबाट मिति २०७८।०८।०३गते भुटानी शरणार्थी शिविर बेलडाँगीका सम्पूर्ण शिविर बासीहरुलाई सूचना निकाली जानकारी समेत गराईएको, यसै गरी समय-समयमा निर्देशनहरु पठाई रहेको हो । भुटानी शरणार्थीको नाममा नेपालीहरूलाई मिसाई भुटानी शरणार्थी बनाई तेश्रो देश पठाई दिन्छौ भनी रकम लिएको भन्ने आरोपमा मेरो संलग्नता छैन, मोवाईल नं. मेरो हो, फ्याक्ट्री रिसेट कसरी भयो मलाई थाहा भएन । म गृहमन्त्रीको ओहोदामा हुँदा तथा मन्त्रीको ओहोदामा नहुँदा समेत नेपालको छवी उच्च राख्ने काम गरेको छु । कोभिडको समयमा भुटानी शरणार्थी तथा तिब्बतियन शरणार्थी समेतलाई भ्याक्सिन लगाउन नेपाली नागरिकता हुनु पर्ने अवस्थामा समेत मैले पहल गरी निजहरुलाई भ्याक्सिन लगाउने कार्य गरेको हुँ । जसको अन्तराष्ट्रिय समुदायले समेत प्रशंसा गरेका थिए । गैह्र भुटानी शरणार्थीलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्य ठिक होईन, मैले सो कार्य सोच्न पनि सक्तिन भनी प्रतिवादी बालकृष्ण खाँणको बयान ।

२४. **<u>प्रतिवादी शमसेर मियाँले गरेको बयान</u>**:

मैले केशव प्रसाद दुलाल, सानु भण्डारी, डा. ईन्द्रजीत राई, टेक नरायण पाण्डे, सन्देश शर्मा,सन्दिप रायमाझी, नरेन्द्र के.सी, बालकृष्ण खाँण, टोप बहादुर रायमाझी र टंक कुमार गुरूङ समेतलाई राम्रोसँग चिन्दछु । टोप बहादुर रायमाझी पुर्व नेता हुनु हुन्छ, बाल कृष्ण खाँण तत्कालीन गृहमन्त्री तथा मेरो क्षेत्रको नेता हुनु हुन्छ, डा.ईन्द्रजित राई तत्कालिन गृहमन्त्री राम बहादुर थापा (बादल) को सल्लाकार हुन, टेक नारायण पाण्डे तत्कालीन गृह सचिव हुन, केशव प्रसाद दुलाल र सानु भण्डारीलाई मैले सन्देश शर्मा मार्फत चिनेको हो । टंक कुमार गुरूङको ललितपुर बखुण्डोलमा रहेको रिसोर्टमा गई खाजा नास्ता खादा चिनेको र सन्दिप रायमाझी टोप बहादुर रायमाझीको छोरा भएकोले निजहरू सबैलाई राम्रोसँग चिन्दछु । म नेपाल हज समितीको अध्यक्षमा नियुक्ती हुँदा तत्कालिन गृहमन्त्री राम बहादुर थापा (बादल) को कार्यकालमा नियुक्त भएको हुँ । बादलका छोरा प्रतिक थापासँग निज सन्देश शर्मा प्राय: सँगसगै रहने भएकोले निज सन्देश शर्मासँग चिनजान भएको हो । सन्देश शर्मा बिभिन्न ब्यक्तीहरुको सरुवा बढुवा गराउने कार्यमा समेत सक्रिय रहेको देखेको हुँ । प्रतिवादी सानु भण्डारी, प्रतिवादी केशव प्रसाद दुलाल र प्रतिवादी सन्देश शर्मा बीच राम्रो सम्बन्ध थियो । गृह मन्त्रालयका तत्कालिन सुरक्षा सल्लाहकारका रुपमा रहेका प्रतिवादी ईन्द्रजित राईलाई भेट्न बखुण्डोलमा सानु भण्डारी, केसव प्रशाद दुलाल आई रहनु हुन्थ्यो । सन्देश शर्मा मार्फत केशव प्रसाद दुलाल र प्रतिवादी सानु भण्डारी समेतसँग चिनजान भएको हो । निज प्रतिवादी सानु भण्डारी र केशव प्रसाद दुलाललाई गृह मन्त्रालयमा आउन कुनै रोक थिएन । ईन्द्रजित राई, सानु भण्डारी र केशव प्रसाद दुलाल बीच निकै निकटता रहेको मैले देखेको हुँ । म २०७६ सालको पुस महिना देखी नेपाल हज समितीको अध्यक्ष पदमा कार्यरत रही कामकाज गर्दै आई रहेको छु । म हज समितीको अध्यक्ष पदमा टोप बहादुर रायमाझी समेतको सिफारीसमा नियुक्त भएको हुँ । मैले नेपाल सरकार अन्तर्गत गृह मन्त्रालयबाट सरकारी नम्बर प्लेट भएको गाडी थान-१ र चालक समेत उपलब्ध हुदै आई रहेको थियो । म हज कमिटीको अध्यक्ष पदमा नियुक्ति भए पश्चात मलाई गृह मन्त्रालयबाट नम्बर यकिन हुन नआएको प्राडो गाडी उपलब्ध भएको थियो । सो गाडी १ बर्ष जती चढे पश्चात पुन:मलाई बा.१ झ.१५८१

नम्बरको निसान पेट्रोल जिप उपलब्ध भयो । उक्त गाडी ८ महिना चढे पछी कर तिर्न भनी यातायात कार्यालय जाँदा सो नम्बरको अभिलेख भेटिएन । गृह मन्त्रालय अन्तर्गत आन्तरिक सवारी शाखामा गई सो कुरा जानकारी गराउँदा सो गाडीको बास्तविक नम्बर बा.१ झ.१५८१ नभई बा. १ ञ.१५८१ रहेको जानकारी प्राप्त भएकाले मैले निजहरू कै सुझाव अनुसार उक्त बा.१ ञ.१५८१ नम्बरको नम्बर प्लेट राखी चढ्दै आएकोमा सरकारी गाडीमा ईम्बोस्ड नम्बर राख्ने भनी पछी हाल कायम रहेको BAB1405 प्लेट राखी चढ्दै आएको थिए । म हज समितीको अध्यक्ष रहेको बेला मलाई उपलब्ध भएको नेपाल प्रहरीको चालक प्र.ह.रेशम गुरुङ, प्र.ज.मनोज लामा हुन, शसस्त्र प्रहरीका प्र.स.ह.प्रेम गौतम र नेपाल प्रहरीका प्र.स.ह.डोल राज पाण्डे र करारमा राखेका प्रभास परियार भन्ने यम बहादुर परियार रहेका थिए । प्रहरी कार्यालयमा दाखिला हुन आएको BAB1405 नम्बरको गाडी मलाई देखाउँदा देखे, उक्त गाडीनै मैले चढ्ने गरेको गाडी हो, हेरी चिन्ही सनाखत समेत गरी दिए । गाडी म बाहेक हज कमिटीका सदस्यहरू तथा हाल अनुसन्धानको क्रममा पक्राउ परेका सन्देश शर्मा समेतले कहिले काही चढ्ने गरेको थिए । सन्देश शर्माले पारिवारिक समस्या छ भनी उक्त गाडी माग गरेकोले मैले निजलाई केही दिनको लागी गाडी चाहियो भन्दा निजसँग राम्रो सम्बन्ध भएकाले निजले भनेको ठाउँ ललितपुरको होटल हाल पक्राउमा परेका प्रतिवादी टंक गुरुङले सन्चालन गरेको रेष्टुरेन्टमा म समेत कहिले काही खान जाने गरेकाले उक्त रेष्टुरेन्टमा चालक प्रेम कुमार गौतमलाई गाडी छाड्न भनेको हुँ भने निज चालकलाई केही दिनको लागी घरमा बस भनेको हुँ । सन्देश शर्मालाई पटक-पटक ताकेता गर्दा ५/६ दिन पछी मात्र निज सन्देश शर्माले गाडी ल्याई सोही रेष्टुरेन्टमा छाडेको जानकारी दिएकाले चालक प्रेम गौतमलाई उक्त गाडी लिन पठाएको हुँ । गृह मन्त्रालय अन्तर्गत आन्तरिक शाखाबाट वास्तविक नम्बर नै उक्त गाडीमा राख्ने भन्ने सल्लाह भए अनुसार मर्मतका क्रममा गाडीको नम्बर प्लेट समेत वास्तबिक बा.१ ञ.१५८१ नम्बरको प्लेट राखी चालकले गाडी लिई आएका हुन । आज भन्दा २ बर्ष पहिले ललितपुर बखुण्डोलमा रहेको प्रतिवादी टंक कुमार गुरुङको रिसोर्टमा सानु भण्डारी ,केशव प्रसाद दुलाल, सन्देश शर्मा समेत भेटघाट हुँदा नेपाली नागरीकहरूलाई तेश्रो मुलुक समेत पठाउने कार्य हुँदैछ भनी एक आपसमा कुराकानी गरेको मैले सुनेको थिए । गैह्र भुटानी शरणार्थीहरूलाई तेश्रो देश पठाई दिने कार्यमा संलग्न रहेका उच्च पदस्थका कर्मचारीहरू समेत पक्राउ परेको र सोही बिषयमा मेरो नाम समेत जोडीन आएकोले प्रहरीले मलाई पनि पक्राउ गर्न सक्छ भन्ने सोची मैले बोक्ने गरेको IME No.352865670451178 रहेको Iphone 13 Pro max (A2484) Apple कम्पनीको मोबाईल थान-१ मा रहेको सिम कार्ड 9857025699 निकाली उक्त मोवाईल भारतको गोरखपुर भन्ने स्थानमा रहेको खोलामा फ्याँकी दिएको थिए । हाल मैले IMEI No.868932038271495/868932038271503 भएको MI कम्पनीको मोबाईलमा 9857025699 नम्बरको सिम राखी चलाउँदै आएको छु । म समेतलाई प्रहरीले खोजतलास गर्दै छ भन्ने थाहा पाई म डर त्रासमा भागी उक्त मोबाईल फ्याँकेको हो । गैह्र भुटानी शरणार्थीलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्य ठिक होईन, यसमा संलग्न रहेका प्रतिवादीहरुलाई कानून बमोजिम कडा कारवाही हुनु पर्छ, पीडितले न्याय पाउनु पर्छ भनी प्रतिवादी शमसेर मियाँको बयान ।

२५. **प्रतिवादी आङटावा शेर्पाको बयान:**

प्रतिवादीहरु मध्ये केशव प्रसाद दुलाललाई निज सुजाता कोईरालाको निजी सचिव हुँदा चिनेको, सानु भण्डारी जग्गाको र हाईड्रोपावरको काम गर्ने भएको हुनाले निजलाई १६/१७ महिना अघि चिनेको हो । नरेन्द्र के.सी. लाई बालकृष्ण खाँणको पिए भएकोले र बालकृष्ण खाँण नेपाली कांग्रेसको नेता भएकोले चिनेको छु । निजहरु

बाहेक टोप बहादुर रायमाझीको नाम सुनेको हो, अन्य प्रतिवादीहरु सँग मेरो चिनजान छैन । जाहेरवालाहरु समेतका नेपाली नागरिकहरुलाई नक्कली भूटानी शरणार्थीहरु बनाई अमेरिका लैजाने भनी ठगी गरेको कसूरमा सानु भण्डारी र केशव प्रसाद दुलाललाई प्रहरीले पक्राउ गरी हिरासतमा राखे पछि मैले प्रस्तुत ठगी एवं संगठित अपराधको बारेमा थाहा पाएको हो। जिल्ला प्रहरी परिसर टेकुको प्रहरी हिरासतमा रहेका सानु भण्डारी र केशव प्रसाद दुलाललाई निजहरु पक्राउ परि जिल्ला प्रहरी परिसर टेकुको प्रहरी हिरासतमा राखिएको बेला भेटेको हो, के कुन मितिमा भेटेको भन्ने मलाई हाल याद छैन। नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी पीडितहरुबाट प्रतिवादीहरुले रकम लिएको बारेमा मलाई थाहा छैन। म ठगी गर्ने कार्यमा परिपञ्च मिलाउने, रकम लिने र खाने तथा ठगी गरेको रकम राख्ने समेतका कार्यमा मेरो संलग्नता छैन। मैले सानु भण्डारी र केशव प्रसाद दुलाललाई प्रहरी हिरासतमा भेटेको हो। निजहरुलाई भटेर पीडितहरुको रकम फिर्ता गरिदेउ । तत्काल रकम फिर्ता गर्न नसके पछि फिर्ता गर्ने गरी कागज गरेर पनि मिलाउन सकिन्छ । हिरासतमा बसेर मुद्दा मामिला गरेर फाईदा हुँदैन भनेर सम्झाएको हुँ । मैले नरेन्द्र के.सी. बाट रु.१,००,००,०००।-(एक करोड ) रकम लिएको होईन। मैले राजु भण्डारीलाई रु.३०,००,०००।-(तीस लाख) रकम दिएको पनि छैन। राजु भण्डारीलाई मैले चिनेको पनि छैन, भेटेको पनि छैन। मैले चिन्दै नचिनेको र भेट्दै नभेटेको मानिससँग कारोबार र व्यवशायिक साझेदारी हुने कुरै भएन। सानु भण्डारीले १ बर्ष अघि मेरो गर्ज्याङ हाईड्रोपावर कम्पनी लि. रामेछाप र खीम्ति दोश्रोमा लगानी गर्ने कुरा गरेका थिए। तर निजले कुनै लगानी पनि गरेनन। राजु भण्डारीले मबाट रु.३०,००,०००।-(तीस लाख) रकम पाएको भन्ने भरपाईको बारेमा मलाई थाहा छैन। मिति २०८०।०२।०१ गते म जिल्ला प्रहरी परिसर टेकुमा उपस्थित भएपछि मैले अनुसन्धान अधिकृत समक्ष गरेको कुराकानीको भिडियो रेकर्ड देखें , सो कुरा मैले बेहोसी र करकापमा गरेको हुँ। मैले अनुसन्धान अधिकृत समक्ष गरेको कागज पनि मैले बेहोसी र करकापमा गरेको हुँ। राजु भण्डारीलाई मैले भेटेको र चिनेको पनि छैन, तर निजले म बाट रु.३०,००,०००।– (तीस लाख) लिएको भनेर किन लेखाए मलाई थाहा छैन। गैह्र भुटानी शरणार्थीलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्य ठिक होईन, मैले यस्तो कार्य सोच्न पनि सक्तिन भन्ने समेत ब्यहाराको प्रतिवादी आङटावा शेर्पाको बयान।

२६. **प्रतिवादी टेक नाथ रिजालको बयान:**

जाहेरवाला मध्येका प्रेमराज पन्थीलाई म चिन्छु, नेपाली नागरिकहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजाने कार्यमा भूमिका खेल्ने ब्यक्तिका रुपमा म निजलाई ३ बर्ष अघिदेखी चिन्छु। अन्य जाहेरवालासँग मेरो चिनजान छैन । केशव प्रसाद दुलाल र सानु भण्डारीलाई करिव ४ बर्ष अगाडी भुटानी शरणार्थी समस्या समाधानको सन्दर्भमा चिनजान भएको, डा.ईन्द्रजित राईलाई १५ बर्ष अघि देखि चिन्छु, टेक नारायण पाण्डेलाई यस अघि गृह सचिव हुँदा देखेको मात्र हो । राम शरण के.सी.लाई मेरो बिर्तामोडमा भएको घर मर्मतको सिलसिलामा २ बर्ष पहिले देखी चिन्छु, टोप बहादुर रायमाझीलाई ४ बर्ष पहिले झापामा रहेका भुटानी शरणार्थीहरुलाई स्वदेश फिर्ता र तेश्रो मुलुकमा पुनर्स्थापनाको सन्दर्भमा चिनेको हो । यस बाहेक अन्य प्रतिवादीहरुलाई चिन्दिन । जाहेरवाला समेतका नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी पीडितहरुबाट रकम लिने कार्यमा प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी, राम शरण के.सी., प्रेमराज पन्थी, ईन्द्रजित राई र टोप बहादुर रायमाझी संलग्न छन भन्ने मलाई थाहा छ। करिब ४ बर्ष पहिले मलाई सानु भण्डारी र केशव प्रसाद दुलालले टोप बहादुर रायमाझीसँग भेट गराई टोप बहादुर रायमाझीसँग कुरा गराउँदा टोप बहादुर रायमाझी, केशव प्रसाद दुलाल र सानु भण्डारीले नेपालमा बाँकी रहेका

भुटानी शरणार्थीहरु मध्ये तेश्रो मुलुकमा पुनर्स्थापना हुन चाहनेहरुलाई तेश्रो मुलुकमा पुनर्स्थापना गर्ने र केही नेपालीहरुलाई भुटानीहरुकै नाममा अमेरिका समेतका मुलुकमा लैजाने हाम्रो योजना छ, सो मा तपाईले सहयोगी भूमिका खेलिदिनु पऱ्यो भनेर मलाई भनेका हुन। नेपाल सरकारका उच्च ओहदाका मानिसले मलाई त्यस्तो प्रस्ताव गरे पछि मैले सम्पूर्ण भुटानी शरणार्थीहरुको समस्या पूर्ण रुपमा समाधान हुनु पर्छ, नेपालीहरुलाई कहाँ लैजाने र कस्तो ब्यवस्थापन गर्ने भन्ने मेरो बिषय पनि होईन र मेरो पहुँचको कुरा पनि होईन। तर तपाईहरु भुटानीहरुको नाममा नेपालीहरुलाई तेश्रो मुलुक लैजाने हो भने सो बाट भुटानीहरुलाई मर्का नपार्ने र निजहरुबाट रकम नलिने गरी मिलाउन सक्नु हुन्छ भने यसमा मेरो आपत्ति हुने छैन भनेको थिएँ। यसपछि टोप बहादुर रायमाझी, सानु भण्डारी र केशव प्रसाद दुलालले गृह मन्त्रालयका मन्त्री र सचिव समेतसँग कुरा गरी कार्यदल समेत बनाई काम शुरु गरेका हुन। म कसैलाई ठगी गर्ने कार्यमा परिपञ्च मिलाउने, रकम लिने र खाने तथा ठगी गरेको रकम राख्ने समेतका कार्यमा मेरो संलग्नता छैन। नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी पीडितहरुबाट रकम लिने कार्यमा प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी संलग्न छन। सो कार्यमा हाल अमेरिकामा रहेका अशोक पोखरेल पनि सानु भण्डारी र केशव दुलालका मतियार भई रकम लिने दिने कार्यमा संलग्न छन। निजहरुले जाहेरवाला समेतबाट रकम संकलन गरी लिने र संकलन भएको रकम मध्येबाट आफूहरुले ब्यापार बिजनेश समेतमा खर्च गर्ने र सोही रकम मध्येबाट टोप बहादुर रायमाझी, तत्कालिन गृहमन्त्रीका सुरक्षा सल्लाहकार ईन्द्रजित राई, गृह सचिव टेक नारायण पाण्डे समेतलाई दिने गरेको कुरा बाहिर सुनेको हुँ। के कति रकम लिए दिए भन्ने म एकिन साथ भन्न सक्दिन। यस कार्यमा टोप बहादुर रायमाझी यस कार्यको शुरुवातमा योजनाकारको रुपमा रहेका र अशोक पोखरेल, सानु भण्डारी र केशव दुलाललाई सल्लाह दिने, गृह मन्त्रालयमा समन्वय गर्ने र रकम लिने कार्यमा संलग्न छन। यस बाहेक प्रेमराज पन्थी, राम शरण के.सी. समेत भई रकम संकलन गर्ने सानु भण्डारी र केशव दुलाललाई दिने कार्यमा निजहरु संलग्न छन। यस कार्यमा रकम संकलन गर्ने र बाँडी लिने कार्यमा अन्य को को संलग्न छन भन्ने मलाई थाहा छैन। जिल्ला भक्तपुरको सिरुटार घर हुने गोकुल थापा नाम गरेका ब्यक्तिसँग म आजभन्दा २० बर्ष पहिले नेपाल आउँदाका बखत देखी नै चिनजान भएको हो। निजले नेपालीहरुलाई भुटानी बनाई अमेरिका लैजाने भनेर पीडितहरुबाट रकम लिएको बारेमा मलाई थाहा छैन। जाहेरवाला प्रेमराज पन्थीलाई मैले भेटेको होईन। निजलाई मैले अमेरिका लैजाने बारेमा कुनै कुरा गरेको छैन। प्रेमराज पन्थीसँग गोकुलले रकम मागेको र गोकुल थापाले निजलाई रकम फिर्ता गरेको बारेमा मलाई थाहा छैन। यस कामको सन्दर्भमा मलाई प्रेमराज पन्थीले कुनै कुरा गरेको होईन र मैले निर्देशन दिएको पनि होइन। भेषराज शर्मा लम्साल मेरो चिनजानका मानिस हुन। करिब १५ बर्ष पहिले धोबिघाटमा म डेरा बस्दा डेरा बसेको घरको घरधनी भेषराज शर्मा लम्सालका आफन्त भएकोले त्यहीं निजसँग भेट भई साथीको सम्बन्ध भएको हो। करिब ४ बर्ष पहिले केशव प्रसाद दुलाल र सानु भण्डारी मलाई भेट्न झापा गएकोमा निजहरुले मलाई मेरो घरमा नै भेटेका हुन। निजहरुले मलाई भुटानी शरणार्थीहरुको समस्याको बारेमा घुमाउरो शैलीमा कुरा गरी १००/१५० जना नेपाली नागरिकहरुलाई पनि भुटानीको परिचय दिई अमेरिका लैजान सहयोग गर्नु पऱ्यो भन्ने प्रस्ताव गरेका थिए। सो बिषयमा म उक्त काम गर्ने कुनै कार्यकारी वा अधिकारप्राप्त ब्यक्ति नभएको हुँदा कसलाई पठाउने वा नपठाउने बिषयमा मेरो कुनै भूमिका रहने कुरै भएन। तर नेपालमा बाँकी रहेका भुटानी शरणार्थीहरुको अगुवा भएकोले नेपालमा रहेका भुटानीहरुको तेश्रो देशमा पुनर्स्थापना, मानवीय सहायता र भुटान फीर्ताको सम्बन्धमा नेपाल सरकारले उचित पहल कदमी लिएको अवस्थामा को कुन नेपालीहरु भुटानीको नाममा अमेरिका जाने हुन भन्ने

मेरो सरोकारको बिषय नै थिएन । यही ब्यहोरा मैले निजहरुलाई बताएकोमा सो को केही समयपछि केशव प्रसाद दुलाल, भेषराज लम्साल र सानु भण्डारीले नेपालीहरुको Bhutan Human Right Organization को Membership Card बनाएको बारेमा मैले छनक पाएको थिएँ । निजहरुले बनाएको कार्डमा मलाई सही गर्नका लागि अनुरोध गरेकोमा मैले सरकारी तवरमा कुरा नगरी म कार्डमा सही गर्दिन भनेको हुँ तर सो कुरामा मलाई ईन्द्रजित राई र टोप बहादुर रायमाझीले समेत भनेको हुँदा नेपाल सरकारका निजहरु दुवै जनाले नेपालीहरुको नाममा भुटानी कार्ड बनाउँदा कुनै समस्या नपर्ने भनेको, म आफू नेपाल सरकारबाट प्राप्त सुविधामा आश्रित रहेको मानिस भई तत्काल प्राप्त हुनु पर्ने सुबिधाहरु रोकिई रहेको अवस्थामा सो सुविधा समेत प्राप्त हुने आश्वासन समेत प्राप्त भएको तथा सरकारी तवरमा टोप बहादुर रायमाझी र ईन्द्रजित राई मुख्य भई काम गरी रहेका तथा बाहिरबाट तत्काल कर्मचारीहरुको सरुवा बढुवा गराउन, आफ्ना लागी तुरुन्त सेवा सुबिधा लिन सक्ने हैसियतका सानु भण्डारी र केशव प्रसाद दुलाल यस कार्यमा संलग्न भएकोले निजहरुको बिश्वासमा मैले केही कार्डहरुमा सहिछाप गरिदिएको हो । बाँकी कार्डहरु प्रबिधिको दुरुपयोग गरी वा अन्य तवरबाट कसरी बनाए भन्ने मलाई थाहा भएन । जनक कार्कीलाई म चिन्दिन, निज मेरो सल्लाहकार पनि होईनन । नेपालीहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्यमा गोकुल थापा जानकार छन र निजले केशव प्रसाद दुलाल र सानु भण्डारीसँग मिलेर सो सम्बन्धी कार्य गरेका हुन । तर मैले कोही कसैलाई अमेरिका लैजाने भन्ने बारेमा निजसँग कुरा गरेको छैन । गोकुल थापाले राम शरण के.सी.बाट रकम, नागरिकताको फोटोकपी र फोटो लिएको मलाई थाहा छैन । गोकुल थापाबाट मैले कुनै रकम लिएको छैन । राम शरण के.सी. र प्रेमराज पन्थी मेरो घरमा जाने आउने गरी रहने मानिस हुन । राम शरण के.सी.ले गोकुल थापा, सानु भण्डारी र केशव प्रसाद दुलालले निजहरु समेतबाट निजहरुलाई अमेरिका लैजाने भनी रकम लिएको र काम नगरेको भनेर गुनासो गर्ने गरेका हुन । तर म निजहरुबाट रकम लिने कार्यमा संलग्न छैन । निजहरु वीचको लेनदेनको बारेमा मलाई थाहा भएन । करिब ६ बर्ष पहिले राम शरण के.सी.मेरो घरमा गई नेपालीहरुलाई नक्कली भूटानी बनाई अमेरिका लैजाने हाम्रो योजना छ, तपाईले मद्दत गरी दिनुहोस भन्न आएका थिए । मैले सो बेला सख्त ईन्कार गरेको थिएँ । सो पछि पनि निज राम शरण के.सी.ले मलाई पटक-पटक सो बारेमा फोनबाट अनुरोध गरिरहेका थिए । पछि गोकुल थापा मार्फत नेपालीहरुलाई नक्कली भूटानी बनाई अमेरिका लैजाने सम्बन्धी काम गरी रहेका सानु भण्डारी र केशव दुलालसँग मेरो भेट भई कुरा भएपछि मैले राम शरण के.सी.लाई भेषराज शर्मा लम्साल र केशव दुलालसँग चावहिलको A1(एवान) पार्टी प्यालेसमा भेट गराई दिएको हो । सो पश्चात पनि राम शरण के.सी.को काम समयमा नभएपछि मलाई राम शरण के.सी.ले सो बारेमा गुनासो गर्ने गरेका हुन । मैले निजसँग रकम लिएको र निजलाई ठगी गरेको छैन । मैले राम शरण के.सी. समेतका ३४ जना व्यक्तिहरुको भुटानी शरणार्थी कार्ड (परिचय पत्र) बनाई दिने भनी कार्डहरु लिएको होईन । राम शरणबाट केशव दुलाल र सानु भण्डारीले कार्डहरु लिई मलाई सहि गराएको हुन सक्छ । मैले कोही कसैबाट रकम लिएको होईन । मैले राम शरण के.सी. लागयत कोही कसैसँग रकम लिएको छैन, यो सबै झूठ्ठा हो । मैले कार्डहरु बनाएको होईन, केशव प्रसाद दुलाल र सानु भण्डारीले मलाई दिएका केही कार्डहरुमा सहि सम्म गरेको हो । मैले कुनै कार्डहरु जलाएको र जलाउन लगाएको होईन । केही कार्डहरुमा केशव प्रसाद दुलाल र सानु भण्डारीले सहि गराएका हुन । कुन कुन कार्डहरुमा मैले सहि गरेको थिएँ भन्ने हाल एकिन साथ भन्न सक्दिन, लक्ष्मी कोईराला, कृष्ण कोईराला, राम शरण के.सी. र प्रेम पन्थीका विरुद्धमा मैले प्रहरी बृत्त गौशालामा निवेदन दिएको हो । प्रेमराज पन्थी र लक्ष्मी कोईराला सहित झापा बिर्तामोडका ६/७ जना मानिसहरु मेरो झापा घरमा गई हामीहरुको रकम

चाहियो भनेर हुल हुज्जत नै गर्न लागेपछि मैले "तिमिहरुको रकम मैले कहिले लिएको हो ? प्रमाण बिना मेरो घरमा घेर्न आएका हौ ? " भनेपछि निजहरु मेरो घरबाट गए। मेरो घरमा जाने मानिसहरु लक्ष्मी कोईराला र प्रेम पन्थी तथा रकम लेनदेन रहेका भनीएका कृष्ण कोईराला र राम शरण के.सी. भएकोले मैले निजहरु बिरुद्ध प्रहरी बृत्त गौशालामा निवेदन दिएको हो। निवेदन उपर छलफल हुँदा राम शरण के.सी. र लक्ष्मी कोईराला गौशाला गएका थिए। सो बेला राम शरण के.सी.ले म बाट रु.१,३०,०००।–(एक लाख तिस हजार) रकम पाउनुछ भनेर जिकिर लिएका थिए। मैले राम शरणलाई औषधी समेत किनाएको रकम रु.१,३०,०००।–(एक लाख तिस हजार) दिनु पर्नेमा सो रकम म दिन्छु भनेपछि प्रहरीले रकमको कुरा बाहिरै मिलाउनु होस भनेर हामीहरुलाई पठाएका हुन । सानु भण्डारीले नेपालीहरुलाई भुटानी बनाई अमेरिका लैजाने सन्दर्भमा मलाई काठमाण्डौ बोलाउँदा, होटलमा राख्दा, खाना समेतको खर्च बापतको रकम आफ्नो डायरीमा टिपेर राखेको हो। ईन्द्रजित राई, म र केशव प्रसाद दुलालको फोटो गृह मन्त्रालयमा खिचिएको फोटो हो । म र केशव दुलाल गृह मन्त्रालयमा गई ईन्द्रजित राईसँग भेटेको बेला ईन्द्रजित राईको कार्यकक्षमा खिचिएको फोटो हो । सो बेला ईन्द्रजित राई र म गइ सचिव र गृह मन्त्रीलाई भेटेर भुटानी शरणार्थी सम्बन्धी बिषयमा कुरा भएको थियो । ईन्द्रजित राई र केशव दुलालसँग खिचिएको मेरो उक्त फोटो देखाई मसँग सम्बन्ध भएको भन्ने बिश्वासमा पारि जाहेरवाला समेतका मानिसहरुबाट निजहरुलाई अमेरिका लैजाने भनी रकम संकलन गर्ने माध्यमको रुपमा सो फोटो दुरुपयोग गरेको कुरा मैले पछि थाहा पाएँ। नेपाली नागरिकहरुलाई नक्कली भूटानी शरणार्थीहरु बनाई यति बिघ्न रकम संकलन गरेको र ठगी भएको होला भन्ने कुराको जानकारी मलाई पहिले थिएन। टोप बहादुर रायमाझी र ईन्द्रजित राई सरकारी निकायकै तर्फबाट यस प्रकरणमा सकृय रहेको साथै केशव प्रसाद दुलाल र सानु भण्डारी सरकारी निकायमा उच्च सरकारी कर्मचारीहरुको सरुवा बढुवा गराउन सक्ने पहुँच बनाएका ब्यक्तिहरु नै संलग्न रहेको मानिसहरु सकृय रहेका कारण सरकारी तवरबाटै उक्त काम भएको कुरामा मलाई बिश्वास भयो भने म भुटानी शरणार्थी भई नेपाल सरकारको सुविधामा बसिरहेको मानिसले नेपालको सरकारी तवरबाटै भएको कार्यको बारेमा कहीकतै उजुवाजुर गर्नु उचित नलागेको र यस्तो परिस्थितीमा मैले औपचारिक रुपमा कहिंकतै उजुरवाजुर गर्ने ठाउँ नै नपाएको हो। म नेपालीहरुलाई नक्कली भुटानी बनाई अमेरिका लैजाने कार्यको शुरुवातदेखी नै बिरोध गरिरहेको मानिस हो। तर यस अघि नेपालमा रहेका भुटानीहरुलाई तेश्रो देशमा लैजाँदा केही नेपालीहरु घुसेर भुटानीको नाममा अमेरिका समेतका मुलुकमा गएकै हुन। सो कुराको जानकारी नेपाल सरकार समेतलाई हुनु पर्ने हो। म एक भुटानी शरणार्थीको रुपमा नेपालमा आश्रय लिईरहेको मानिसले नेपाल सरकारका उच्च पदस्थ ब्यक्तिहरुको संलग्नता र उपस्थितीमा भएको नेपालीहरुलाई नक्कली भूटानी बनाई तेश्रो मुलुक लैजाने कार्य रोक्न सक्ने मेरो सामर्थ्य बाहिरको कुरा थियो । मैले नेपालीहरुलाई नक्कली भुटानी बनाई अमेरिका लैजाने कुरा रोक्ने कार्य मेरो पहुँच भन्दा बाहिरको बिषय भएकोले रोक्न नसकेको मात्र हो, तर मैले यसबाट कुनै फाईदा लिएको, बदनियत राखी सो कार्यमा संलग्न भएको होईन। नेपाल सरकारबाट भुटानी शरणार्थीहरुको नाममा नेपालीहरुलाई नक्कली भुटानी बनाउने कार्यमा नेपाल सरकारले गठन गरेको कार्यदलको प्रतिवेदन नै सहयोगी रहेको र सो प्रतिवेदन बुझ्ने र कार्यान्वयन गर्ने पदाधीकारीहरुलाई जानकारीमा रहेको भन्ने मैले बुझेको छु। यस्तो कार्य गर्ने सरकारी निकायका पदाधीकारी र अन्य संलग्न नेपालीहरु नै यसमा जिम्मेवार छन। सानु भण्डारी, अशोक पोखरेल र केशव दुलालले डिजाईन गरेर नेपालीहरुलाई नक्कली भुटानी बनाई अमेरिका लैजाने भनेर रकम संकलन गरेका हुन र पछि सो कार्यमा प्रेमराज पन्थी र राम शरण के.सी. पनि जोडिएका हुन भने सरकारी तवरबाट ईन्द्रजित राई, टोप बहादुर रायमाझी, टेक नारायण पाण्डे र तत् समयका

अन्य पदाधिकारी संलग्न छन । अन्य को-को भई कसरी नेपालीहरुलाई नक्कली भुटानी बनाई अमेरिका लैजाने कार्य गर्नका लागि रकम संकलन गरे र कस- कसको कति कति रकम ठगी भयो तथा ठगीको रकम कसले कसले लियो भन्ने बारेमा मलाई थाहा छैन । म ठगी गर्ने तथा सो को लागि संगठन बनाउने र परिचालन गर्ने समेतको कार्यमा संलग्न छैन । सुमित्रा पौडेल मेरो चिनजानको एकल महिला हुन, निजलाई केशव प्रसाद दुलाल र सानु भण्डारीले अमेरिका पठाउने भनी निजबाट रकम लिएर का नगरेकोले निजले सो बारेमा मसँग चासो राखेकी हुन । गैह्र भुटानी शरणार्थीलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्य ठिक होईन , यस्तो कार्य मबाट भएको होईन भन्ने समेत ब्यहोराको प्रतिवादी टेकनाथ रिजालको बयान ।

२७. **प्रतिवादी केशव प्रसाद दुलालको थप बयान:**

जाहेरवाला प्रेमराज पन्थीलाई मैले चिनेको छैन । टंक गुरुङको रेस्टुरेन्टमा मेरो टोप बहादुर रायमाझी, निजका पिए लिला जि.सी.भेष राज शर्मा लम्साल,सन्देश शर्मा र गृह मन्त्रालयका कर्मचारी हु भन्ने ब्यक्तीहरू कोही कसैसँग मेरो भेटघाट, मिटिङ भएको छैन । टोप बहादुर रायमाझी र ईन्द्रजित राई सँग लाजिम्पाटको साँग्रिला होटलमा भेटघाट कुराकानी भएको छैन । प्रेमराज पन्थीलाई २०७७ सालको असोज महिनाको ८/१० गते बोलाएको भन्ने कुरा झुठा हो र बोलाउने कुरा नै भएन । प्रतिक थापा तथा जाहेरवाला प्रेम राज पन्थी सँग जोरपाटीमा जाहेरवालाले भनेको मितिमा मेरो कुनै भेट घाट तथा सम्पर्क भएको छैन । नक्कली भुटानी शरणार्थी बनाई अमेरीका पठाई दिने कुरा र काम अगाडि बढ्छ भन्ने केही कुरा भएको छैन । प्रेम राज पन्थीको रु.१,००००००।-(एक करोड) र राम शरण के.सी.को रु.१,५०,००,०००।-(एक करोड पचास लाख) जेब्रा झोलामा राखी मलाई दिएको भन्ने कुरा झुठ्ठा हो । म निलगिरी रेष्टुरेन्टमा जाहेरवालाले उल्लेख गरेको मितिमा गएकै छैन । म नगएको अवस्थामा जाहेरवाला र राम शरण के.सी.सँग रकम लिने कुनै कुरै भएन । प्रेमराज पन्थीले नाम उल्लेख गरेका भेषराज शर्मा लम्सालसँग समेत मेरो कुनै चिनजान सम्पर्क छैन । चिनजान सम्पर्क नै नभएको ब्यक्ती सँग काठमाण्डौमा होटलका २ वटा कोठा लिएको छैन र लिने कुनै कुरा भएन । जाहेरवालाको फारम भराई मैले कुनै रकम लिएको छैन । जाहेरवालाले दाबि गरेको अरुण रेग्मी भन्ने ब्यक्ती सँग समेत मेरो कुनै चिनजान सम्पर्क छैन । चिनजान सम्पर्क नै नभएको ब्यक्तीलाई ईन्भेष्टमेन्ट बैकमा रकम रु.३,०००००।-(तिन लाख) जम्मा गरीदिने कुनै कुरै भएन । जाहेरवाला लगाएतका ब्यक्तिहरूले जम्मा गरेको रु. १,१९,५०,०००( एक करोड उन्नाईस लाख पचास हजार रुपैया) भेषराज शर्मा लम्साल र प्रेम राज पन्थीले बैक खाता मार्फत सानु भण्डारीको खातामा जम्मा गरेको रकमका सम्बन्धमा मलाई केही थाहा छैन । भेष राज लम्सालले सानु भण्डारीको खातामा जम्मा भएको अन्य रकम का सम्बन्धमा समेत मलाई कुनै जानकारी भएन, टेक नाथ रिजालले दस्तखत गरेको भुटानी शरणार्थीहरूको कार्डको बिषयमा मलाई केही थाहा भएन । जाहेरवालाले भने अनुसार मन्त्री सचिवको नाम लिएर सबै कुरा भई सक्यो बायोमेट्रिक गर्नु पर्छ भनी कुनै कुरा गरेको छैन । बायोमेट्रिक गर्नु पर्छ भनी जनही रु.१०,०००००।-(दश लाख) रकम निजहरू सँग लिई ठगी गरको छैन । म स्वयम प्रेम कुमार राई र ईन्द्र जित राईले भुटानी शरणार्थी बनाई अमेरीका पठाई दिन्छु भनी रकम लिई ठगीएको पीडित ब्यक्ति हु । मेरो रकम फिर्ता गराई न्याय दिलाई पाउ । पुर्व गृह मन्त्री र पुर्व गृह सचिव टेक नारायण पाण्डे हाम्रा मान्छे हुन भनी जाहेरवाला सँग कुनै कुरा गरेको छैन । जाहेरवाला सँग कुनै रकम नलिएको हुदा रकम फिर्ता गर्ने कुरा भएकै छैन जाहेरवालाले दाबी गरेको कुरा कपोकल्पित र झुठ्ठा हो । जाहेरवालालाई मैले गृह सचिब टेक नारायण पाण्डेकोमा लिई गएको होईन । निज सँग रकम लिई गृह सचिवलाई मैले कुनै रकम दिएको छैन । जाहेरवालाले दाबी गरे अनुसार २०७९।५।२९ गते मोरङ जिल्लाको सुन्दर हरैचा नगरपालिका

वडा न. ४ स्थित रहेको गोकर्ण रिसोर्टमा म गएको छैन। निज जाहेरवाला समेत २२/२३ जनाको बायोमेट्रिक गराएको भन्ने कुरा कपोकल्पित र झुठ्ठा हो। मैले कसैको बायोमेट्रिकक गराएको छैन। भुटानी शरणार्थी बनाई अमेरीका लगी दिने भनी प्रेमराज पन्थी समेतसँग मैले रु. ३,६६,०००००।- नगदै लिई ठगी गरेको छैन। प्रेमराज पन्थीले मलाई यस मुद्धामा मेरो चरित्रहत्या र फसाउने सड्यन्त्र गरी जाहेरी दिएका हुन यसमा कुनै सत्यता छैन। म र मेरो आफन्तलाई राम बहादुर थापा बादल, प्रेम कुमार राई, ईन्द्रजित राई, राजेश बज्रचार्य, प्रतिक थापा, सन्देश शर्मा, डा.अजय क्रान्ती शाक्य, राजेश्वर बज्रचार्य समेतले भुटानी शरणार्थी बनाई अमेरीका पठाई दिन्छु भनी रकम लिई म आफै ठगीएको पीडित ब्यक्ती हु मैले कोही कसैलाई भुटानी शरणार्थी बनाई तेश्रो मुलुक पठाई दिन्छु भनी कोही कसैसँग कुनै रकम लिएको छैन। म अनुसन्धानको क्रममा हिरासतमा रहेको अवस्थामा मैले आङटावा शेर्पालाई भेटेको छैन भन्ने समेत ब्यहोराको प्रतिवादी केशव प्रसाद दुलालको थप बयान।

२८. **प्रतिवादी राम शरण के.सी.को थप बयान:**

मिति २०७८।०८।१३ गते मन्त्री परिषदको बैठकबाट भुटानी शरणार्थी सम्बन्धी केही हामीलाई काम लाग्ने निर्णयहरू हुन लागेको छ। उक्त निर्णय गराउन बेचन झा ले केही रकमहरू मागेका छन उनीलाई चेक काटी दिनु भनी प्रतिवादी सानु भण्डारीले भने पछी मेरो नाममा हिमालयन बैकमा रहेको खाताबाट बेचन झाको नाममा रु.२,००,००,०००।-(दुई करोड) को चेक काटी मेरो दस्तखत समेत गरी उक्त चेक बेचन झालाई काठमाण्डौ स्थित बानेश्वर ह्वाईट हाउस अगाडी बाटोमा मिति २०७८ मंसिर ८ गते राती २०:०० बजे तिर भेटी दिएको हुँ। उक्त चेकको फोटो समेत खिची मेरो साथी प्रेमराज पन्थी लाई पठाएको तथा म पक्राउ पर्नु भन्दा अगाडी मेरो साथी पबिता राईलाई सो घटना सम्बन्धमा प्राप्त भएको कागजातहरू सुरक्षीत साथ राख्न दिएकोमा निजले अनुसन्धानको क्रममा पेश गरेको हुदा सो चेकको बिवरण खुल्न आएको हो। बेचन झालाई चेक दिदा मेरो मोवाईलमा उक्त चेक दिईएको भिडियो समेत खिचेकोले उक्त भिडियो आवश्यक परेमा पछी पेश गर्न सक्छु। सानु भण्डारीले भुटानी शरणार्थीमा अमेरीका पठाउने कार्यको लागी मन्त्री परिषदबाटै बेचन झाले केही निर्णयहरु गराउछन उक्त निर्णयहरुको आधारमा अमेरीका तथा तेस्रो मुलुकमा सुकुमबासी पठाउन सजिलो हुन्छ भनेर सानु भण्डारीले भनेको उक्त रकम मैले चेक मार्फत दिएको हु। २०७८।०८।१३ गतेको मन्त्रीपरिषदको निर्णयको (क) र (ख) बुदा हाम्रो लागी काम लाग्ने बुँदा हो भनी सानु भण्डारीले बताएको थिए। म समेत भुटानी शरणार्थीमा अमेरीका जाने भनी निज सानु भण्डारी सँग कुराकानी हुदा भुटानी सरणार्थीमा अमेरीका जान लाग्ने खर्च माग गरेको हुदा सानु भण्डारीको नाममा ललितपुरमा रहेको घर जग्गा र मेरो आमाको नाममा काठमाण्डौ जिल्ला टोखा नगरपालिका वडा नं.६ मा मैया के.सी.को नाममा रहेको घर जग्गा समेत ईन्द्रजित राईको छोरा निरज राईले वकिल ल्याई थापाथली स्थित ब्लुबड होटलमा बसी निरज राईले बैनाको कागज सानु भण्डारी र म राम शरण के.सी. समेतको नामबाट बैना कागज गराई सानु भण्डारीले आफ्नो नाममा हिमालय बैकमा रहेको खाताको चेकबाट ३,००,००,०००।-(तिन करोड) निरज राईको नाममा काटी चेक दिएको थियो। निज सानु भण्डारी र ईन्द्र जित राई र निजको छोरा निरज राई समेतले भुटानी शरणार्थी कामको लागी ग्यारेन्टी चाहिने भएकोले उक्त घर जग्गाको कागज म समेतलाई राखी रकमको श्रोत देखाउनेको लागी निरज राईको नाममा सानु भण्डारीले चेक काटी दिएका हुन। उक्त चेकबाट रकम भुक्तानी लिएको हुनु पर्छ। सानु भण्डारी तथा ईन्द्रजित राई तथा निजका छोरा निरज राई समेतले नेपालीहरूलाई भुटानी शरणार्थी बनाई अमेरीका लाने भनी बिभिन्न ब्यक्तीहरू सँग नगद रकम उठाई उक्त रकमको स्रोत देखाउन तथा मलाई अमेरीका पठाउन भनी मैले दिनु पर्ने रकम घर जग्गा बिक्री गरी दिएको भनी बिश्वास पार्न सानु भण्डारी ,ईन्द्रजित राई तथा निजका छोरा निरज राई

समेतले योजना बनाई सानु भण्डारीले आफ्नो नाममा रहेको बैक खाताबाट निरज राईको नाममा धेरै जग्गा बैना गरेको भनी भम्र पारी रकम श्रोत खुलाउनको लागी रकम दिएको हो भन्ने समेत ब्यहोराको प्रतिवादी राम शरण के.सी.को थप बयान ।

**२९. प्रतिवादी सागर राईले गरेको थप बयान:**

जाहेरवाला सुरज घिमिरेलाई मेरो साथी बिजय कार्की मार्फत चिनजान भएको हो । जाहेरीको विरुद्ध खण्डमा उल्लेख भएको बिनिता सावदेन लिम्बु मेरो भाई बुहारी हुन भने सुनिल बुढाथोकी मेरो साथी भाई बिजय कार्कीको भिनाजु हुन । निजसँग मेरो भेटघाट नभए पनि कहिले काही फोन सम्पर्क मार्फत कुराकानी भएको थियो । मैले जाहेरवालालाई भुटानी शरणार्थी बनाई अमेरीका पठाई दिन्छु भनी रकम माग गरेको होईन । निज सँग आफ्नो जग्गा खरिद गर्न भनी लिएको रकम हो । उक्त रकम भारतको आसाम बस्ने मित्र रोशन पौडेलले रकम लिई फरार भएको र निज अहिले सम्म सम्पर्क बिहिन रहेको छ । आठ लाखको साथै मेरो अन्य रकम रु.१,०५,००,०००।- (एक करोड पाच लाख ) पनि म सँग लिई गई हाल सम्म सम्पर्क बिहिन रहेको छ । रोशन पौडेलको एकिन वतन भारत आसाम रहेको भनी निजले बताएको थिए । तर निज हाल सम्म पनि सम्पर्कमा नहरेको र सम्पर्क हुनु अगाडीनै निजको मोबाईल नम्बर भुलचुक बस डिलेट भएकोले हाल मोबाईल परीक्षणको लागी फरेन्सिक बिभागमा गएकोले उक्त नम्बर खोजी गर्ने कार्यमा रहेको छ । भुलबस डिलेट भएको नम्बर रोशन पौडेल नाम रहेको ब्यक्तीको नम्बर को साथ रुपेश अधिकारी मिलन सापकोटा को पनी नम्बर चाडै भेटीने आशामा छु । निजको नाम बाहेक अरु केही थाहा छैन । मैले कोही कसैलाई ठगी गरेको छैन । निज सँग चिनजान भई ब्यवसाय गर्ने क्रममा झुठो आश्वासनमा म आफै ठगीएको र म आफै पीडित भएको छु । मैले निज भारत बस्ने रोशन पौडेल भन्ने ब्यक्तीलाई बिभिन्न मितिमा नगद दिएको र कुन मितिमा दिए भन्ने कुरा याद भएन। जाहेरवालाले पठाएको रकम बिनिता सावदेन लिम्बुको बैक खातामा आएको रकम मैले निजबाट नगद लिएको हो । यसमा बिनिता साउदेन लिम्बुको कुनै संलग्नता छैन भण्ने समेत ब्यहोराको प्रतिवादी सागर राईको थप बयान ।

**३०. प्रतिवादी आङटावा शेर्पाको थप बयान:-**

जाहेरवाला जिमा सेपेर्नी, तेन्जी पुटी सेर्पिनी, पेम्बा शेर्पा, जिमा सेर्पा,पेम्वा शेर्पा, लमडोमा शेर्पा, सोनी शेर्पा समेत मेरो चिनजानकै आफ्नतहरू हुन निजहरूलाई म चिन्दछु । जाहेरी दरखास्त साथ पेश भएको रकम जम्मा गरेको भौचरहरू मलाई देखाउदा देखी पाए । उक्त भौचरहरूबाट मेरो बैक खातामा रकम जम्मा भएको हुनु पर्छ । जाहेरीमा जाहेरवालाहरूले उल्लेख गरेको रकम मेरो बैक खातमा जम्मा भएको होला निजहरूलाई अमेरीका पठाई दिन्छु भनी रकम जम्मा गर्न लगाएको होईन । निजहरू मेरो नातेदार पर्ने ब्यक्तीहरू हुन । निजहरूसँग सर-सापटको रकम माग गरेको हो । यस मध्ये कती रकम मैले पनी निजहरूलाई फिर्ता दिएको छु । कुमारी बैक लि.मा रहेको खाता नम्बर 0190012654500002 मेरै नाममा संचालन रहेको हुनु पर्छ जाहेरवाला तथा निजका आफ्नतहरूलाई अमेरीका पठाई दिन्छु भनी रकम माग गरेको होईन । निजहरुलाई ठगी गरेको छैन । जाहेरीमा उल्लेख भएका जाहेरवालाहरू सँग मैले सर सापटीको रकम माग गरेको हो । उक्त रकम समयमा तिर्न नसक्दा निजहरुले मलाई ठगी सम्बन्धी कसुरमा किटानी जाहेरी दिएको हुनु पर्छ । मैले निजहरूलाई अमेरीका पठाउछु भनी रकम माग गरेको होईन । निजहरू सँग कुनै प्रमाण छैन । निजहरूबाट मैले लिएको रकम मैले हाईडो पावरमा लगानी गरे भन्ने ब्यहोराको आङटावा शेर्पाको थप बयान ।

**३१. बुझिएका मानिसहरुले गरेको घटना विवरण कागजः**

**१) मन बहादुर खत्रीले गरेको कागजः-**

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादीकेशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राई सँग मेरो चिनजान छैन,गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरी दरखास्तमा नाम खुलेका प्रतिवादी शन्देस शर्मालाई मेरो साथी भाई तथा आफन्त मार्फत चिनजान हुन गएको हो । जाहेरी दरखास्त साथ पेश भएको निज प्रतिवादी सन्देस शर्माको फोटो तथा नागरिकताको प्रतिलिपी समेत देखाउँदा देखी पाएँ, उक्त फोटो तथा नागरिकताको प्रतिलिपीमा देखिएका व्यक्ति नै सन्देस शर्मा हुन, निजसँग चिनजान भई सके पछी प्रतिवादी सन्देस शर्माले म लगायत महेन्द्र कुसारी, मनिष डि.सी., ममकान्त पाण्डे लगायतका व्यक्तिहरुलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिने भनी कुराकानी गरेको र सो कार्यको लागी जनही रु.२०,००,०००।–(विस लाख) देखी रु.२५,००,०००।–(पच्चिस लाख) लाग्छ र केही रकम एडभान्स वापत दिनु पर्छ भनी निज प्रतिवादी सन्देश शर्माले म तथा मैले माथी नाम उल्लेख गरेका व्यक्तिहरु सँग रकम माग गरेको हुँदा मैले निजलाई मिति २०७७।११।२३ गते एडभान्स बापत रु.५,००,०००।–(पाँच लाख) नगदै दिएको र पछी कागज पत्र बनाउनु पर्ने भयो अरु पैसा थप गर्नु अब तपाईहरुको काम हुने भयो तपाईहरुको फोटो खिच्ने तथा औंठाछाप लगाउने, मेडिकल गराउने काम समेत गर्नु पर्ने भयो तपाईहरुले वाँकी रहेको रकम जम्मा गरी दिनु भनेको हुँदा मैले मिति २०७८।०२।२८ गते मेरो लक्ष्मी बैंकमा रहेको बैंक खाताबाट निकाली नगदै रु.२०,००,०००।–(विस लाख) चितवनमा गई बुझाएको हुँ, निज प्रतिवादीले मलाई दिनु पर्ने रकम नगदै ल्याउनु भनेको कारण नगदै दिएको हो, रकम बुझी सके पश्चात तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाई ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म आफुले निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु मलाई पठाउने गरी विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुराकानी गर्दा निजले म बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र मलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी म बाट निज प्रतिवादीहरुले लिएको जम्मा रकम रु.२५,००,०००।–(पच्चिस लाख) दिलाई पाउँ भनी मन बहादुर खत्रीको कागज ।

**२) सुस्मा चन्दले गरेको कागजः-**

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राईसँग मेरो चिनजान छैन,गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरी दरखास्तमा नाम खुलेका प्रतिवादी शन्देस शर्मालाई चिनेको छु । जाहेरी दरखास्त साथ पेश भएको निज प्रतिवादी सन्देस शर्माको फोटो तथा नागरिकताको प्रतिलिपी समेत देखाउँदा देखी पाएँ, उक्त फोटो तथा नागरिकताको प्रतिलिपीमा देखिएका व्यक्ति नै सन्देस शर्मा हुन,निज प्रतिवादी सन्देस शर्माले मेरो श्रीमान लोक बहादुर डि.सी., अशिम ओली, डम्बर खत्री, चन्द्र बहादुर खड्का, पदम सिंह खत्री, यज्ञ ओली, विराज पाण्डे समेतका व्यक्तिहरुलाई निज प्रतिवादी सन्देस शर्माले भुटानी शरणार्थीकोकागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिने भनी

कुराकानी गरेको र सो कार्यको लागी जनही रु.२०,००,०००।–(विस लाख) लाग्छ र केही रकम एडभान्स वापत दिनु पर्छ भनी निज प्रतिवादी सन्देस शर्माले मेरो श्रीमान तथा मैले माथी नाम उल्लेख गरेका व्यक्तिहरुसँग निज प्रतिवादीले रकम माग गरेको हुँदा मेरो श्रीमान तथा अन्य व्यक्तिहरुले समेतले जनही रु.५,००,०००।–(पाँच लाख) को दरले एडभान्स वापत नगदै दिएको र पछी कागज पत्र बनाउनु पर्ने भयो अरु पैसा थप गर्नु भनेको हुँदा मेरो श्रीमान तथा अन्य व्यक्तिहरु समेतले जनही रु.५,००,०००।–(पाँच लाख) को दरले नगदै रकम बुझाएको र निज प्रतिवादीले उक्त रकम बुझाई सके पछी अब तपाईहरुको काम हुने भयो तपाईहरुको फोटो खिच्ने तथा औंठाछाप लगाउने, मेडिकल गराउने काम समेत गर्नु पर्ने भयो तपाईहरुले वाँकी रहेको रकम जम्मा गरी दिनु भनेको हुँदा मेरो श्रीमान लगायत अन्य व्यक्तिहरु समेतले जनही रु.१०,००,०००।–(दश लाख) को दरले दिएको हो, निज प्रतिवादीले मलाई दिनु पर्ने रकम नगदै ल्याउनु भनेको कारण नगदै दिएको हो, रकम दिंदा पहिले र दोश्रो पटक चितवनमा गई बुझाएको र तेश्रो पटक रकम दिंदा झापामा गई निज सन्देस शर्मालाई नै बुझाएको हो, उक्त रकम बुझाउँदा मिति २०७७ साल पौष महिना देखी २०७८ साल पौष १५ गते सम्म बुझाएको हो । निज प्रतिवादीले मेरो श्रीमान समेतसँग रकम बुझी सके पश्चात तपाईहरुको काम भई राखेको छ, तपाईहरुलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले हामीबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने समेत व्यहोराको सुष्मा चन्दले गरेको घटना विवरण कागज ।

३) **डम्बर बहादुर खत्री, पदम सिंह खत्री, सन्दिप वली, लिलाधर खड्का, सोभाराम राना समेतको कागज:-**

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राईसँग मेरो चिनजान छैन ।राम कुमार रेग्मी समेतको जाहेरी दरखास्तमा नाम खुलेका प्रतिवादी शन्देस शर्मासँग हामीहरुको चिनजान हुन गएको हो । जाहेरी दरखास्त साथ पेश भएको निज प्रतिवादी सन्देस शर्माको फोटो तथा नागरिकताको प्रतिलिपी समेत देखाउँदा देखी पायौं, उक्त फोटो तथा नागरिकताको प्रतिलिपीमा देखिएका व्यक्ति नै सन्देस शर्मा हुन, निज सँग चिनजान भई सके पछी प्रतिवादी सन्देस शर्माले म लगायत महेन्द्र कुसारी, मनिष डि.सी., ममकान्त पाण्डे लगायतका व्यक्तिहरुलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिने भनी कुराकानी गरेको र सो कार्यको लागी जनही रु.३०,००,०००।–(तिस लाख) देखी रु.३५,००,०००।–(पैतिस लाख) लाग्छ र केही रकम एडभान्स वापत दिनु पर्छ भनी निज प्रतिवादी सन्देस शर्माले हामी तथा माथी नाम उल्लेख गरेका व्यक्तिहरु रकम माग गरेको हुँदा हामीहरुले राम कुमार रेग्मी मार्फत चिनेको संन्देस शर्मालाई मिति २०७७ पुस महिनाको दोश्रोहप्ता तिर रु.५,०००००।- (पाँच लाख) एडभान्स स्वरुप नगदै दिएको र पछी कागज पत्र बनाउनु पर्ने भयो अरु पैसा थप गर्नु अब तपाईहरुको काम हुने भयो तपाईहरुको फोटो खिच्ने तथा औंठाछाप लगाउने, मेडिकल गराउने काम समेत गर्नु पर्ने भयो तपाईहरुले

वाँकी रहेको रकम नगदै ल्याउनु भनेको कारण नगदै दिएको हो । निज प्रतिवादीले रकम बुझी सके पश्चात तपाईको काम भई रहेको छ, तपाईहरुलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाई ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म आफुले निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु मलाई पठाउने गरी विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले म बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र मलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो गरी रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँ ।उक्त घटना सम्बन्धमा सामाजिक संजाल तथा अनलाईन समाचारमा उल्लेख भएका अन्य हाईप्रोफाइलका ब्यक्तिलाई चिन्दैनौं, निजहरूलाई कुनै रकम दिएको छैन । हामीले सन्देस शर्मालाई भेटी नगदै रुपैंया दिएको सो बाहेक अन्य केही थाहा छैन । निज प्रतिवादी सन्दा शर्मा समेतलाई कानून बमोजिम कारवाही गरी म डम्बर बहादुर खत्रीसँगबाट लिएको रु.१५,५०,०००।–(पन्ध्र लाख पचास हजार), पदम सिंह खत्रीबाट लिएको रु.२०,००,०००।–(बिस लाख), सन्दिप वलीबाट लिएको रु.२०,००,०००।–(बिस लाख), लिलाधर खड्काबाट लिएको रु.२०,००,०००।–(बिस लाख) र सोभाराम राना सँग लिएको रु.२०,००,०००।–(बिस लाख)दिलाई भराई पाउँ भनी डम्बर बहादुर खत्री, पदम सिंह खत्री, सन्दिप वली, लिलाधर खड्का, सोभाराम राना समेतलेगरेको एकै मिलानको कागज ।

४) **दिल बहादुर कुसारीको कागजः-**

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलला, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राईसँग मेरो चिनजान छैन ।राम कुमार रेग्मी समेतको जाहेरी लगायतको कागजतहरू पढीबाची सुनी ब्यहोरा अबगत भयो । राम कुमार रेग्मी मार्फत मेरो छोरा महेन्द्र कुसारीले प्रतिवादी शन्देस शर्मासँग भेटघाट भई निजसँग कुराकानीगर्ने क्रममा प्रतिवादी सन्दा शर्माले मेरो छोरा महेन्द्र कुसारी, असिम वली, मनिष डि.सी., ममकान्त पाण्डे लगायतका अन्य ब्यक्तीहरूलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिन्छु भनी कुराकानी गरी भुटानी शरणार्थीमा अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाई रकम माग गरेकोमा मेरो छोरा निजको बिश्वास गरी मिति २०७७।११।२३ गते जम्मा रकम रु.५,००,०००।–(पाँच लाख) प्रतिवादी सन्देस शर्मालाई मैले नै नगदै बुझाएको र पछी पुन:निज शन्देस शर्माले वाँकी रहेको रकम समेत राजेश अर्यालको नाममा नबिल बैंक बिराटनगरमा रहेको खाता नं.३७१००१७५०७८४३ नं.मा पठाई दिनु भनेको हुँदा मैले मेरो नाममा रुकुम पश्चिम वाफिकोट गाउँपालिकामा रहेको लक्ष्मी बैक खाता नं.०९४२००१८७२९ बाट निज राजेश अर्यालको खातमा जम्मा रकम रु.१५,००,०००।– (पन्ध्र लाख) पठाई दिएको हुँ ।निज प्रतिवादीले मेरो छोराको लागी भनी उक्त रकम लिई सके पछी बिभिन्न किसिमको कुराहरू गरी झुक्याई आलटाल गरी भागी फरार रहेकोमा सो कार्यमा संलग्न रहेका प्रतिवादीहरूलाई हाल प्रहरीद्वारा पक्राउ गरेको छ भन्ने कुरा थाहा पाएको हो । छोरा हाल बैदेशिक रोजगारको लागी भारतमा गएको छ । मेरो छोरा महेन्द्र कुसारीलाई प्रतिवादी संन्देस शर्माले भुटानी सरणार्थीमा अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाई अमेरिका नै पठाई दिने भनेका राजेश अर्यालको नाममा रकम जम्मा गर्न लगाई ठगी गरेकोले उक्त कार्यमा संलग्न रहेका अन्य प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही गरी पाउँ । अनुसन्धानको क्रममा उक्त

वारदात घटनामा केशव प्रसाद दुलाल र सानु भण्डारी समेतले आपसमा मिलेमतो गरी रकम लिई ठगी गरेको भन्ने कुरा हाल आएर थाहा पाएको हुँ ।हाल उक्त घटना सम्बन्धमा सामाजिक संजाल तथा अनलाईन समाचारमा उल्लेख भएका अन्य हाईप्रोफाइलका ब्यक्तीलाई मैले चिन्दिन, निजहरूलाई मैले कुनै रकम दिएको छैन । मेरो छोरा महेन्द्र कुसारीको लागी मैले राम कुमार रेग्मी र सन्देस शर्मालाई एकै ठाउँमा भएको अवस्थामा भेटी नगदै रु.५,००,०००।–(पाँच लाख) दिएको र अन्य रकम निज प्रतिवादी सन्देस शर्माले भने अनुसार खातामा जम्मा गरेको हुँ, सो बाहेक अन्य केही थाहा छैन । निज प्रतिवादी सन्देश शर्मा समेतलाई कानून बमोजिम कारवाही ठगी गरेको रकम रु.२०,००,०००।–(बिस लाख) निज प्रतिवादीहरूबाटैदिलाई भराई पाउँ भनी दिल बहादुर कुसारीले गरेको घटना विवरण कागज ।

५) **बोधज्ञान रेग्मीको कागज**:-

म आफु विगत ७/९ वर्ष अगाडी देखि वैदेशिक रोजगारको लागी पोर्चुगलमा गई उतै बसोवास गर्दै आई रहेको छु । राम कुमार रेग्मी मेरो आफ्नै दाई हो, प्रतिवादी शन्देश शर्मासँग मेरो दाई राम कुमार रेग्मीको के-कसरी चिनजान हुन गएको हो, मलाई जानकारी भएन, प्रतिवादी सन्देश शर्माले मेरो दाई राम कुमार रेग्मी, श्रवण कुमार रेग्मी, कल्पना कुमारी रेग्मी, उपेन्द्र बुढाथोकी लगायतका अन्य व्यक्तीहरूलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिने गरेकी छु भनी कुराकानी गरी विश्वास दिलाई भुटानी शरणार्थीमा अमेरीका पठाई दिन्छु भनी विश्वास दिलाई रकम माग गरेकोमा मेरो दाई राम कुमार रेग्मीले मलाई सम्पर्क गरी मलाई भुटानी शरणार्थी बनाई अमेरिका लगिदिने मानिस सन्देश शर्मा लाई पैसा दिनु पर्ने यो मलाई पैसाको आवश्यक पऱ्यो पैसा पठाई दिनु भनी मलाई भनेको हुदा मैले मेरो श्रीमती मिना लामीछानेको नाममा जम्मा रकम रु.२०,००,०००/-(बिस लाख) पठाई दिएकोमा मेरो श्रीमतीले उक्त रकम निकाली मेरो माईला दाई श्रवण कुमार रेग्मीलाई दिएको र माईला दाई श्रवण कुमार रेग्मीले प्रतिवादी सन्देश सर्मालाई भेटी नगदै रु २०,००,०००।–(विस लाख) दिएको भनी दाईले बताउनु भएको हुदा मैले समेत थाहा पाएको हुँ, उक्त रकम दिदा दाईले चितवन र विराटनगरमा गई रु.१०,००,०००/-लाखको दरले दिएको भनी मलाई समेत बताउनु भएको थियो, निज प्रतिवादी सन्देश शर्माले मेरो दाईहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी उक्त रकम लिई सके पछी बिभिन्न किसिमको कुराहरू गरी झुक्याई आलटा गरी भागी फरार रहेकमा सो कार्यमा संलग्न रहेका प्रतिवादीहरूलाई हाल प्रहरी द्धारा पक्राउ गरेको छ भन्ने कुरा थाहा पाएको हो। मेरो दाईहरु राम कुमार रेग्मी, श्रवण कुमार रेग्मी, दिदी कल्पना कुमारी रेग्मी र भिनाजु ओपेद्र बहादुर वुढाथोकी समेतलाई प्रतिवादी संन्देश शर्माले भुटानी सरणार्थीमा अमेरीका पठाई दिन्छु भनी विश्वास दिलाई जनही रु.२०,००,०००/-को दरले रकम लिई ठगी गरेकोले उक्त कार्यमा निज प्रतिवादी सन्देश शर्मा, केशव प्रसाद दुलाल, सानु भण्डारी, सागर राई, टंक कुमार गुरूङ समेतको मिलेमतो र संलग्नता रहेको भन्ने हाल आएर थाहा पाएको हुदा निज प्रतिवादी सन्देश शर्मा लगायत अन्य पक्राउ प्रतिवादीहरु समेतलाईलाई कानून बमोजिम कारवाही गरी ठगी गरेको रकम निज प्रतिवादीहरूबाट दिलाई भराई पाउँ भन्ने समेत व्यहोराको बोधज्ञान रेग्मीको कागज ।

६) **ओपेन्द्र बहादुर बुढाथोकीको कागज**:-

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राईसँग मेरो चिनजान छैन ।राम कुमार रेग्मी समेतको जाहेरी लगायतको कागजातहरू पढीबाची सुनी ब्यहोरा अवगत भयो । म एल.आई.सि.लाईफ ईन्सुरेन्समा एजेन्टको रुपमा र डि.आर.मेरोरियल बुढानिलकण्ठ स्थित

शिक्षकको रुपमा काम गर्दै आई रहेको छु । राम कुमार रेग्मी मेरो आफ्नै सालो नाताका मानिस हुन, प्रतिवादी शन्देस शर्मासँग मेरो साला राम कुमार रेग्मीको के-कसरी चिनजान हुन गएको हो मलाई जानकारी भएन । प्रतिवादी सन्देस शर्माले मेरो साला राम कुमार रेग्मी,श्रवण कुमार रेग्मी, कल्पना कुमारी रेग्मी, म लगायतका अन्य ब्यक्तीहरूलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिने गरेको छु भनी कुराकानी गरी बिश्वास दिलाई भुटानी शरणार्थीमा अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाई रकम माग गरेकोमा मेरो सालो राम कुमार रेग्मी मार्फत मैले चिनेको सन्देश शर्मालाई चितवनमा नाम नखुलेको होटलमा निजलाई सम्पर्क गरी २०७७/२०७८ सालमा मा म र मेरो श्रीमती कल्पना कुमारी रेग्मीको गरी नगदै रु.२०,००,०००।–(बिस लाख) रुपैंया संदेस शर्मालाई दिएको हुँ । त्यसपछि पुन:२/३ महिना पछि बिराटनगरमा निज सन्देस शर्मालाई भेटी बायो म्याट्रिक्स गर्दा थप नगदै रु.२०,००,०००।–(बिस लाख) रुपैया दिएको हुँ । निज प्रतिवादी सन्देश शर्माले म र मेरो श्रीमती कल्पना कुमारी रेग्मीलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी उक्त रकम लिई सके पछी बिभिन्न किसिमको कुराहरू गरी झुक्याई आलटाल गरी भागी फरार रहेकोमा सो कार्यमा संलग्न रहेका प्रतिवादीहरूलाई हाल प्रहरीद्वारा पक्राउ गरेको छ भन्ने कुरा थाहा पाएको हो । म र मेरो श्रीमती कल्पना कुमारी रेग्मी समेतलाई प्रतिवादी संन्देस शर्मा समेतले भुटानी शरणार्थी बनाई अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाई जनही रु.२०,००,०००।–(बिस लाख) को दरले रकम जम्मा रु.४०,००,०००।–(चालिस लाख) लिई ठगी गरेकोले उक्त कार्यमा निज प्रतिवादी सन्देश शर्मा, केशव प्रसाद दुलाल, सानु भण्डारी, सागर राई, टंक कुमार गुरूङ समेतको मिलेमतो र संलग्नता रहेछ । हामीहरुले निज सन्देश शर्मालाई प्रत्यक्ष भेटेर नगदै रकम निजकै हातमा दिएको हो । हाल आएर पत्र-पत्रिका, संचारका माध्यमहरुमा उच्च पदस्थ व्यक्तिहरु समेतको संलग्नता रहेको भन्ने बारेमा हामीलाई केही थाहा छैन । हामीले नगदै सन्देश शर्मालाई दिएका हौं । निज प्रतिवादीहरुले अन्य पीडितहरु रमेश कटुवाल रिजेन गुरुङ, सुनिल अधिकारी, राममणी आचार्य, महेश कार्कीको नामको गृह मन्त्रालयबाट जारी भएको शरणार्थी परिचय पत्र समेत किर्ते गरी पीडितहरुलाई वास्तबिक नामको सट्टामा अर्कै नामबाट अमेरिका पठाई दिने भनी नक्कली कागज पत्रहरु समेत तयार पारी पीडितहरुलाई निजले प्रयोग गर्ने गरेको सामाजिक संजालहरुबाट पठाई विश्वास दिलाएको हुँदा निज प्रतिवादी सन्देश शर्मा लगायत अन्य पक्राउ प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही गरी ठगी गरेको रकम निज प्रतिवादीहरूबाट दिलाई भराई पाउँ भनी ओपेन्द्र बाहदुर बुडाथोकीको कागज ।

७) **दोर्ण बहादुर अधिकारीको कागज**:-

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राईसँग मेरो चिनजान छैन । जाहेरवाला रविन्द्र कार्कीसँग चिनजान छ, निज रविन्द्र कार्कीले दिएको जाहेरी लगायतको कागजातहरू पढीबाची सुनी ब्यहोरा अवगत भयो । जाहेरवाला रविन्द्र कार्की मेरो ज्वाईं नाताका मानिस हुन, ज्वाईंको प्रतिवादी सागर राईसँग के-कसरी चिनजान हुन गएको हो मलाई जानकारी भएन, प्रतिवादीसागर राईले मेरो ज्वाईं रविन्द्र कार्कीलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिन्छु भनी कुराकानी गरेको र मेरो ज्वाईंले समेत निजको कुरालाई विश्वास गरी भुटानी शरणार्थीको रुपमा अमेरिका जान भनी प्रकृया अगाडी बढाएको र सो कार्यको लागी निज प्रतिवादी सागर राईले ज्वाईंलाई जम्मा रकम रु.२०,००,०००।–(बिस लाख) माग गरेको र निज सागर राईले उक्त रकम मोहन राईको खातामा र आशिष बुढाथोकीको नाममा रहेको बैंक खातामा पठाई दिनु भनी रकम पठाउन लगाएको हुँदा ज्वाईंले उक्त रकम मध्ये रु.९,९९,०००।–(नौ लाख उनान्सय हजार), आशिष बुढाथोकीको

खातामा रु.८,१८,०००।–(आठ लाख अठार हजार), मोहन राईको खातामा भाई रुपक कार्कीको खातामा जम्मा गरि दिएको र बाँकी रु.१,८३,०००।–(एक लाख त्रियासी हजार) निज सागर राईलाई नगदै दिएकोमा निजले उक्त रकम लिई सके पछी प्रतिवादी सागर राईले मेरो ज्वाईलाई सबै काम भईसकेको छ भनी विश्वास दिलाउनको लागी भुटानी शरणार्थी सम्बन्धी बिभिन्न प्रकारका कागजातहरु सामाजिक संजाल मार्फत पठाई विश्वास दिलाउने गरेकोमा निजले आज भोली भन्दै काम भई राखेको छ भनी झुल्याउँदै आएकोमा भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने समूहका मानिसहरु पक्राउमा परेको भनी बिभिन्न पत्र-पत्रिकाहरुमा समाचारहरु प्रकाशित भए पछी मेरो ज्वाई रविन्द्र कार्की आफु समेत सो समूहबाट ठगिएको भन्ने थाहा पाई निज सागर राईको विरुद्धमा जाहेरी दिएको र मेरो ज्वाई समेतलाई प्रतिवादी सागर राई समेतले भुटानी शरणार्थी बनाई अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाई रु.२०,००,०००।–(बिस लाख) रकम लिई ठगी गरेकोले उक्त कार्यमा निज प्रतिवादी सागर राई सन्देश शर्मा, केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ समेतको मिलेमतो र संलग्नता रहेको भन्ने कुरा मैले समेत थाहा पाएको हुँ। पत्र-पत्रिका, संचारका माध्यमहरुमा उच्च पदस्थ व्यक्तिहरु समेतको संलग्नता रहेको भन्ने बारेमा मलाई केही थाहा छैन,निज प्रतिवादी सागर राई लगायत अन्य पक्राउ प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही गरी ठगी गरेको रकम निज प्रतिवादीहरूबाट दिलाई भराई पाउँ भनी दोर्ण बहादुर अधिकारीको कागज।

८) **सुरज लुईटेलले गरेको कागजः-**

मैले जेहरवालाहरु तथा प्रतिवादी ईन्द्रजित राई समेतको मानिसहरुलाई चिन्दिन। म विगत ८ वर्ष पहिला देखि कृष्ण भक्त दुवाल समेतले संचालन गरेको कम्पनीमा काम गर्दै आई रहेकोमा निज कृष्ण भक्त दुवाल समेतले संचालन गरेको नेपाल ईको प्यानल प्रा.लि.को लागी ईन्द्रिजत राईको नाममा रहेको भक्तपुर जिल्ला, भक्तपुर नगरपालिका वडा नं.१७ को जग्गा खरिद गर्दा कृष्ण भक्त दुवालले ईन्द्रराइको नामको बैंक खातामा जम्मा गरी दिनु भनी ईन्द्रजित राईको नाममा काटिएको रु.१५,२४,०००।–(पन्ध्र लाख चौविस हजार), रु.४८,००,०००/-(अढचालिस लाख), रु.४८,००,०००/-(अढचालिस लाख) रकम उल्लेख भएको चेक दिएकोले मैले उक्त चेकहरु सन् 2021/10/03 मा मेघा बैंकको Indrajit Rai को नामको खाता नं.0190050761882 मा जम्मा गरी दिएको हुँ भनी सुरज लुईटेलको कागज।

९) **रोशन खरेलले गरेको कागज**:-

मैले प्रतिवादीहरुलाई दिएको रकम रु.१,६२,००,०००/-(एक करोड बैसठ्ठी लाख) मात्र हो। जस मध्ये नगदै रु.७२,००,०००/-(बहत्तर लाख), अशोक पोखरेलको खातामा रु.२०,००,०००/-(बिश लाख), चेक मार्फत सानु भण्डारीलाई रु.२८,००,०००/-(अठ्ठाईस लाख), दिपा हुमागाँईलाई रु.२०,००,०००/-(बिश लाख) र सागर राईलाई रु.२२,००,०००/-(बाईस लाख) दिएको हुँ। जाहेरी पेश गर्दा भुलबस चेक मार्फत र नगदै रु.१,२०,००,०००/-(एक करोड बिश लाख) हुन गएछ, उल्लेखित रकमलाई सच्याई मेरो विगो रु.१,६२,००,०००/-(एक करोड बैसठ्ठी लाख) कायम गरी पाउँ। मलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने भनी सागर राई मार्फत केशव दुलाल र सानु भण्डारीसँग भेट भई निजहरुले काठमाण्डौको गौशालाको होटल ईन अगाडीको हाल नाम याद नभएको होटलको कोठा भित्र लगी म, मेरो परिवारका सदस्यहरु श्रीमती सुर्य कुमारी खड्का, दिदी दुर्गा देवी उप्रेती, दाजु चिरिन्जिवी खरेल, भिनाजु दामोदर लामिछाने, भान्जा बुसन कोईराला, सालो मनोज खड्का, सालो सरोज खड्का, दिदी अम्बिका लामिछाने (खरेल), फुपुको छोरा आशिष सिटौला, काकाको छोरा विजय खरेल, ठुली दिदी विमला खरेलको जेठाजु पर्ने प्रदिप कार्की, मेरो

साथी प्रकाश बोहोरा, मित दिदी सोनिया लिम्बु समेत १४ जनालाई फोटो खिचेर भुटानी शरणार्थी बनाई पाउँ भन्ने फारम भर्न लगाए , सो स्थानमा गृह मन्त्रालयको कर्मचारी हौं भनी फोटो खिच्ने १ जना र फारम भर्ने १ जना टाईसुट लगाएका अन्य कर्मचारी थिए । फारम भराए बापत प्रति व्यक्ति रु.२,००,०००।–(बिस लाख) को दरले मैले १४ जनाको रु.२८,००,०००।–(अट्ठाईस लाख) दिएको जसमा रु.८,००,०००/-(आठ लाख) नगदै केशब दुलाललाई रु.२०,००,०००।–(बिस लाख) केशव दुलालले भनेर अशोक पोखरेलको खातामा मैले जम्मा गरेको हुँ । त्यस पछि म समेत मेरो १४ जना आफन्तको अस्थायी परिचय पत्र बनाई हामीलाई देखाएका थिए । भुटानी शरणार्थीको दिर्घकालिन समस्या समाधानको लागि कार्यदल गठन भए पश्चात बालकृष्ण पन्थी र गणेश के.सी.ले हामीलाई झापामा भेटेर काम हुन्छ ढुक्क भएर बस्नु भनेका थिए । निजहरुले मेरो आफन्तको यस प्रकार नाम परिवर्तन गरी परिचय पत्र बनाएका हुन् जुन नामावली भुटानी शरणार्थीको विवरण समावेश हुन्छ भनी निजहरुले भनेका थिए ।

| **सि.नं.** | **वास्तविक नामथर** | **परिवर्तित गरिएको नामथर** |
|---|---|---|
| १ | रोशन खरेल (म) | सरोज खरेल |
| २ | दामोदर लामिछाने | दिपक लामिछाने, |
| ३ | सरोज खड्का | सुमन खड्का |
| ४ | मनोज खड्का | महेश कार्की |
| अन्य मानिसहरुको परिवर्तित नाम हाल सम्झिन सकिन, पछि खुलाउने छु । | | |

अस्थायी परिचय पत्र बनाए पछि स्थायी परिचय परिचय पत्र बनाउनु पर्छ भनेर जनही रु.८,००,०००/-(आठ लाख) को दरले केशव दुलाल र सानु भण्डारीले रकम माग गरेकोले मैले सानु भण्डारीलाई नगदै रु.७२,००,०००/-(बहत्तर लाख) गौशालाको होटल युनिक ईनको खाली जग्गामा अल्फाबेट याद नभएको ४४० नं.को सानु भण्डारीले चढ्ने गाडी भित्र झोलामा दिएको हुँ । चेक मार्फत सानु भण्डारीलाई रु.२८,००,०००।–(अट्ठाईस लाख), केशव दुलालले भनेर दिपा हुमागाँईलाई चेक मार्फत रु.२०,००,०००/-(बिस लाख) दिएको हुँ । त्यस पछि केशव दुलाल र सानु भण्डारीले अब सबै जनाको स्थायी परिचय पत्र वितरण र बायोमेट्रिक एकै पटक गर्ने सो कामको लागी थप रकम रु.२२,००,०००/-(बाईस लाख) सागर राईलाई दिनु भनेकोले चेक मार्फत सागर राईलाई रु.२२,००,०००/-(बाईस लाख) दिएको हुँ । निजहरुले परिचय पत्र बनाउने क्रममा सानु भण्डारीको घरमा कार्ड बनाउने कार्य भईरहेको छ भनी निज सानु भण्डारीसँग भिडियो कलमा कुरा हुँदा बताएका थिए । सम्पुर्ण रकम लिए पश्चात निजहरु हामीसँग कुनै कुराकानी र सम्पर्क नगरी बसेको हुन भनी रोशन खरेलको कागज ।

१०) **<u>सुरेन्द्र राज दाहालको कागजः-</u>**

मिति २०७४ साल भाद्रमा मलाई ईलाका प्रशासन कार्यालय पाँचथर रबिबाट शरणार्थी समन्वय ईकाई बेलडाँगीको शिबिर सुपरिवेक्षक पदमा खटाईएको थियो । सन २०१६ को डिसेम्बरबाट पुर्नवासको प्रकृया (UNHCR) ले बन्द गरेको र केही प्रकृयामा रहेका शरणार्थीहरु प्रकृया बमोजिम तेश्रो देशमा नगन्य रुपमा जाने क्रममा चलिरहेको अवस्था हो । म रहेको समयमा केही शरणार्थीहरु दर्ता नभएको केही सन २००६/२००८/ र २०१२ मा फोटो खिचेको तरपरिचय पत्र प्राप्त नगरेको भनी गुनासो लिएर सदैब कार्यालयमा आउने गर्दथे । शिबिर भित्र देहाय बमोजिम शरणार्थी रहेको पाईयो । क) Census Absentese (C.A):-यो यस्तो प्रकारको

शरणार्थी हुन । जुन १९९२ मै भुटानबाट नेपाल प्रबेश गरेर सन २००६/२००८ मा दर्ता भएका तर बिबिध कारणले परिचय पत्र बितरण गर्ने समयमा उपस्थित हुन नसकेका । ख) ASR:-यो शरणार्थी पुनर्वास प्रकृया शुरु भए पश्चात सन २००६ पछि शिविर भित्र आएका र सन २००६/२००८ र २०१२ सम्म आई दर्ताको लागी तत्कालिन Joint verification team लाई आग्रह गर्दा परिचय पत्र नदिई मानबिय नाताले (Asylum) आश्रय दिएको पाईयो । ग) Non Entry:-यो यस्तो प्रकारको कथित शरणार्थी हुन जस्को शिबिर भित्र कुनै पनि समय र प्रकृयामा १९९२ देखी २०१२ सम्म उपस्थित नभएको र record समेत नरहेको शरणार्थी के-कुन प्रकारको हुन भन्न नसकिने अबस्थाका थिए ।भबिष्यमा नेपाल सरकारबाट निर्णय जे हुन्छ सोही बमोजिम हुने गरी (UNCHR) समेतले करिब ४००(चार सय) शरणार्थीहरुको Recommeded गर्ने कार्य २०७५ माघ/फागुन देखी असार सम्म भई रहेको थियो । मिति २०७६/०३/०३ गते मेरो इलाका प्रशासन कार्यालय गौरीगंजमा सरुवा भयो, तत् पश्चातको शिबिर भित्रको आधिकारीक जानकारी मलाई नरहेको । मिति २०७७/०४/१९ गते गृह मन्त्रालयबाट थप जिम्मेवारी प्राप्त भई मिति २०७७/०४/२२ गतेबाट शरणार्थी समन्वय ईकाई बेलडाँगीको शिबिर प्रमुख भई पुन:कामकाज गरियो । २०७८ जेष्ठ देखी प्रतिवेदनको बारेमा उल्लेखित आरोपिहरु केशब दुलाल, सानु भण्डारी लगायतबाट चासो भए पछी थप जानकारीमा रहयो । कुनै पनि समय माथीबाट निर्णय हुँदैछ भनी उनीहरु केशव दुलाल र सानु भण्डारीले उपलब्ध गराएको भुटानी शरणार्थी समस्या समाधान सम्बन्धी प्रतिवेदन राय सुझाव सहित पठाई दिन पऱ्यो, हाम्रो मन्त्रालयका सबै सँग सल्लाह भएको छ भन्ने गरेका थिए । पछि २०७८ मंसिर/पुस तिर तत्कालिन गृह सचिव टेक नारायण पाण्डेले बोलाउनु भएको हुँदा म मन्त्रालय आएँ । मलाई सचिवले भुटानी शरणार्थी समस्या के हो ? पन्थी प्रतिवेदन के हो भन्ने बिषयमा सोधपुछ हुँदा मैले माथी उल्लेख गरेको बिषयहरु नै अवगत गराउदै शिबिर भित्र हाल दलाली धन्दा चलाउन खोजेको र उक्त कार्यमा केशव दुलाल र सानु भण्डारी लगायतको टिम सक्रिय रहेको र शरणार्थी शिविरमा अवान्छनीय गतिबिधी हुन खोजेको जानकारी गराउँदा "टेन्सन नलिनु सुरेन्द्र जि तिनीहरु केशब दुलाल, सानु भण्डारीको बिषयमा केही होईन भित्र रकम उठाउन नदिनु" भनेर जानकारी गराउनु भयो । २०७८ पुस तिर केशव दुलाल र सानु भण्डारीसँग दमकमा भेट भयो । पुरानो पन्थी प्रतिवेदन र ४२९ जनाको बारेमा मन्त्रालयले पत्राचार गरेको छ तपाईहरुले टुङग्याउन पऱ्यो भन्न थाले त्यसपछि मैले उक्त बिषयमा जिल्ला झापामा सल्लाह गर्छु भनी जिल्ला प्रशासन कार्यालय झापामा यो प्रतिवेदनमा हाम्रो राय दिन सकिदैन यसमा केही गलत छ । केशब दुलाल उपलब्ध गराएको प्रतिवेदन प्रतिलिपीमा गलत ब्यक्तीहरुको बिबरण समाबेश भएको देखियो,दलालहरुले पैसा उठाएको र शरणार्थी बन्नेको नाम हल्लामा आए अनुसार धेरै छन पैसामा कारोबार भएको सुनिन्छ,भनेर तत्कालिन जिल्ला प्रशासन कार्यालयका सहायक प्रमुख जिल्ला अधिकारी चोमेन्द्र न्यौपाने सरलाई जानकारी गराएँ र हामी दुबै अडिग रही फाईल अघी नबढाउने भनी कुरा गरियो । फाईलको बिषयमा कुनै पनि हालतमा राय सुझाब नदिने निश्चित गरियो । तत् पश्चात तत्कालिन सचिव टेक नारायण पाण्डेबाट पटक-पटक मलाई र स.प्र.जि.अ.चोमेन्द्र न्यौपाने सरलाई फाईल बढाउन, छिटो टुङग्याउन, फोन सम्पर्क गरि दबाब दिई रहेका थिए । साथै केशव दुलाल र सानु भण्डारीबाट दबाब र सरुवाको समेत धम्की आउन थालेको थियो । यसै क्रममा मेरो सरुवा पछिल्लो मिति राखेर मिति २०७८/०५/३० मा गृह मन्त्रालयबाट सरुवा भएकोले तुरुन्त रमाना दिनु भनी मिति २०७८/१०/२६ मा जिल्ला प्रशासन कार्यालय मोरङका तत्कालिन प्र.जि.अ.काशीराज दाहाललाई सरलाई बालकृष्ण खाँण स्वयमले फोन गरी रमाना नदिए प्र.जि.अ.तिमी तुरुन्त काठमाण्डौ आउनु भन्ने सम्मका धम्की दिएको हुदाँ मेरो रमाना बाध्यकारी रुपले कानूनले

तोकेको बर-बुझारथको समय समेत नदिई इलाका प्रशासन कार्यालय उर्लाबारी मोरङका तत्कालिन कार्यालय प्रमुख तुलसीराम पौडेल सरलाई प्र.जि.अ.ज्युबाट रमाना दिने निर्देशन भयो । मिति २०७९/१०/१७ को गृह मन्त्रालयको काज सरुवा बमोजिम ईलाका प्रशासन कार्यालय दमकमा कार्यरत छु ।मलाई मिसिलमा संलग्न भएको भुटानी शरणार्थी परिचय पत्रको फोटोकपी देखाउँदा देखे सक्कली शरणार्थी परिचय पत्रमा दर्ता नं.११ अंकको हुने, पथरी नभई शनिश्चरे हुने र बेलडाँगी ११ नभई रोमनमा बेलडाँगी आई.आई.(Bel-II) हुने हुँदा मलाई देखाईएका उक्त शरणार्थी परिचय पत्रमा भएको दर्ता नं ९(नौ) अंकको रहेको, शरणार्थी शिबिरको ठेगाना पथरी लेखीएको साथै बेलडाँगी ११ लेखीएकोले यी परिचय पत्रहरू नक्कली हुन भनी सुरेन्द्र राज दाहालको कागज ।

११) **बालकृष्ण पन्थीले गरेको कागज:**

पक्राउ प्रतिवादीहरु मध्ये सानु भन्डारी सँग म काठमाण्डौमा सि.डि.ओ.भएको वेला मिति २०७४ जेष्ठ महिनामा कुनै साथीको सिफारिसमा नागरिकताको काम लिएर आउने क्रममा चिनजान भएको थियो । डा.ईन्द्रजीत राईलाई म संयोजकमा सिफारिस भए पछी मन्त्रालयमा आउजाउ गर्दा चिनजान भएको हो । अर्का प्रतिवादी केशव प्रसाद दुलाललाई म संयोजकमा सिफारिस भए पछी फिल्डमा सानु भण्डारी मार्फत चिनजान भएको हो। त्यो वाहेक अन्य सँग मेरो चिनजान छैन । मलाई चिन्नेमा निर्णय कर्ताको रुपमा तत्कालिन गृह सचिब प्रेम कुमार राई हुनु हुन्थ्यो, मन्त्री ज्यू सँग मेरो कुनै चिनजान थिएन । संयोजक भई कार्य क्षेत्रमा गई काम गर्ने क्रममा पुर्व चिनजानका सानु भण्डारी सँग झापाको दमकमा भेट भएको थियो । हामीले शरणार्थी दर्ताको लागी छुट फारमहरु संकलन गर्न सिविर व्यबस्थापन लाई अनुरोध गरेका थियौ । त्यस्तै अन्य सम्बन्धित डाटाहरु लिन UNHCR दमकमा सम्पर्क गर्दा हाम्रा माग बमोजिमका डाटाहरु संकलन गर्न केहि समय लाग्ने भयो । गृह मन्त्रालय स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा, शरणार्थी मामिला समन्वय सम्बन्धी राष्ट्रिय ईकाईको चलानी नं.७३४ मिति २०७९/१२/२६ गतेको पत्रसाथ जिल्ला प्रहरी परिसर काठमाण्डौमा प्राप्त हुन आएको भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधान पहिल्याउने उपायहरु सम्बन्धी प्रतिवेदनको फोटोकपी पाना ३८९ देखाउदा देखी पाँए । मिति २०७६/०७/०१ गते पेश गरेको प्रतिवेदनको केही खण्ड र भागहरुमा परिवर्तन गरेको देखिन आयो । प्रतिवेदनको बुदा नं.२.६ (आ) को व्यहोरा पुर्णरुपमा फरक देखिएको छ । प्रतिवेदनमा “बिभिन्न कारणले छुट भएका भनी ५८१ परिवारले दिएका दरखास्तहरु वास्तविक रुपमा दर्ता हुन छुट भएका शरणार्थीहरु हुन् भन्ने आधार प्रमाण केही पनि देखिन आएन भन्दै ती दरखास्तवालाहरुको लगतमा नाम नराख्नुको कारणको बारेमा थप वाक्यहरुको खण्डमा पुरै फेरबदल भएको रहेछ ।प्रतिवेदनको पृष्ठ १७ मा उल्लेखित ३.७ नं.को बुँदालाई भाषा र व्यहोरा परिवर्तन गर्दै बुँदा नं.३.२ लेखिएको छ र उप बुँदा (i) को व्यहोरालाई परिवर्तन गरिएको छ । पहिले UNHCR र RCU ले भेरिफिकेशन गरेका ४२९ जनाको निवेदनलाई अन्तिम निवेदन मानी छुट दर्ताको विषयलाई टुंगो लगाउन भनी सुझाव दिँदै अव उप्रान्त छुट दर्ता नगर्नु भनी स्पष्ट रुपमा सुझाव दिएका छौ ।यो पृष्टको व्यहोरा व्यापक परिवर्तन गरिएको देखियो । यो प्रतिवेदनको फोटोकपी हो, यसमा हाम्रो दस्तखत आधुनिक प्रविधिको दुरुपयोग गरी राखिएको महसुस भयो, हामीले सहि गरी मन्त्रालयमा बुझाएको सक्कल प्रतिवेदन जुन मिति २०७६/०८/१७ मा मन्त्रीपरिषद सचिवालयमा प्रस्ताव सहित पठाईएको हुनुपर्छ । प्रतिवेदनको पृष्ट १८ निष्कर्ष खण्डको दोस्रो अनुच्छेदमा फेर बदल भएको छ । प्रतिवेदनले ३.७ (i) को सिफारिसलाई पुन:उल्लेख गरी अनुसुची ७ अन्तर्गतका UNHCR र RCU बाट भेरिफिकेशन भएका ४२९ जना र परिचय पत्र बाहकका एकाघरका परिचय पत्र विहिन सदस्यहरुको विषयमा

समेत एकै पटक निर्णय गरी अब उप्रान्त छुट दर्ता प्रक्रिया नै बन्द गर्ने सुझाव दिईएको छ, फोटोकपी प्रतिवेदनमा यो व्यहोरा छैन। प्रतिवेदनमा सबै अनुसुचीहरु UNHCR दमक कार्यालय र शिविर व्यवस्थापन समितीबाट लिएका हुन । प्रतिवेदनमा राखेको अनुसुचीहरुको फर्मेट र फन्ट जुन र जस्तो प्रकारको छ, देखाईएको प्रतिवेदनमा निकै फरक फर्मेट र फन्टमा छ। मन्त्रालयमा बुझाएको प्रतिबेदनमा जम्मा ९ वटा अनुसूची छन, तर देखाईएको प्रतिबेदनमा १० वटा अनुसूची रहेका छन। पछी छुट दर्ता गराई दिएका निवेदनहरुको अध्ययन गर्दा विश्वसनिय नलागेकोले सो कुरा प्रतिबेदनको २.६.(आ) खण्डमा उल्लेख गरेका छौं । परराष्ट्र, अर्थ र गृह मन्त्रीहरु र प्रतिवेदन मन्त्रीपरिषदको २०७७/११/११ गतेको निर्णायानुसार सामाजिक समितीमा अध्ययन गरी पेश गर्न पठाईएको देखिन्छ। हामीले प्रतिवेदनको खण्ड-खण्ड र सम्बन्धित शिर्षक एंव बुँदामा लेखेका कुरा विरोधाभाषपुर्ण (Contradictory) छैनन्। तर देखाईएको फोटोकपी प्रतिवेदनका केही कुरा विरोधाभाषपुर्ण (Contradictory) छन्। साथै पेज सेटिङ, प्रतिवेदनको लेखाईको Space Management र Font पनि फरक पारेको देखिन आयो भन्ने व्यहोरा उल्लेख गरी बालकृष्ण पन्थीको कागज।

१२) **गणेश के.सी.को कागज:-**

हाल पक्राउ परी अनुसन्धानमा रहेका प्रतिवादी सानु भण्डारी मेरो छिमेकी भएको कारण निजसँग पुर्व चिनजान थियो,अर्का प्रतिवादी डा.ईन्द्रजीत राईसँग उक्त कार्यदलको नियुक्ति लिने क्रममा चिनजान भएको हो। प्रतिवादी केशव प्रसाद दुलाललाई कार्यदलको काम गर्ने क्रममा सानु भण्डारी मार्फत चिनजान भएको हो । म मिति २०७६ साल जेष्ठ महिनातिर मेरो पुर्व चिनजानका साथी सानु भण्डारीसँग ललितपुरको हात्तिवनमा भेटघाट भई कुराकानी हुँदा तपाई राजनिति गर्ने व्यक्ति तपाईको नाम राष्ट्रिय कार्यदलमा सिफारिस हुन सक्छ त्यसले तपाईको portfolio बढ्न सक्छ भनी भनेकोमा निजको कुरा ठिकै लागी मैले हुन्छ भनी स्वीकार गरेको हुँ। त्यसको केही दिन पछी तपाईको नाम भुटानी शरणार्थी समस्या स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलमा सिफारिस भएको छ चिठ्ठी बुझ्न आउनुहोस भनी मिति २०७६ साल असार तिर हाल पक्राउ प्रतिवादी डा.ईन्द्रजीत राईले मलाई फोन गरी जानकारी गराउनु भएको हो। मिति २०७६ साल असार ३० गते गृह मन्त्रालयमा गई चिठ्ठी बुझ्ने क्रममा कार्यदलका अन्य वाल कृष्ण पन्थी र दिपक न्यौपाने सँग भेट भएको हो। मलाई मलाई मन्त्रीस्तरिय मिति २०७६।०२।३० गतेको निर्णय अनुसार विज्ञ सदस्यको रुपमा दुई महिनाको लागीभुटानी शरणार्थी समस्या स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलमा नियुक्ति दिएको हो। मेरो शैक्षिक योग्यता वि.ए., वि.एड.रहेको र शिक्षण पेशामा करिव २१ वर्ष काम गरेको अनुभव भएको तर शरणार्थी सम्बन्धी खासै ज्ञान नभएको तर तत्कालिन गृह मन्त्री राम बहादुर थापाका कानूनी सल्लाहकार डा.ईन्द्रजीत राईद्वारा माथी उल्लेखित कार्यदलमा मेरो पनि नियुक्ति भएको भनी छिमेकी सानु भण्डारीबाट मौखिक रुपमा जानकारी प्राप्त भएको र मिति २०७६।०३।३० गतेका दिन नियुक्ति भएको भन्ने व्यहोराको पत्र बुझेको हुँ। श्रावण महिनाको पहिलो साता हामीहरुको पुरै टिम झापाको वेलडागी र मोरङको पथरी सिविरमा खटी गई करिव १ साता अध्ययन गरी काठमाण्डौ फर्किएको र पुन:सोही महिनाको अन्तिमतिर झापाको दमकमा रहेको UNHCR, RCU को कार्यालय र झापा सि.डि.ओ. कार्यालयमा रहेका विवरणहरु माग गर्ने काम गरियो। साथै सिविर व्यबस्थापन कमिटी मार्फत दुवै सिविरमा रहेको कार्ड होल्डर शरणार्थीहरुको विवरण संकलन गर्न सिविरकै क्याम्प व्यवस्थापन समितीलाई अनुरोध गरियो । हामीलाई दिईएको छैटौ नं.को वुँदा अनुसार छुट दर्ताको लागी सिविरहरुमा सूचना निकालियो । पुन:भाद्र महिनाको अन्तिम तिर सोही कार्यदलको कामको लागी झापा तथा मोरङ गएको र सोही समयमा प्रतिवादी सानु भण्डारी,

केशव प्रसाद दुलाल, अशोक कुमार पोखरेल र म समेत ४ जना व्यक्तिहरु धनकुटाको भेडेटार नजिक रहेको नाम्जी भन्ने ठाउ सम्म गई घुमघाम गरी निजहरु आफ्नो काममा फर्किएका म पुन:झापा र मोरङमा गई UNHCR को अभिलेख अनुसारको ४२९ जनाको नाम नामेसी विवरण लिने काम गरेको र सोही संख्या र नामावली RCU बाट पनि प्राप्त गरियो। सो ४२९ जनाका सबै कागजात प्रमाणहरु RCU झापामा रहेका छन जसको लगत अनुसूची ७ मा समाविष्ट गरिएको छ, यी मध्ये तेश्रो देशमा पुनर्स्थापना हुन पाउँ भनी दिने हरुको लगत अनुसूची ८ मा समाविष्ट गरिएको छ भनी हामीले बुझाएको प्रतिबेदनमा मन्त्रालय समक्ष अनुरोध गरियो। तर म समेतले दिएको प्रतिबेदनको पाना न.१७ को दफा ३.७ को I नं. बुदामा ४२९ जना नै अन्तिम आवेदकको रुपमा अध्ययन गर्नु पर्ने र अन्य निवेदकहरुको हकमा कुनै प्रक्रिया अगाडी बढाउनु नपर्ने भनी किटानी साथ प्रतिबेदनमा उल्लेख गरिएको। हामीले शरणार्थीहरु बसेको दुवै सिबिरमा गई सो ठाउमा बसेका सम्पुर्ण शरणार्थीहरु लाई भेला जम्मा गराई निजहरु सँग राय माग्दा अधिकांस व्यक्तिहरुले आफुहरु स्वदेश फिर्ता हुन चाहेको र सो को आवश्यक व्यबस्था नेपाल सरकारले मिलाई दिनु पर्ने भनी माग गरेको र केहीले तेश्रो देश पुनर्वासको लागी पहल गरिदिन माग गरेको हुँदा सोही अनुसारको विवरण म समेतले दिएको प्रतिबेदनमा बुझाईएको। जिल्ला प्रशासन कार्यालय झापा,UNHCR र शरणार्थी समन्वय ईकाई झापाले संयुक्त रुपमा विज्ञप्ति निकालेको भन्ने विषयमा मलाई जानकारी नभएको तर बिभिन्न वहानामा रकम उठाई ठगी गरेको भन्ने घटना सुन्दा आफु अचम्मित भएको साथै गृह मन्त्रालय स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा, शरणार्थी मामिला समन्वय सम्बन्धी राष्ट्रिय ईकाईको चलानी नं.७३४ मिति २०७९/१२/२६ गतेको पत्रसाथ जिल्ला प्रहरी परिसर काठमाण्डौमा प्राप्त हुन आएको प्रतिवेदनको फोटोकपी पाना ३८९ देखाउदा देखें सो प्रतिबेदन म समेतको कार्यदलले तयार गरेको प्रतिबेदन भन्दा फरक प्रकारको देखियो, यसमा सत्य तथ्य अनुसन्धान होस भनी गणेश के.सी.को कागज।

१३) **दिपक प्रसाद न्यौपानेको कागज**:

पक्राउ प्रतिवादीहरु मध्ये सानु भण्डारी कार्यदलका अर्का सदस्य गणेश बहादुर के.सी.का छिमेकी रहेको र कार्यदलका संयोजक बालकृष्ण पन्थीसँग निज काठमाण्डौ जिल्लाको सि.डि.ओ.हुँदाकै बखत चिनजान भएकोले निजैहरु मार्फत मैले निजलाई चिनेको र अर्का प्रतिवादी केशव प्रसाद दुलाललाई कार्यदलका सबैजना शरणार्थी क्याम्पहरुमा फिल्ड भिजिटमा जाँदा निज पनि शरणार्थी क्याम्पमै भेट भएकोले निजलाई चिनेको हो। अर्का प्रतिवादी डा.ईन्द्रजीत राई म तत्काल कार्यरत गृह मन्त्रालयमा गृह मन्त्रीज्यूको सल्लाहकार भएकोले निजसँग चिनजान भएको हो, त्यो वाहेक अन्य सँग मेरो चिनजान छैन। म गृह मन्त्रालयमा तत्काल शान्ति प्रबर्धन शाखामा शाखा अधिकृत भई काम गरेका कारण प्रतिवादी डा.ईन्द्रजीत राईसँग अफिसियल कुरा हुने गरेको कारण अफिसियल सम्बन्ध रहेको, सानु भण्डारी र केशव प्रसाद दुलाललाई शरणार्थी क्याम्पमा नै भेटी चिनजान भएपछि निजहरुले शरणार्थी क्याम्प भिजिट गराइ बिवरणहरु संकलन गर्न मद्दत गरेको तथा सानु भण्डारीसँग कार्यदलका सबै सदस्यहरु ताप्लेजुङको पाथिभरा घुम्न गएकोले निजहरुसँग साथीको सम्बन्ध हो। यस बाहेक अन्य सम्बन्ध छैन। कार्यदलको सदस्यको लागि मेरो नाम कसले सिफारिस गरे जानकारी छैन, तर गृह मन्त्रालय स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखाबाट सो कार्यदलमा सदस्य रहेको भनी पत्र प्राप्त गरेको थिएँ। "भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउने कार्यदल" ले मिति २०७६/०७/०१ गते गृह मन्त्रालयमा पेश गरेको प्रतिवेदनको फोटोकपी पाना ३८९ देखें, म सो कार्यदलमा सदस्य रहेपछि सो कार्यदलले २०७६ सालको साउन महिनादेखि कार्य शुरु गरेको र अध्ययनको क्रममा

कार्यदलका सबै सदस्यहरु स्थलगत भ्रमणको लागि झापाको बेलडाँगी, मोरङको पथरी शिविरमा गई त्यहा रहेका UNHCR, CMC (Camp Management committee ) र RCU ( Refugee Co-ordination Unit) मा रहेका विवरणहरु संकलन गर्ने र शरणार्थीहरुसँग भेट गरी तथ्यहरु संकलन गरी अध्ययन गर्ने समेतको काम गरेका थियौं । सोही दौरानमा शरणार्थीहरु मध्ये कोही छुट भएको भए सो को आवेदनका लागि फारम बितरण र संकलन गर्ने, शरणार्थीहरु मध्ये तेश्रो मुलुकमा पुनर्स्थापना हुन चाहनेहरु, नेपालमै रहन चाहनेहरु र स्वदेश फिर्ता हुन चाहनेहरुको विवरण संकलन गर्ने कार्य गरेका थियौं । यस पश्चात कार्यादलले विवरण संकलन र अध्ययनकै क्रममा मेरो गृह मन्त्रालयबाट जिल्ला प्रशासन कार्यालय ललितपुरमा सरुवा भएकोले २०७६ सालको असोज २ गते म उक्त कार्यालयमा हाजिर भएपछि मैले उक्त कार्यदल पनि छाडेको कारण कार्यदलको म्याद थप, प्रतिवेदन निर्माण तथा पेश गर्ने कार्यमा म संलग्न छैन । यस बाहेक अन्य केही छैन भन्ने व्यहोराको दिपक प्रसाद न्यौपानेको कागज ।

१४) **सुमिरा कार्कीको कागज**:

मैले जाहेवाला गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतलाई चिनेको छैन भन्ने ईन्द्रजित राईलाई म चिन्दछु । मेरो नाममा ललितपुर जिल्ला ललितपुर महानगर पालिका वडा नं.१२ मा रहेको घर बिक्री गर्ने क्रममा निज ईन्द्रजित राई समेत नचिनेको अन्य २ जना ब्यक्ती ब्यक्तीहरू समेत आई कुराकानी गर्ने क्रममा उक्त घर १ करोड तिरासी लाखमा बिक्री गर्ने भनी सहमती भई मिति २०७७।११।२६ गते रु.१०,०००००(दश लाख) र मिति २०७७।१२।०८ गते पुन:रु.१५,०००००।-(पन्ध्र लाख) रुपैया नगद मलाई दिई उक्त बैना कागज समेत गरी सो बैना कागजको पछाडी समेत रकम दिएको भनी उल्लेख गरेको थियो । त्यसै क्रममा उक्त बैना कागजमा भएको सहमती अनुसार उक्त घर करिब २ महिनाको अन्तरमा मालपोत कार्यलय ललितपुरमा निज ईन्द्र जित राई, निजको छोरा निरज राई, निजको श्रीमती र अन्य नचिनेको अन्य २ जना ब्यक्तीहरु समेत उपस्थित भई म सुमिरा कार्कीको नाममा दर्ता भएको घर भुवनदेबी राईको नाममा पास गरी दिदा निज ईन्द्रजित राईले घर बिक्री गरेको रकम मलाई कालो झोलामा नगद रु.३०,०००००।-(तिस लाख) र बाँकी रहेको अन्य रकम मेरो नाममा टेकु स्थित मेगा बैकमा रहेको खाता नं.०१९००५९७१४१६७ मा रकम जम्मा गरी दिएको हो । उक्त खातामा को-कस्ले, के-कसरी, के-कुन रकम, के-कती रकम जम्मा गरी दिए भन्ने सम्बन्धमा मलाई यकिन थाहा छैन । मेरो नामको जग्गाधनी प्रमाण पत्र मालपोत कार्यलयमा हुने पर्नेमा उक्त पुर्जा के-कसरी निज ईन्द्रजित राईको घरबाट प्रहरीले बरामद गरेको हो सो पुर्जा हेरी चिनी सनाखत समेत गरी दिएँ । सो सम्बन्धमा मलाई थाहा छैन निजलाई नै थाहा होला । सो बाहेकको अन्य कारोबार निजबाट मैले हाल सम्म गरेको छैन । मैले निज ईन्द्रजित राईलाई आफ्नो घर बिक्री गर्दा निजले बिभिन्न मितिमा मलाई नगद तथा मेगा बैंकको खातामा रकम जम्मा गरी दिएको थिए । उक्त रकम निजले के-कहाँबाट ल्याए मलाई थाहा भएन भनी सुमिरा कार्कीले गरेको कागज ।

**१५) लोकनाथ योगीले गरेको कागज:**

प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राई समेतसँग मेरो चिनजान छैन, गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरी दरखास्तमा नाम खुलेका प्रतिवादी शन्देश शर्मालाई चिनेको छैन,जाहेरवाला मध्ये गजेन्द्र बुढाथोकीसँगमेरो आजभन्दा १ महिना अगाडीदेखी चिनजान भएको हो,मेरो गाँउघरका चिनजानका साथिहरु दिपक के.सी, प्रेमनाथ योगीले जाहेरवाला गजेन्द्र बुढाथोकी मार्फत अमेरिका जान लागेको कुरा बताएकोले मैले पनी अमेरिका जानु पर्‍यो भन्दा दिपक के.सी.समेतले मलाई गजेन्द्र बुढाथोकीलाई भेटघाट गराएकोमा निज गजेन्द्र बुढाथोकीले अमेरिका लैजान्छु एक जनाको खर्च

रु.५५,००,०००।–(पचपन्न लाख) लाग्छ भनी बताई बिश्वास दिलाई शुरुमा एडभान्स स्वरुप रु.५,००,०००।–(पाँच लाख) दिनुपर्छ भनेकोमा मैलै बि.सं.२०७८।४।३ गते गजेन्द्र बुढाथोकीलाई तुलसीपुर स्थित निजकै घरमा भेटी नगदै रु.५,००,०००।–(पाँच लाख) दिएको हुँ । मैले रकम दिईसकेपछी गजेन्द्र बुढाथोकीले फिन्गरप्रिन्ट तथा अन्तरवार्ता गर्नुपर्छ चितवनको सौराहा आउनु आउँदाखेरी नगद रु.१५,००,०००।–(पन्ध्र लाख) बोकेर आउनु भनेकोले म रकम बोकी चितवन गई गजेन्द्र बुढाथोकिलाई भेट्दा औंठा छाप अभिलेख लिई अन्तरवार्ता गरेका थिए,सो अन्तरवार्ता लिने क्रममा गजेन्द्र बुढाथोकी बाहिर बसी अन्तरवार्ता लिने व्यक्ती भित्र अर्कै २ जना सरकारी कर्मचारीको ड्रेस लगाएका थिए भने बाहिर सरकारी नंबर प्लेटको गाडी समेत राखेका थिए । सोही समयमा मैले म समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजान लागेको कुरा थाहा पाएँ । सो समयमा मेरो फारम भरी फोटो समेत खिचेकोमा फारममा मेरो नाम रबिन पौडेल उल्लेख गरी भुटानी शरणार्थी बनाई अमेरिका लैजाने कुरा गरेका थिए,अन्तरवार्ता सकिएपछी गजेन्द्र बुढाथोकीले रकम मागेकोले मैले मिति २०७८।५।२७ गते नगदै रु.१५,००,०००।–(पन्ध्र लाख) रुपैया नगदै गजेन्द्र बुढाथोकीलाई दिएको हुँ । त्यसपछी म आफ्नो घर फर्के केही समयपछी मलाई गजेन्द्र बुढाथोकीले फोन गरी फाईनल मेडिकलको लागी बिराटनगरको बिराट मेडिकल गई सन्तोष शर्मासँग भेट्नु भनेकोले भनेकोले म मिति २०७८।७।८ गते बिराट मेडिकल कलेज गई सन्तोष शर्मालाई भेटी फर्किय त्यसपछी अमेरिकामा उडान हुने समयमा बाकी रकम दिनुपर्छ भनेकोले म आफ्नो घरमा फर्के निज प्रतिवादीले मलाई दिनु पर्ने रकम नगदै ल्याउनु भनेको कारण नगदै दिएको हो । निज प्रतिवादीले रकम बुझि सके पश्चात तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाई ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म आफुले निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु मलाई पठाई विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले म बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र मलाई देखाउने, Whats App मा पठाई झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी म बाट निज प्रतिवादीले लिएको उक्त रकम रु.२०,००,०००।–(बिस लाख) दिलाई भराई पाउँ भन्ने ब्यहोराको लेखनाथ योगीको कागज ।

१६) **तेजिना लम्सालले गरेको कागज**:

प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राई समेतसँग मेरो चिनजान छैन, गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरी दरखास्तमा नाम खुलेका प्रतिवादी शन्देस शर्मासँग चिनजान छ,जाहेरवाला मध्ये गजेन्द्र बुढाथोकी मेरो छिमेकी भएकोले निजसँग मेरो चिनजान भएको हो,मेरो गाँउघरका चिनजानका अन्य साथिहरु जाहेरवाला गजेन्द्र बुढाथोकी मार्फत अमेरिका जान लागेको कुरा बताएकोले मैले पनी अमेरिका जानुपर्‍यो भनी गजेन्द्र बुढाथोकीलाई भेटघाट गर्दा निज गजेन्द्र बुढाथोकीले अमेरिका लैजान्छु एक जनाको खर्च रु.४५,००,०००।–(पैंतालिस लाख) लाग्छ भनी बताई बिश्वास दिलाई शुरुमा एडाभान्स स्वरुप रु.५,००,०००।–(पाँच लाख) दिनुपर्छ भनेकोमा मैलै बि.सं.२०७७।१०।२३ गते गजेन्द्र बुढाथोकीलाई तुलसीपुर स्थित निजकै घरमा भेटी नगदै रु.५,००,०००।–(पाँच लाख) दिएको हुँ । मैले रकम दिईसकेपछी

गजेन्द्र बुढाथोकीले फिन्गरप्रिन्ट तथा अन्तरवार्ता गर्नुपर्छ चितवनको सौराहा आउनु आउँदाखेरी नगद रु.१०,००,०००।–(दश लाख) बोकेर आउनु भनेकोले म रकम बोकी चितवन गई गजेन्द्र बुढाथोकिलाई भेट्दा औंठाछाप अभिलेख लिई अन्तरवार्ता गरेका थिए,सो अन्तरवार्ता लिने क्रममा गजेन्द्र बुढाथोकी बाहिर बसी अन्तरवार्ता लिने व्यक्ती भित्र अर्कै २ जना सरकारी कर्मचारीको ड्रेस लगाएका थिए भने बाहिर सरकारी नंबर प्लेटको गाडी समेत राखेका थिए। सोही समयमा मैले म समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजान लागेको कुरा थाहा पाएँ। सो समयमा मेरो फाराम भरी फोटो समेत खिचेकोमा फारममा मेरो नाम शारदा चौलागाँई उल्लेख गरी भुटानी शरणार्थी बनाई अमेरिका लैजाने कुरा गरेका थिए,अन्तरवार्ता सकिएपछी गजेन्द्र बुढाथोकीले रकम मागेकोले मैले मिति २०७८।२।२६ गते नगदै रु.१०,००,०००।–(दश लाख) रुपैया नगदै गजेन्द्र बुढाथोकीलाई दिएको हुँ। गजेन्द्र बुढाथोकिले पुन:रकम मागेकोले मैले मिति २०७८।६।१७ गते गजेन्द्र बुढाथोकिलाई घरमा भेटी नगदै रु.२५,००,०००।–(पच्चिस लाख) दिएको हुँ,गजेन्द्र बुढाथोकीले फोन गरी फाईनल मेडिकलको लागी बिराटनगरको बिराट मेडिकल गई सन्तोष शर्मासँग भेट्नु भनेकोले म मिति २०७८।७।८ गते बिराट मेडिकल कलेज गई सन्तोष शर्मालाई भेटी फर्किएको हो। फाईनल मेडिकल सकिएपछी गजेन्द्र बुढाथोकीले पुन:रकम मागेकोले मैले मिति २०७८।९।२ गते गजेन्द्र बुढाथोकीलाई भेटी नगदै रु.५,००,०००।–(पाँच लाख) दिएको हुँ, निज प्रतिवादीले रकम बुझि सके पश्चात तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाई ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म आफुले निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु मलाई पठाई विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले म बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र मलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी म बाट निज प्रतिवादीले लिएको उक्त रकम रु.४५,००,०००।–(पैंतालिस लाख) दिलाई भराई पाउँ भन्ने ब्यहोराको तेजिना लम्सालको कागज।

१७) **सुशिल वलीले गरेको कागज**:

राम कुमार रेग्मी समेतको जाहेरी दरखास्तमा नाम खुलेका प्रतिवादी शन्देस शर्मालाई चिनेको छैन,जाहेरवाला मध्ये गजेन्द्र बुढाथोकीलाई मैले आजभन्दा ४ बर्ष अगाडीदेखी चिनजान भएको हो,मेरो गाँउघरका चिनजानका अन्य साथिहरु जाहेरवाला गजेन्द्र बुढाथोकी मार्फत अमेरिका जान लागेको कुरा बताएकोले मैले पनी अमेरिका जानुपर्‍यो भन्दा निज गजेन्द्र बुढाथोकीले अमेरिका लैजान्छु एक जनाको खर्च रु.५०,००,०००।–(पचास लाख) लाग्छ भनी बताई बिश्वास दिलाई शुरुमा एडभान्स रु.१०,००,०००।–(दश लाख) दिनुपर्छ भनेकोमा मैले बि.सं.२०७७।११।१२ गते गजेन्द्र बुढाथोकीलाई तुलसीपुर स्थित निजकै घरमा भेटी नगदै रु.१०,००,०००।–(दश लाख) दिएको हुँ। मैले रकम दिईसकेपछी गजेन्द्र बुढाथोकीले फिन्गरप्रिन्ट तथा अन्तरवार्ता गर्नुपर्छ चितवनको सौराहा आउनु आउँदाखेरी नगद रु.१०,००,०००।–(दश लाख) बोकेर आउनु भनेकोले म रकम बोकी चितवन गई गजेन्द्र बुढाथोकिलाई भेट्दा औंठाछाप अभिलेख लिई अन्तरवार्ता गरेका थिए,सो अन्तरवार्ता लिने क्रममा गजेन्द्र बुढाथोकी बाहिर बसी अन्तरवार्ता लिने व्यक्ती भित्र अर्कै २ जना सरकारी

कर्मचारीको ड्रेस लगाएका थिए साथै बाहिर सरकारी नंबर प्लेटको गाडी समेत राखेका थिए। सोही समयमा मैले म समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजान लागेको कुरा थाहा पाएँ। सो समयमा मेरो फाराम भरी फोटो समेत खिचेकोमा फारममा मेरो नाम बरुण थापा उल्लेख गरी भुटानी शरणार्थी बनाई अमेरिका लैजाने कुरा गरेका थिए,अन्तरवार्ता सकिएपछी गजेन्द्र बुढाथोकीले रकम मागेकोले मैले नगदै रु.१०,००,०००।–(दश लाख) रुपैया नगदै गजेन्द्र बुढाथोकीलाई दिएको हुँ। केही समयपछी मलाई गजेन्द्र बुढाथोकीले फोन गरी फाईनल मेडिकलको लागी बिराटनगरको बिराट मेडिकल गई सन्तोष शर्मासँग भेट्नु भनेकोले म मिति २०७८।७।८ गते बिराट मेडिकल कलेज गई सन्तोष शर्मालाई भेटी फर्किएको र त्यसपछी अमेरिकामा उडान हुने समयमा बाँकी रकम दिनुपर्छ, निज प्रतिवादीले मलाई दिनु पर्ने रकम नगदै ल्याउनु भनेको कारण मैले नगदै दिएको हो। निज प्रतिवादीले रकम बुझि सके पश्चात तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाई ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म आफुले निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु मलाई पठाई विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिनेजानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले म बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र मलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी म बाट निज प्रतिवादीले लिएको उक्त रकम रु.२०,००,०००।–(बिस लाख) दिलाई भराई पाउँ भन्ने ब्यहोराको शुसिल ओलीले अनुसन्धानको क्रममा गरी दिएको कागज।

१८) **राजु के.सी.ले गरेको कागज:**

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर रई सँग मेरो चिनजान छैन, गजेन्द्र बुढाथोकी र प्रतिवादी शन्देस शर्मालाई गजेन्द्र बुढाथोकी मार्फत चिनेको हुँ, जाहेरी दरखास्त साथ पेश भएको निज प्रतिवादी सन्देश शर्माको फोटो तथा नागरिकताको प्रतिलिपी समेत देखाउँदा देखी पाएँ, उक्त फोटो तथा नागरिकताको प्रतिलिपीमा देखिएका व्यक्ति नै सन्देश शर्मा हुन, जाहेरवाला गजेन्द्र बुढाथोकीसँग मेरो आफन्त मानिसहरु मार्फत चिनजान हुँदा निजले मलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिने भनी कुराकानी गरेको र सो कार्यको लागी जनही रु.५०,००,०००।–(पचास लाख) लाग्छ र केही रकम एडभान्स वापत दिनु पर्छ भनी रकम माग गरेका हुँदा मेरो श्रीमती कमला बस्नेतलाई गजेन्द्र बुढाथोकीले बताए बमोजिम निजको श्रीमती प्रितम शर्माको नामको ज्योति विकाश बैक लिमिटेडको खाता नं.०४२११४००२२३७६६००००००१ नम्बरको खातामा मिति २०७७।१२।२३ गते रु.१०,००,०००।–(दश लाख) जम्मा गर्न लगाएको थिएँ। मेरो श्रीमती कमला बस्नेतको नामबाट प्रितम शर्माको नामको ज्योति विकास बैक लि.को खातामा जम्मा गराएको सक्कल भौचर यसै कागज साथ पेश गरेको छु। मैले गजेन्द्र बुढाथोकीले बताए बमोजिम निजको श्रीमतीको नाममा रु.१०,००,०००।–(दश लाख) रकम पठाई सके पछि गजेन्द्र बुढाथोकीले मिति २०७८।०२।२८ गते चितवन जिल्लामा इन्टरभ्युर, बायोमेट्रिक गर्नु पर्छ भनी बोलाएको हुँदा म लगाएत अन्य भुटानी शरणार्थी बनी अमेरीका जान लागेका साथिहरु समेतलाई बोलाएको थिए। गजेन्द्र बुढाथोकीले बताए बमोजिम म समेतलाई इन्टरभ्युको लागि चितवनको सौराहा स्थित

मिति २०७८।०२।२८ गते गई यकिन नाम थाहा नभएको होटलमा राखि उक्त होटलमा म लगायत अन्य साथिहरु समेतलाई फिङ्गरीङ, बायोमेट्रिक लिने कामहरु गर्नु भएको थियो। उक्त इन्टरभ्यु जाने क्रममा आफ्नो सक्कल नाम नबताई अर्को नाम बताउन लगाएकोले मैले आफ्नो नाम नबताई निजहरुले बताएको अर्को नाम बताएको थिए। मैले ईन्टरभ्युमा बताएको नाम हाल मलाई याद छैन। उक्त होटलमा ईन्टरभ्यु र बायोमेट्रिक गरीसके पश्चात गजेन्द्र बुढाथोकी, आकाश रेग्मी समेतको सामुन्यमा निजहरुलाई नगद रु.१०,००,०००।–(दश लाख) दिएको थिए। उक्त होटलमा गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेट्दा निजले उक्त रिसोर्टमा सरकारी युनिफर्म लगाई सेतो नम्बर प्लेट भएको सरकारी गाडीमा आएका थिए। मिति २०७८।०२।२८ गते मैले नगद रकम दिए पश्चात मलाई मिति २०७८।०७।०८ गते पुन:मेडिकलको लागि जानु भनी गजेन्द्र बुढाथोकिले पठाएको हुँदा निजले बताए बमोजिम म मोरङ जिल्लाको बिराटनगर स्थित रहेको बिराट मेडिकल कलेजमा स्वास्थ्य परीक्षण गर्न म लगाएत अन्य साथिहरु समेत भई गएका थियौ। म लगाएत अन्य साथिहरुलाई बिराट मेडिकल कलेजमा लैजाने काम गजेन्द्र बुढाथोकिको जेठान सन्तोष शर्माले गरेका थिए भने मेडिकल गर्ने क्रममा एक कोठाबाट अर्को कोठामा लैजाने कागजपत्रहरु तयार गर्ने लगाएतका कामहरु सन्देश शर्माले गरेका थिए। म लगाएतका अन्य साथिहरु समेत भई मिति २०७८।०२।२८ गते बिराट मेडिकल कलेजमा मेडिकल गरेका थियौ। गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा सो सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँ। म लाई अमेरीका पठाई दिने भनी म बाट नगद लिएको जम्मा रु.२०,०००००(बिस लाख) निज प्रतिवादीहरुबाट असुल उपर गराई निजहरूलाई कानून बमोजिम कारवाही गरी पाउँ भनी राजु के.सी. को कागज।

१९) **प्रमोद विक्रम राणाले गरेको कागज**:

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादीकेशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ, सागर राई समेतसँग मेरो चिनजान छैन,गजेन्द्र बुढाथोकी समेतको जाहेरी दरखास्त लगाएतको कागजातहरू पढीबाची सुनी ब्यहोरा अवगत भयो। गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्नेभएकोले निजलाई मैले चिनेको हो। त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा भाई तिमी बेरोजगार रहेछौ, तिमी अमेरीका जान्छौ भनी निजले मलाई बताउँदा के-कसरी जाने भनी निजसँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चांही कृष्ण क्षेत्री भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी

अमेरीकामा जान लाग्ने खर्च रु.५०,०००००।-(पचास लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाएकोमा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर-सापटी मागी ल्याएको रु.१०,०००००- (दश लाख) निज गजेन्द्र बुढाथोकी एडभान्स स्वरुप मिति २०७७ साल फागुन १० गते निजकै घरमा भेटी नगद दिएको र निजलाई रकम बुझेको भरपाई माग्दा तपाईको काम गोप्य रुपमा गर्ने हो, यदि तपाईलाई अमेरीका पठाउन सकेन भने तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसको ३ दिन पछी गजेन्द्र बुढाथोकी मार्फत आकाश रेग्मी भन्ने राम कुमार रेग्मीको काठमाण्डौ स्थित नयाँबानेश्वरमा रहेको निजको अफिसमा गई कृष्ण क्षेत्रीको नामबाट मेरो सम्पुर्ण बिवरण भरी हल्ला खल्ला नगर्नु भनी पठाएको थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन:मलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ, कामको प्रकृया भई रहेको छ, तपाई मिति २०७८।०२।२८ गते चितवन स्थित सौराहामा रहेको रिसोटमा गई सन्देस शर्मा लाई भेटी पुन:दश लाख दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देस शर्मालाई भेट्दा निजले उक्त रिसोर्टमा सरकारी युनिफर्म लगाई सेतो नम्बर प्लेट भएको सरकारी गाडीमा आएका थिए। निजलाई भेटी मैले बोकी ल्याएको रु.१०,०००००(दश लाख) नगदै दिई निजले मेरो हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ, ढुक्क भएर बस्नु भनी पठाए। पछी २०७८।०७।०६ गते बिराट मेडिकल कलेज बिराटनगरमा बोलाई मेरो मेडिकलको सम्पुर्ण काम सन्देस शर्मा मार्फत गराई तिमीहरूको काम धमाधम हुदै छ अब १ महिनामा उडछौ यो कुरा बाहिर हल्ला नगर भनी पठाए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु पठाई विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले हामीबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगाएतका उच्च पदस्थमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँ। मलाई अमेरीका पठाई दिने भनी म बाट नगद लिएको जम्मा रु.२०,०००००(बिस लाख) निज प्रतिवादीहरुबाट असुल उपर गरराई पाउँ भन्ने ब्यहोराको प्रमोद बिक्रम राणाको कागज।

२०) **प्रबिधा रेग्मीको कागज** :

प्रतिवादी प्रसाद दुलाल कुमार गुरुङ, सागर राई समेत सँग मेरो चिनजान छैन, गजेन्द्र बुढाथोकी र सन्देश शर्मा मेरो गाउँको भाई हुन गाउको भाई भएता पनि भेटघाट नभएको धेरै वर्ष भयो हेरी दरखास्त साथ पेश भएको निज प्रतिवादी सन्देश शर्माकी फोटो तथा नागरिकताको प्रतिलिपीसमेत देख पाए उक्त फोटो तथा नागरिकताको प्रतिलिपीमा देखिएका व्यक्ति ने सन्देश शर्मा हुन जाहेरवालामध्ये बुदायकीको घर मेरो घर नजिकै दाङ तुलसीपुरमा हो, निजको घरमा ज्योति विकाश बैंक संचालन रहेको छ सुकीले मेरो दिदी निर्मला लम्साल लाई २०७७ सालको शुरुमा सरकारी कोटामा अमेरिका पठाई दिने विश्वासमा पारी निके परमा बोलाई अमेरिका पठाइदिने भनी दिदि निर्मता लम्सालबाट नगद रु.५,००००० (पाच लाख) गजेन्द्र बुढा स्वस्थ लिएको र

तपाईंको काम हुदै छ यो काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भने तपाईंबाट लिएको पुरै रकम फिर्ता गर्छु भनी विश्वास दिलाई गजेन्द्र बुढाथोकी मार्फत सन्देश शर्मालाई मिति २००८२२६ भेटी बायोमेट्रिकको काम गर्नु तत्काल उक्त काम गर्न रु.१०,००००० (दश लाख) लिई जानु भनी पठाएकोमा निजले भने अनुसारको दिनमा नै निज सन्देश शर्मालाई चिवनमा गई भेटी कुराकानी गर्दा निजले तपाईंको काम हुदै छ भनी निज सन्देश शर्मा उक्त स्थानमा सरकारी युनिफर्म लगाई सेतो नम्बर प्लेट भएको सरकारी गाडीमा चढी भाई दिदीको बायोमेट्रिकको काम गरी नगद रु.१०,००००० लिई तपाईंको काम हुदै छ ढुक्क भएर बस्नु भनी यो कुरा कसैलाई हल्ला नगर्नु भनी पठाई मिति २०७८४६११८ गते निज गजेन्द्र बुढाथोकीले पुन दिदि निर्मता लम्सालाई आफ्नो घरमा बोलाई तपाईंको काम पुरा हुन लाग्यो अब २०,००००० (बिस लाख) लिई आउनु भनेकोले दिदिले आफ्नो आफन्तहरूबाट सरसापटी लिई नगद रु २०,००००० (बिस लाख) लिई गएकोमा उक्त रकम निज गजेन्द्र बुढाथोकीलाई भेटी उक्त रकम दिदिले दिए पछी निजले तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु मैले नेपालका माथिल्लो निकायका उच्च पदका मानिसहरुलाई चिनेको छु सो काम निजहरू मार्फ तपाईंहरु ढुक्क भएर वस्तु भनी छु. आश्वासन दिई पठाएकोमा निज गजेन्द्र बुढाथोकीलाई दिदिले भेटी कुराकानी गर्दा तपाईंको काम आज भोली हुन्छ भन्दै समय बिताउदै आवासन दिदै आईरहेकोमा निजले दिदीलाई विभिन्न कागजहरु दिई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै विभिन्न प्रकारका नक्कली कागजपत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको रहेछ भन्ने कुरा दिदिले थाहा पाई सो कुरा घर परिवारको आफ्नतहरू समेतलाई जानकारी गराएकोले सो घटना सम्बन्धमा थाहा भएको थियो। यसरी मेरो दिदी निर्मता लम्साललाई प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भन्डारी लगाएतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि नगदे रुपैया लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हु मेरो दिदी निर्मला लम्साललाई अमेरीका पठाई दिने भनी विभिन्न मितिमा पटक पटक गरो दिदिबाट नगद लिएको जम्मा रु.३५,००००० (पैतिस लाख) निज प्रतिवादीहरुबाट असुल उपर गराई उक्त घटनामा संतम्न रहेका प्रतिवादीहरुलाई समेतलाई पक्राउ गरी कानून बमोजिम कारवाही गरी पाउ भन्ने व्यहोराको प्रविधा रेग्मीको कागज।

२१) **<u>बसन्त के.सी.ले गरेको कागज</u>** :

प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राई सँग मेरो चिनजान छैन, जाहेरवाला गजेन्द्र बुढाथोकी र प्रतिवादी शन्देस शर्मा मेरो गाउँको भाई हुन। जाहेरी दरखास्त साथ पेश भएको प्रतिवादी सन्देश शर्माको फोटो तथा नागरिकताको प्रतिलिपी समेत देखाउँदा देखी पाए, उक्त फोटो तथा नागरिकताको प्रतिलिपीमा देखिएका व्यक्ति नै सन्देस शर्मा हुन। जाहेरवाला मध्येका गजेन्द्र बुढाथोकीको घर मेरो घर नजिकै दाङ तुलसीपुरमा हो। जाहेरवाला गजेन्द्र बुढाथोकीले मेरो सहोदर भाई दिपक के.सी.लाई २०७८ सालको शुरुमा सरकारी कोटामा अमेरिका पठाई दिने बिश्वासमा पारी निजकै घरमा बोलाई अमेरिका पठाउन मेरो भाई दिपक के.सी.बाट रु.५,००,०००/-(पाँच लाख) लिए, पछी पुन:मिति २०७८/०५/२८ गते चितवनमा बोलाई रु.१५,००,०००/-(पन्ध्र लाख) गरी जम्मा रु.२०,००,०००/-(बिस लाख) लिएका थिए। उक्त रकम लिई सकेपछी गजेन्द्र बुढाथोकीले अमेरिकाले नेपालमा बसेका भुटानी शरणार्थीहरुलाई अमेरिकाको स्थायी बसिन्दा बनाउने गरी लैजाने योजना ल्याएको छ, मेरो माथिल्लो तहका व्यक्तिहरुसँग राम्रो सम्बन्ध छ भनी मेरो भाई दिपक के.सी.लाई उमेश बस्नेत नामको भुटानी शरणार्थी बनाई शरणार्थी कोटामा अमेरिका पठाउने भनी

झापाको भुटानी शरणार्थी क्याम्पमा लागी फोटो लिने, मेडिकल गराउने, बिभिन्न कागजातहरुमा सहीछाप गर्न लगाई मेरो भाई दिपक के.सी.को भुटानी शरणार्थी उमेश बस्नेतको नामबाट शरणार्थी कार्ड बन्छ, उक्त कार्ड बनेपछी अमेरिका पठाउने प्रकृया शुरु भई केही महिना पश्चात नै अमेरिका जान्छन काम पक्का हुन्छ, ढुक्क हुनुस र थप रु.३०,००,०००/-(तीस लाख) तयार गरी राख्नु, काम सम्पन्न भए पछी दिनु पर्छ भनेका थिए । रकम बुझि सके पश्चात काम भई राखेको छ, जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म निजको कुरामा विश्वास गरी बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र काम हुदै गरेको भन्ने बिभिन्न कागजहरु देखाउने गरी विश्वास दिलाउँदै आएकोमा रकम लिई बिश्वासमा पार्दै आएकोमा गजेन्द्र बुढाथोकीले नै मेरो भाई समेत ठगीएको भनी जाहेरी दिएको जिल्ला प्रहरी परिसर काठमाण्डौ मार्फत जानकारी हुन आयो । मेरो भाई दिपक के.सी.हाल बिरामी भएकोले म निजको सहोदर दाजु बसन्त के.सी.अनुसन्धान अधिकृत समक्ष उपस्थित भई यो घटना बिबरण कागज गरी दिएको छु । मेरो भाई दिपक के.सी.लाई शरणार्थीको रुपमा अमेरिका पठाउने भाईको तर्फबाट जाहेरी दरखास्त पेश गर्ने गजेन्द्र बुढाथोकीलेनै भनेका र निजलेनै रकम लिएको हुंदा ठगी गर्ने कार्यमा निज गजेन्द्र बुढाथोकी, पक्राउ परेका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी समेत अन्य को-कसको संलग्नता छ अनुसन्धान गरी कानून बमोजिम कारबाही र ठगी गरेको रकम मेरो भाई दिपक के.सी.लाई दिलाई भराई दिनुपर्छ भन्ने ब्यहोराको बसन्तको के.सी.को कागज।

२२) **अर्जुन न्यौपानेले गरेको कागज :**

जाहेरवाला गजेन्द्र बुढाथोकी मेरो गाँउका ब्यक्ती भएको हुँदा निजलाई चिन्दछु । गजेन्द्र बुढाथोकीले अमेरिका पठाउन सक्ने मेरा चिनजानका मानिसहरु छन, जाने भए रु.४५,००,०००।–(पैंतालिस लाख) सम्म लाग्छ भनी मेरो दाजु शंकर न्यौपानेबाट मिति २०७७/२०७८ सालमा पटक-पटक गरी जम्मा रु.१९,००,०००।-(उन्नाईस लाख) रकम लिए पछी फोटो खिच्न तथा बायोमेट्रिक गर्न कहिले काठमाण्डौ कहिले चितवन बोलाउने गरेका थिए । मैले दाजुलाई गजेन्द्रले के-कसरी अमेरिका पठाउँछ भनी बुझ्दा कागज मिलाएर भुटानी शरणर्थी बनाई अमेरिका लैजाने भनेका छन भनी बताएको हुँदा मैले सो बारेमा जानकारी पाएको थिएँ । पछि लामो समय सम्म बिदेश नपठाए पछी गजेन्द्र बुढाथोलीलाई के काम भएको छ भनी सोध्दा गजेन्द्र बुढाथोकीले मैले रकम बिदेश जान सेटिङ मिलाउने मानिसहरुलाई बुझाएको छु भन्ने गरेका थिए । रकम बुझाएको लामो समय सम्म काम नहुने भएपछि हाम्रो रकम फिर्ता दिनु भन्दा जाहेरवाला गजेन्द्र बुढाथोकीले मैले रकम बुझाएको ठाउँबाट रकम आएपछी फिर्ता दिन्छु भन्ने गरेका थिए हाल मेरो दाजु शंकर न्यौपाने बैदेशिक रोजगारको सिलसिलामा मलेसिया गएका छन । हाल बिभिन्न संचार माध्यमबाट शम्प्रेशित समाचारहरु समेतबाट पक्राउ प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी,टंक कुमार गुरुङ,सागर राई समेत आपसमा मिली मेरो दाजु शंकर न्यौपानेलाई अमेरिका पठाई दिने भनी गजेन्द्र बुढाथोकी मार्फत रकम उठाई नगदै हातहातै रु.१९,००,०००।– (उन्नाईस लाख) रकम उठाई लिई ठगी गरेको हुँदा मेरो दाजुको ठगीएको रकम निज प्रतिवादीहरुबाट फिर्ता दिलाई भराई कानून बमोजिम कारवाही हुन पर्छ भन्ने ब्यहोराको अर्जुन न्यौपानेको कागज ।

२३) **गोपाल ओली क्षेत्रीले गरेको कागज** :

प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी समेतसँग मेरो चिनजान छैन**,** गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरी दरखास्तमा नाम खुलेका प्रतिवादी शन्देस शर्मालाई चिनेको छैन,जाहेरवाला मध्ये गजेन्द्र बुढाथोकीसँग मेरो सामान्य चिनजान छ,मेरो चिनजानका अन्य मानिसहरु जाहेरवाला गजेन्द्र बुढाथोकी मार्फत

अमेरिका जान लागेको कुरा थाहा पाएकोले मेरो बुहारी मिना रानाले अमेरिका जानुपर्‍यो भन्दा निज गजेन्द्र बुढाथोकीले मेरो बुहारीलाई अमेरिका लैजान्छु खर्च रु.५०,००,०००।–(पचास लाख) लाग्छ भनी बताई बिश्वास दिलाई शुरुमा एडभान्स रु.१०,००,०००।–(दश लाख) दिनुपर्छ भनेकोमा मैले गाउँमा ऋण खोजी बुहारीलाई दिएकोमा बि.स २०७७।१२।१२ गते बुहारी मिना रानाले गजेन्द्र बुढाथोकीलाई तुलसीपुर स्थित निजकै घरमा भेटी नगदै रु.१०,००,०००।–(दश लाख) दिएकी हुन । बुहारीले रकम दिईसकेपछी गजेन्द्र बुढाथोकीले फिन्गरप्रिन्ट तथा अन्तरवार्ता गर्नुपर्छ चितवनको सौराहा आउनु, आउँदाखेरी नगद रु.१०,००,०००।–(दश लाख) बोकेर आउनु भनेकोले बुहारीले रकम बोकी चितवन गई गजेन्द्र बुढाथोकिलाई भेटी औठाछाप अभिलेख अन्तरवार्ता समेत गरेकी थिईन, सो समयमा बुहारी मिना रानाको फोटो समेत खिची फाराममा बुहारीको नाम सिमरन थापा उल्लेख गरी भुटानी शरणार्थी बनाई अमेरिका लैजाने कुरा गरेका रहेछन,अन्तरवार्ता सकिएपछी गजेन्द्र बुढाथोकीले रकम मागेकोले मिति २०७८।२।२६ गते रु.१०,००,०००।–(दश लाख) नगदै गजेन्द्र बुढाथोकीलाई दिएकी हुन । प्रतिवादीले रकम बुझि सके पश्चात काम भई राखेको छ, जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण मेरो बुहारी मिना राना निजहरुको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा प्रतिवादीहरुले ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारी समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी मेरो बुहारी मिना रानाबाट निज प्रतिवादीहरुले लिएको उक्त रकम रु.२०,००,०००।–(बिस लाख) दिलाई पाउँ भन्ने ब्यहोराको गोपाल योगीको कागज ।

२४) **प्रदिप अर्यालले गरेको कागज** :

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ, सागर राई समेतलाई सँग मेरो चिनजान छैन,गजेन्द्र बुढाथोकी समेतको जाहेरी दरखास्त लगाएतको कागजातहरू पढी बाची सुनी ब्यहोरा अबगत भयो । मिति २०७७ सालको पुसको पहिलो हप्ता तिर मेरो गजेन्द्र बुढाथोकीको जिल्ला काठमाण्डौ स्थित महाराजगंजमा रहेको भाटभटेनी अगाडी रहेको एक नाम थाहा नभएको खाना खाजा घरमा भेट भई निजसँग कुराकानी गर्ने क्रममा निजले मेरो आफ्नै सरकारी जागीर गर्ने जेठान सन्तोष शर्मा र भतिज भन्ने ब्यक्ती समेतलाई मैले अमेरीकामा पठाउने कार्य गर्दै आईरहेका छौं । तपाईहरू पनी जाने भए म पठाउन सक्छु भनी बिश्वास दिलाउनुका साथै निजले आफ्नो सम्पर्क नम्बर ९८६३११८९१५ टिपाई सम्पर्क गर्नु भनेका थिए ।मैले आफु अमेरीका जाने सोच बनाई निज गजेन्द्र बुढाथोकीले दिएको मोबाइल नम्बरमा फोन सम्पर्क गर्दा निजले मलाई तपाईहरूलाई अमेरीका जाने सम्पुर्ण कागजातहरू नेपाल सरकार गृह मन्त्रालय मार्फत तयार हुन्छ र ग्रिन कार्ड समेत बन्छ भनी प्रलोभन देखाई काठमाण्डौ स्थित बानेश्वरमा रहेको खरेल हाउसको माथिल्लो तलामा रहेको बिन्दाबासिनी नामले संचालन रहेको एक संस्थामा गई मेरो साथी आकास रेग्मी भन्ने राम कुमार रेग्मीलाई भेटी कुराकानी गर्नु कागजपत्र तयार गर्न तपाईले तत्काल रु.५०००००।–(पाँच लाख) दिनु भनेको हुँदा मिति २०७७।०९।१५ गते म र मेरो साथी निर्मल खत्री समेत ४ चार जना उक्त स्थानमा गई राम कुमार रेग्मीलाई भेटी कुराकानी गर्दा निजले मेरो पासपोर्ट साईजको १ प्रति फोटो लिई पैसा पनि लिई आउनु भनेकोले मैले १ प्रति फोटो र नगद रु.५०००००(पाँच लाख) दिएकोहो । मिति २०७८।२।१५ गते गजेन्द्र बुढाथोकीले मलाई फोन गरी तपाईले नगदै रु.१०,०००००(दश लाख) लिई चितवनमा आउनु उक्त दिनमा

तपाईको बायोमेट्रिकको काम हुन्छ अमेरीका जाने प्रोसेस हुँदैछ भनेकोले चितवन स्थित सौराहामा रहेको भिजन सफारी नामको रिसोर्टमा म लगाएत अन्य साथीहरू सो स्थानमा पुगी गजेन्द्र बुढाथोकी र जेठान भनी चिनाएका दाङका सन्तोष शर्मासँग भेट भए पछी निजहरूले म लगाएत निर्मल खत्री समेतलाई संगै सो होटलको पहिलो तलामा लिई गई हामीहरूको फोन समेत अफ गर्न लगाई सन्देश शर्मा र आकाश रेग्मी भन्ने राम कुमार रेग्मी भएको स्थानमा लगी मेरो नाम प्रदिप अर्याल भनी टिपाई रकम माग गरेकोले निजलाई मैले बोकी गएको रु.१०,००००० (दश लाख) बुझाए पछि रकम बुझेको भौचर माग्दा भौचर दिन मिल्दैन काम हुन्छ तपाईहरू तल्लो तलामा गई आफ्नो बायोमेट्रिकको प्रकृया पुरा गर्नु भनी टोकन समेत दिई पठाएकाले म सो तलामा गई हातको औलाको थम दिई, आँखाको नानीको समेत स्क्यान गरी म समेतलाई गजेन्द्र बुढाथोकी तपाईहरूको मेडिकल गरेर २०७८ को दशै भित्र अमेरीका उडाई सक्छौ भनेका थिए। केही दिन पछी गजेन्द्र बुढाथोकीले म समेतलाई बुटवल आउनु भनी तपाईको मोटामोटी काम पुरा हुन लागीसक्यो अब तपाईले बाँकी रकम रु.४५,००,०००।- (पैंतालिस लाख) को जोहो गर्नु भनेकाले हामीहरू केही दिन पछी बुटवल पुग्दा निज गजेन्द्र बुढाथोकीले निर्मल खत्रीको फेसबुकको म्यासेन्जरमा एन.एम.बी.बैंक लि.को खाता नम्बर ०१४००३९५१४८०००११, ऐ.बैकको खाता नम्बर ०१४०००५०६६५०००११, ऐ.बैकको खाता नम्बर ०१४००११४१६०००१३, लक्ष्मी बैकमा रहेको खाता नम्बर ०१९४०००२०२ र नेपाल ईनभेष्टमेन्ट बैक लि. ०१५०५०८००००२३१ तथा नेपाल एस.बि.आई.बैक लि.मा रहेको खाता न.१९५१५२४१४०१०४९ समेतको बिवरण म्यासेन्जरमा पठाई निजले खाता नम्बर प्राप्त भयो होला तिमीलाई सहज हुने खातामा रकम जम्मा गर्नु भनेकोले मेरो नाम प्रदिप अर्यालको नामबाट राजिब रेग्मीको एनएमबी बैक लि.मा रहेको खाता नम्बर ०१४०००५०६६५०००११ मा रु.१०,००००० (दश लाख) जम्मा गरी निज गजेन्द्र बुढाथोकीलाई सम्पर्क गरी अहिले १० लाख मात्र जम्मा गरी दिएको छु बाँकी रकम पछी दिन्छु भनी जानकारी गराए। गजेन्द्र बुढाथोकीले मलाई मेडिकलको लागी बिराटनगर जानु भनी आफ्नो जेठान बताउने सन्तोष शर्माको मोबाईल नम्बर ९८५७८२३५६५ मा सम्पर्क गर्नु भनेकोले उक्त नम्बरमा फोन गरी बिराटनगर गऱ्यौ । बिराटनगरमा सन्देस शर्मालाई भेटी निजकै सल्लाहमा बिराटमेडिकलमा लगी मेरो मेडीकल चेक गरी तिमीहरुको ट्रावल डकुमेन्ट र आई.डी.कार्ड बनी आउँछ गजेन्द्र बुढाथोकीलाई सम्पर्क गर्नु भनी पठाए । निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी केही रकम बुझाई सके अब कहिले काम हुन्छ भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले हामीबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थ पदमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँ। मलाई प्रतिवादीहरुले अमेरीका जाने भनी भराएको फर्ममा मेरो नाम प्रदिप पौडेल भनी भराएकोमा हाल बुझ्दा भुटानी शरणार्थी म लाई अमेरीका पठाई दिने भनी म बाट नगद लिएको जम्मा रु.२५,००००००।-(पच्चिस लाख) ठगी गरेको हुन जाहेरी दिदा निज गजेन्द्र बुढाथोकीले २०

लाख टिपाएका रहेछन सो कुरा हाल थाहा पाए म बाट ठगी भएको रकम २५ लाख नै हो फरक छैन उक्त रकम निज प्रतिवादीहरुबाट असुल उपर गराईपाउँ भनी रकम जम्मा गरेको प्रतिलिपी पाना १ यसै साथ पेश गरेको छु। निजहरूलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने ब्यहोराको प्रदिप अर्यालको कागज।

२५) **निर्मल खत्रीको कागज :**

मिति २०७७ सालको पुसको पहिलो हप्ता तिर मेरो गजेन्द्र बुढाथोकीको जिल्ला काठमाण्डौ स्थित माहाराजगंजमा रहेको भाटभटेनी अगाडी रहेको एक नाम थाहा नभएको खाना खाजा घरमा भेट भई निज सँग कुराकानी गर्ने क्रममा निजको र मेरो चिनापरिचय समेत भएको थियो। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले कुराकानी गर्ने क्रममा मेरो आफ्नै सरकारी जागीर गर्ने जेठान सन्तोष शर्मा र आफ्नो भतिज भन्ने ब्यक्ती समेतलाई मैले अमेरीकामा पठाउने कार्य गर्दै आईरहेका छौ। तपाईहरू पनी जानी भए म पठाउन सक्छु भनी बिश्वास दिलाई निजले आफ्नो सम्पर्क नम्बर ९८६३११८९१५ दिई सम्पर्क गर्नु भनी सो स्थानबाट निज निस्की गएका थिए। त्यसको केही समय पछी आफु अमेरीका जाने सोच बनाई निज गजेन्द्र बुढाथोकीले दिएको मोबाइल नम्बरमा फोन सम्पर्क गर्दा निजले तपाईहरूको अमेरीका जाने सम्पुर्ण कागजातहरू नेपाल सरकार गृह मन्त्रालय मार्फत तयार हुने हो। अमेरीका जान र अमेरीकाको ग्रिन कार्ड समेत बन्ने भनी प्रलोभन देखाई काठमाण्डौ स्थित बानेश्वरमा रहेको खरेल हाउसको माथिल्लो तलामा रहेको बिन्दाबासिनी नामले संचालन रहेको एक संस्थामा गई मेरो साथी आकास रेग्मी भन्ने राम कुमार रेग्मीलाई भेटी कुराकानी गर्नु काजगपत्र तयार गर्न तपाईले तत्काल रु.५०००००।–(पाच लाख) रकम नगदमा लिई जानु भनी निजको मोवाईल नम्बर ९८६३३९३२९९ समेत दिएकोले मिति २०७७।०९।१५ गते म र मेरो साथी प्रदिप अर्याल समेत ४ चार जना संगै मिली उक्त स्थानमा पुगी राम कुमार रेग्मीलाई भेटी कुराकानी गर्दा निजले मेरो पासपोर्ट साईजको १ प्रति फोटो लिई पैसा पनी लिई आउनु भनेकोले १ प्रति फोटो र नगद रु.५००००० (पाँच लाख) लिई निजलाई भेटी नगद पाँच लाख र १ प्रति फोटो समेत दिएका थियौ। उक्त रकम र फोटो निजले लिई सकेपछी अब तपाईहरूको केही समय पछी मेडीकल हुन्छ तपाईहरूलाई हामी जानकारी गराउछौ भनेका थिए। त्यस्तै २०७८।२।१५ गते गजेन्द्र बुढाथोकीले मलाई फोन सम्पर्क गरी तपाईले नगद रुपैया रु.१०,००००० (दश लाख) लिई चितवनमा आउनु म पुन:सम्पर्क गर्छु उक्त दिनमा तपाईको बायोमेट्रिकको काम हुन्छ अमेरीका जाने प्रोसेस हुँदैछ भनी मिति २०७८।२।२६ गते चितवनमा आई मलाई भेटनु भनी जानकारी गराएकोले निजले बताएको स्थान चितवन स्थित सौराहामा रहेको भिजन सफारी नामको एक रिसोर्टमा गई गजेन्द्र बुढाथोकी र जेठान भनी चिनाएका दाङका सन्तोष शर्मासँग भेट भए पछी निजहरूले म लगाएत प्रदिप अर्याल समेतलाई संगै सो होटलको पहिलो तलामा लिई गई हामीहरूको फोन समेत अफ गर्न लगाई सन्देस शर्मा र आकाश रेग्मी भन्ने राम कुमार रेग्मी भएको स्थानमा लगी मेरो नाम प्रदिप अर्याल भनी टिपाई रकम माग गरेकोले निजरूलाई मैल बोकी गएको रु.१०,००००० (दश लाख) बुझाई रकम बुझेको भौचर माग्दा भौचर दिन मिल्दैन काम हुन्छ, तल्लो तलामा गई आफ्नो बायोमेट्रिकको प्रकृया पुरा गर्नु भनी टोकन समेत दिई पठाएकाले म सो तलामा गई हातको औलाको थम दिई, आँखाको नानीको समेत स्क्यान समेत गरी म समेतलाई गजेन्द्र बुढाथोकीले तपाईहरूको मेडिकल गरेर २०७८ को दशै भित्र सम्म अमेरीका उडाई सक्छौ भनेका थिए। केही दिन पछी गजेन्द्र बुढाथोकीले म समेतलाई बुटवल आउनु तपाईको मोटामोटी काम पुरा हुन लागीसक्यो अब तपाईले बाँकी रकम रु.४५,००,०००।-(पैतालिस लाख)को जोहो गर्नु भनेकाले केही दिन पछी बुटवल पुगी गजेन्द्र बुढाथोकीले निर्मल खत्रीको फेसबुकको म्यासेन्जरमा एनएमबी बैक लि.को खाता नम्बर ०१४००३९५१४८०००११,

ऐ.बैकको खाता नम्बर ०१४०००५०६६५०००११,ऐ.बैकको खाता नम्बर ०१४००११४१६०००१३, लक्ष्मी बैकमा रहेको खाता नम्बर ०१९४०००२०२ र नेपाल ईनभेष्टमेन्ट बैक लि.०१५०५०८००००२३१ तथा नेपाल एस.बि.आई.बैक लि.मा रहेको खाता न.१९५१५२४१४०१०४९ समेतको बिवरण म्यासेन्जरमा पठाई तिमिलाई सहज हुने खातामा रकम जम्मा गर्नु भनेकोले मैले निर्मल खत्रीको नामबाट राजिब रेग्मीको एनएमबी बैक लि.मा रहेको खाता नम्बर ०१४०००५०६६५०००११ मा रु.१२,०००००।-(बाह्र लाख), पछी रु.८,००,०००।-(आठ लाख) समेत गरी २० लाख बैकमा जम्मा गरेको थिएँ, उक्त भौचरको प्रतिलिपी पाना २ र अन्य खाता नम्बर टिपाएको कागजतहरुको प्रतिलिपी समेत यसै साथ पेस गरेको छु । २/३ दिनपछी गजेन्द्र बुढाथोकीले मलाई मेडिकलको लागी बिराटनगर जानु भनी आफ्नो जेठान बताउने सन्तोष शर्माको मोबाईल नम्बर ९८५७८२३५६५ मा सम्पर्क गर्नु भनेकोले उक्त नम्बरमा फोन गरी बिराटनगरमा गई सन्देश शर्मालाई भेटी निजकै सल्लाहमा बिराटमेडिकलमा लगी मेरो मेडीकल चेक गरी तिमीहरुको ट्रावल डकुमेन्ट र आई.डी.कार्ड बनी आउँछ गजेन्द्र बुढाथोकीलाई सम्पर्क गर्नु भनी पठाए। गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी केही रकम त बुझाई सके अब कहिले काम हुन्छ भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिनेजानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थ पदमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँ । मलाई प्रतिवादीहरुले अमेरीका जाने भनी भराएको फर्ममा मेरो नाम रमेश कटुवाल भनी भराएकोमा हाल बुझ्दा भुटानी शरणार्थीबनाई मलाई अमेरीका पठाई दिने भनी म बाट नगद लिएको जम्मा रु.३५,००,०००।- (पैंतिस लाख) निज प्रतिवादीहरुबाट असुल उपर गराईपाउ गजेन्द्र बुढाथोकीले जाहेरी दिदा मेरो नाम निर्मल के.सी.भनी रु.२०,००,०००।–(बिस लाख) मात्र टिपाएको रहेको छ। म बाट ठगी भएको रकम जममा ३५ लाख हो उक्त रकम निजहरूलाई कानून बमोजिम कारवाही गरी पाउँ भन्ने ब्यहोराको निर्मल खत्रीको कागज।

२६) **दोर्ण बहादुर अधिकारीको कागजः**

गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्ने भएकोले निजलाई मैले चिनेको थिए। त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा भाई तिमी बेरोजगार रहेछौ, तिमी अमेरीका जान्छौ भनी निजले मलाई बताउदा के कसरी जाने भनी निज सँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही ओपेन्द्र अधिकारी भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.४५,०००००।-(पैतालिस लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईएकोमा निजको बिश्वासमा परी

साथी भाई तथा आफन्तहरू समेत सँग सर-सापटी मागी ल्याएको म लगायत अन्य ७ जना (भरत के.सी.,माधव के.सी, देवेन्द्र के.सी. खिमराज पौडेल, कोमल बिष्ट र बीरेन्द्र ओली) बाट प्रतिव्यक्ति रु.५,००,०००।- (पाँच लाख) को दरले रु.३५,०००००।-(पैतिस लाख) दुई पटकमा राजेश अर्यालको नाममा खाता रहेको नबिल बैक लिमिटेडको खाता नं.३७१००१७५०७८४३ मा ई.स.२०२१।०३।२५ तारेखमा रकम रु.२०,००,०००।- (बीस लाख) र राजेश अर्यालकै नाममा खाता रहेको ज्योती बिकाश बैक लिमिटेडको खाता नं.०९९११३००२७९४५५००००००१ मा मिति २०७७।१२।१२ गतेमा रकम रु.१५,००,०००।-(पन्ध्र लाख) गरी जम्मा रकम रु. ३५,००,०००।-(पैतिस लाख) बैक खाता मार्फत जम्मा गरी मेरो नाता पर्ने ज्वाई गणेश भण्डारीले जम्मा गरी दिएको र मिति २०७७।१२।१२ गतेमा गजेन्द्र बुढाथोकीको घरमै म स्वयमले नगदै रु.५,००,०००।-(पाँच लाख) समेत गरी रु.४०,००,०००।- (चालिस लाख) दिएको थिए। उक्त रकम मैले बिभीन्न व्यक्ति तथा संघ संस्थाहरुबाट ऋण लिएर प्रतिवादीहरुलाई दिएको हुँ। उक्त ऋणको व्याज समेत तिर्न मलाई निकै गाह्रो भईरहेको छ भन्दा तपाईको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनी गजेन्द्र बुढाथोकीले भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२८ गते चितवन स्थित सौराहामा रहेको भिजन सपारी रिसोर्टमा गई सन्देश शर्मा लाई भेटी पुन: रु.१५,००,०००।- (पन्ध्र लाख) दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी निजले हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए। उक्त दिन सो भिजन सफारी रिसोर्टमा सरकारी सेतो प्लेटका गाडीहरु पनि देखेको थिएँ। सरकारी कर्मचारी जस्ता पोशाक लगाएका व्यक्तिहरु पनि थिए। उनीहरुले हामी गृह मन्त्रालयका सरकारी कर्मचारीहरु हौ भनेका थिए। त्यस मध्ये सन्देश शर्मालाई चिन्दछु, उनले पनि सरकारी कर्मचारीको पोशाक लगाएका थिए र सो समयमा कोभिड १९ को महामारी भएका कारण अन्य व्यक्तिहरुले मास्क लगाएकोले चिन्न सकिन, सोही क्रममा मिति २०७८।०७।०७ गते पनि जिल्ला मोरङ बिराटनगर स्थित बिराट मेडिकलमा गई मेडिकल जाँच समेत गराउने उनीहरु नै हुन, त्यस मध्ये सन्देश शर्माले उक्त मेडिकल जाँचको कामको अगुवाई गरेका थिए। अरु नयाँ अनुहारहरु पनि थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउँ भनी दोर्ण बहादुर अधिकारीको कागज।

२७) **सिता बिष्टको कागज:**

गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्ने भएकोले निजलाई मैले चिनेको थिए। त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा भाई तिमि बेरोजगार रहेछौ तिमी अमेरीका जान्छौ भनी निजले मेरो श्रीमान कोमल बहादुर बिष्टलाई बताउदा के कसरी जाने भनी निज सँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही नविन पौडेल भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.४५,०००००।- (पैतालिस लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईएको मा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर सापटी मागी ल्याएको मेरो श्रीमान लगायत अन्य ७ जना (भरत के.सी.,माधव के.सी, देव बहादुर के.सी. खिमराज पौडेल, दोर्ण अधिकारी र बीरेन्द्र ओली) बाट प्रतिव्यक्ति ५,००,०००।- (पाँच लाख) को दरले रु.३५,०००००।- (पैतिस लाख) दुई पटकमा राजेश अर्यालको नाममा खाता रहेको नबिल बैक लिमिटेडको खाता नं. ३७१००१७५०७८४३ मा ई.स.२०२१।०३।२५ तारेखमा रकम रु.२०,००,०००।- (बीस लाख) र राजेश अर्यालकै नाममा खाता रहेको ज्योती बिकाश बैक लिमिटेडको खाता नं.०९९११३००२७९४५५००००००१ मा मिति २०७७।१२।१२ गतेमा रकम रु.१५,००,०००।- (पन्ध्र लाख) गरी जम्मा रकम रु. ३५,००,०००।- (पैतिस लाख) बैक खाता मार्फत जम्मा गरी मेरो नाता पर्ने ज्वाई गणेश भण्डारीले जम्मा गरी दिएको र मिति २०७७।१२।१२ गतेमा गजेन्द्र बुढाथोकीको घरमै म स्वयमले नगदै रु.५,००,०००।- (पाँच लाख) समेत गरी रु.४०,००,०००।- (चालिस लाख) दिएको थिए। तपाईको मान्छेको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मेरो श्रीमानलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२८ गते चितवन स्थित सौराहामा रहेको भिजन सपारी रिसोर्टमा गई सन्देश शर्मा लाई भेटी पुन रु.१०,००,०००।- (दश लाख) दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन मेरो श्रीमान चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी निजले हातको औंलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए। मिति २०७८।०२।२८ गतेमा सो भिजन सफारी रिसोर्टमा मेरो श्रीमान जादा खेरी सरकारी सेतो प्लेटका गाडी पनि थियो रे र उनीहरुले हामी गृह मन्त्रालयका सरकारी कर्मचारीहरु हौ भनेका थिए रे। सोही क्रममा मिति २०७८।०७।०७ गते जिल्ला मोरङ बिराटनगर स्थित बिराट मेडिकलमा गई मेडिकल जाँच समेत गराउने उनीहरु नै हुन, अरु नयाँ अनुहार हरु पनि थिए भन्ने कुरा मेरो श्रीमानले बताउनु भएको थियो। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मेरो श्रमानले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने

योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउ भन्ने समेत व्यहोराको सिता बिष्टको कागज।

२८) **माधब के.सी. को कागज:**

गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्ने भएकोले निजलाई मैले चिनेको थिए। त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा भाई तिमि बेरोजगार रहेछौ तिमी अमेरीका जान्छौ भनी निजले मलाई बताउदा के कसरी जाने भनी निज सँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही दामोदर सुवेदी भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.४५,०००००।- (पैतालिस लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईएको मा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर सापटी मागी ल्याएको म लगायत अन्य ७ जना (भरत के.सी., देव बहादुर के.सी.,दोर्ण बहादुर अधिकारी, खिमराज पौडेल, कोमल बिष्ट र बीरेन्द्र ओली) बाट प्रतिव्यक्ति रु.५,००,०००।- (पाँच लाख) को दरले रु.३५,०००००।- (पैतिस लाख) दुई पटकमा राजेश अर्यालको नाममा खाता रहेको नबिल बैक लिमिटेडको खाता नं. ३७१००१७५०७८४३ मा ई.स.२०२१।०३।२५ तारेखमा रकम रु.२०,००,०००।- (बीस लाख) र राजेश अर्याल कै नाममा खाता रहेको ज्योती बिकाश बैक लिमिटेडको खाता नं.०९९११३००२७९४५५००००००१ मा मिति २०७७।१२।१२ गतेमा रकम रु.१५,००,०००।- (पन्ध्र लाख) गरी जम्मा रकम रु. ३५,००,०००।- (पैतिस लाख) बैक खाता मार्फत मेरो भिनाजु नाता पर्ने गणेश भण्डारीले जम्मा गरी दिएको र मिति २०७७।१२।१२ गतेमा गजेन्द्र बुढाथोकीको घरमै म स्वयमले नगदै रु.५,००,०००।- (पाँच लाख) समेत दिएको थिए। तपाईको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२८ गते चितवन स्थित सौराहामा रहेको भिजन सफारी रिसोर्टमा गई सन्देश शर्मा लाई भेटी पुन रु.१०,००,०००।- (दश लाख) दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी निजले हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए। उक्त दिन सो भिजन सफारी रिसोर्टमा सरकारी सेतो प्लेटका गाडी पनि देखेको थिएँ। र सरकारी कर्मचारी जस्ता पोशाक लगायका व्यक्तिहरु पनि थिए। उनीहरुले हामी गृह मन्त्रालयका सरकारी कर्मचारीहरु हौ भनेका थिए। त्यस मध्ये सन्देश शर्मालाई चिन्दछु, उनले पनि सरकारी कर्मचारीको पोशाक लगाएका थिए, र सो समयमा कोभिड १९ को महामारी भएका कारण अन्य व्यक्तिहरुले मास्क लगाएकोले चिन्न सकिन, सोही क्रममा मिति २०७८।०७।०७ गते पनि जिल्ला मोरङ बिराटनगर स्थित बिराट मेडिकलमा गई मेडिकल जाँच समेत गराउने उनीहरु नै हुन र अरु नयाँ अनुहारहरु पनि थिए। निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा

निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउ भन्ने व्यहोराको माधब के.सी. को कागज।

२९) **<u>देब बहादुर के.सी. को कागज:</u>**

गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्ने भएकोले निजलाई मैले चिनेको थिए। त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा भाई तिमी बेरोजगार रहेछौ तिमी अमेरीका जान्छौ भनी निजले मलाई बताउँदा के-कसरी जाने भनी निजसँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नामचाही रुपेश बस्नेत भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.४५,०००००।- (पैतालिस लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईएकोमा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर-सापटी मागी ल्याएको म लगायत अन्य ७ जना (भरत के.सी.,माधव के.सी,दोर्ण बहादुर अधिकारी, खिमराज पौडेल, कोमल बिष्ट र बीरेन्द्र ओली) बाट प्रतिव्यक्ति रु.५,००,०००।- (पाँच लाख) को दरले रु.३५,०००००।-(पैतिस लाख) दुई पटकमा राजेश अर्यालको नाममा खाता रहेको नबिल बैक लिमिटेडको खाता नं.३७१००१७५०७८४३ मा ई.स.२०२१।०३।२५ तारेखमा रकम रु.२०,००,०००।- (बीस लाख) र राजेश अर्यालकै नाममा खाता रहेको ज्योती बिकाश बैक लिमिटेडको खाता नं.०९९११३००२७९४५५००००००१ मा मिति २०७७।१२।१२ गतेमा रकम रु.१५,००,०००।-(पन्ध्र लाख) गरी जम्मा रकम रु.३५,००,०००।-(पैतिस लाख) बैक खाता मार्फत मेरो ज्वाई नाता पर्ने गणेश भण्डारीले जम्मा गरी दिएको र मिति २०७७।१२।१२ गतेमा गजेन्द्र बुढाथोकीको घरमै म स्वयमले नगदै रु.५,००,०००।- (पाँच लाख) समेत दिएको थिए। तपाईको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२८ गते चितवन स्थित सौराहामा रहेको भिजन सफारी रिसोर्टमा गई सन्देश शर्मा लाई भेटी पुन:रु.१०,००,०००।-(दश लाख) दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी निजले हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए। उक्त दिन सो भिजन सफारी रिसोर्टमा सरकारी सेतो प्लेटको गाडी पनि थियो। उनीहरुले हामी गृह मन्त्रालयका सरकारी कर्मचारी हौं भनेका थिए। त्यस मध्येका एक जना

सन्देश शर्मालाई चिन्दछु । सोही क्रममा मिति २०७८।०७।०७ गते जिल्ला मोरङ बिराट मेडिकलमा गई मेडिकल जाँच समेत गरेको हो । सो दिन मेडिकल गर्ने क्रममा समेत चितवनमा बायोमेट्रिक गराउने व्यक्तिहरु मध्ये केही व्यक्तिहरु थिए । त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउँ भनी देब बहादुर के.सी. को कागज ।

३०) **देबसरा ओलीको कागज:**

गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्ने भएकोले निजलाई मैले चिनेको थिए । त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा भाई तिमि बेरोजगार रहेछौ तिमी अमेरीका जान्छौ भनी निजले मेरो श्रीमान कोमल बहादुर बिष्टलाई बताउदा के कसरी जाने भनी निज सँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही रेवन्त पौडेल भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.४५,०००००।- (पैतालिस लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईएको मा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर सापटी मागी ल्याएको मेरो श्रीमान लगायत अन्य ७ जना (भरत के.सी.,माधव के.सी, देव बहादुर के.सी. खिमराज पौडेल, दोर्ण अधिकारी र कोमल बहादुर विष्ट) बाट प्रतिव्यक्ति रु.५,००,०००।-(पाँच लाख) को दरले रु.३५,०००००।- (पैतिस लाख) दुई पटकमा राजेश अर्यालको नाममा खाता रहेको नबिल बैंक लिमिटेडको खाता नं. ३७१००१७५०७८४३ मा ई.स.२०२१।०३।२५ तारेखमा रकम रु.२०,००,०००।-(बीस लाख) र राजेश अर्यालकै नाममा खाता रहेको ज्योती बिकाश बैक लिमिटेडको खाता नं.०९९११३००२७९४५५००००००१ मा मिति २०७७।१२।१२ गतेमा रकम रु.१५,००,०००।- (पन्ध्र लाख) गरी जम्मा रकम रु.३५,००,०००।- (पैतिस लाख) बैंक खाता मार्फत मेरो नाता पर्ने ज्वाई गणेश भण्डारीले जम्मा गरी दिएको र मिति २०७७।१२।१२ गतेमा गजेन्द्र बुढाथोकीको घरमै म स्वयमले नगदै रु.५,००,०००।-(पाँच लाख) समेत गरी रु.४०,००,०००।-(चालिस लाख) दिएको थिए । तपाईको मान्छेको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए । त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मेरो श्रीमानलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२८ गते चितवन

स्थित सौराहामा रहेको भिजन सपारी रिसोर्टमा गई सन्देश शर्मा लाई भेटी पुन रु.१०,००,०००।- (दश लाख) दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन मेरो श्रीमान चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी निजले हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए। मिति २०७८।०२।२८ गतेमा सो भिजन सफारी रिसोर्टमा मेरो श्रीमान जादा खेरी सरकारी सेतो प्लेटका गाडी पनि थियो रे र उनीहरुले हामी गृह मन्त्रालयका सरकारी कर्मचारीहरु हौ भनेका थिए रे। सोही क्रममा मिति २०७८।०७।०७ गते जिल्ला मोरङ बिराटनगर स्थित बिराट मेडिकलमा गई मेडिकल जाँच समेत गराउने उनीहरु नै हुन, अरु नयाँ अनुहार हरु पनि थिए भन्ने कुरा मेरो श्रीमानले बताउनु भएको थियो। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मेरो श्रीमानले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु , मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु , तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली आज भोली भन्दै समय विताउने , काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने , पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भन्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउ भनी देबसरा ओलीको कागज।

३१) **<u>बिबेक बहादुर थापाको कागजः</u>**

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ, सागर राई समेतलाई सँग मेरो चिनजान छैन, गजेन्द्र बुढाथोकी समेतको जाहेरी दरखास्त लगायतको कागजातहरू पढीबाची सुनी ब्यहोरा अवगत भयो। मिति २०७७।०९।०१ गते का.जि.का.म.न.पा.महाराजगञ्ज स्थित खाना घरमा गजेन्द्र बुढाथोकीले एकिन नामथर वतन थाहा नभएका व्यक्तिसँग अमेरिका लैजान गृह मन्त्रालयबाटै पहल हुदै छ भनी कुरा गरेको मैले पनि सोही खाजा घरमा सुनेकोले मैले पनि निज गजेन्द्र बुढाथोकीसँग सोही बेला अमेरिका कसरी पठाउन सकिन्छ भनी साचो राखेको र फोन नं.समेत आदान प्रदान गरेकोले तिमि बेरोजगार रहेछौ तिमी अमेरिका जान्छौ भनी निजले मलाई बताउदा के कसरी जाने भनी निज सँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही कृष्ण कार्की भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.५०,०००००।- (पचास लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईए को मा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर सापटी मागी ल्याएको का.जि.का.म.न.पा.वडा नं.१० बानेश्वर स्थित बिन्दावासीनी संस्थामा आकाश रेग्मीलाई मैले मिति २०७७।०९।१५ गते रु.५,००,०००।- (पाँच लाख) नगद र एक प्रति फोटो समेत बुझाएको थिए। तपाईको काम

गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकी मार्फत सन्तोष शर्मालाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२६ गते चितवन स्थित सौराहामा रहेको भिजन सपारी रिसोर्टमा गई सन्देश शर्मा र आकाश रेग्मीलाई भेटी रु.१०,००,०००।-(दश लाख) दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत आकाश रेग्मी र सन्देश शर्मासँग भेट भएका निजले हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी रकम रु.१०,००,०००।-(दश लाख) पैसा बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईलाई दशै भीत्र उडाउछु। स्वास्थ्य चेकजाँच गर्नु पर्ने भनेकोले त्यो भन्दा अगाडी अब वाकी रहेको रु.३५,००,०००।-(पैतिस लाख) सन्तोष शर्माको नाममा जम्मा गर्नु दशै भित्र अमेरिका उडान हुन्छ भनी गजेन्द्र बुढाथोकीले बिश्वास दिलाएकोले मैले निज सन्तोष शर्माको नाममा खाता रहेको एनआईशी एशिया बैक लिमिटेडको तुल्सीपुर शाखाको खाता नं.६५८८९६४७०३९५२४०१ मा ई.स.२०२१।१०।०८ तारेखमा रु.३५,००,०००।-(पैतिस लाख) मेरो आमा दिलमाया थापाले जम्मा गराई सकेपछी गजेन्द्र बुढाथोकीले मेडिकल जाँचको लागी मोरङ जिल्लाको बिराट मेडिकलमा पठाएको र तत् पश्चात मेडिकल रिपोर्ट समेत राम्रो आएको छ भनी जानकारी गराएकोले तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने , पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउ भनी विवेक बहादुर थापाको कागज।

३२) **गिताराम पंगालीको कागज:**

राम कुमार रेग्मी मार्फत मेरो दाई भविन्द्र प्रसाद पंगालीलाई चिनाईदिएका प्रतिवादी गजेन्द्र बुढाथोकी मार्फत शन्देश शर्मासँग भेट घाट भई निजसँग कुराकानी हुने क्रममा प्रतिवादी सन्देश शर्माले मेरो दाई लगायत महेन्द्र कुसारी, मनिष डि.सी., ममकान्त पाण्डे लगायतकाव्यक्तिहरुलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका पठाई दिने गरेको छु भनी कुराकानी गरी बिश्वास दिलाई मेरो दाई भविन्द्र प्रसाद पंगाली समेतलाई भुटानी शरणार्थीमा अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाई रकम माग गरेकोमा मिति २०७७ साल देखी २०७८ साल सम्म पटक-पटक गरी रु.१७,०००००।–(सत्र लाख) मध्ये रकम रु.७,००,०००/-(सात लाख) निज गजेन्द्र बुढाथोकीको घरमा भेटी नगद दिएको र निजलाई रकम बुझेको भरपाई माग्दा तपाईको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मेरो दाई भविन्द्र प्रसाद पंगालीलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२६ गते चितवन स्थित सौराहामा रहेको भिजन सफारी नामक रिसोटमा गई सन्देश शर्मा लाई भेटी पुन दश लाख

दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन मेरो दाई चितवनमा गई गरेजन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी १० (दश/लाख) दिई निजले हातको औंलाबाट बायोमेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए । त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मेरो दाईले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोढ्दा निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण मेरो दाई समेतले निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु मेरो दाइलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले मेरो दाजुबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र मेरो दाईलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगाएतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउ भनीगिताराम पंगालीले गरेको घटना विवरण कागज ।

३३) **खिमराज पौडेलको कागज:**

आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा भाई तिमी बेरोजगार रहेछौ, तिमी अमेरीका जान्छौ भनी निजले मलाई बताउँदा के-कसरी जाने भनी निजसँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही कपिल खनाल भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.४५,००,०००।-(पैतालिस लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईएको मा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेतसँग सर-सापटी मागी ल्याएको म लगायत अन्य ७ जना (भरत के.सी.,माधव के.सी, देवेन्द्र के.सी., दोर्ण बहादुर अधिकारी, कोमल बिष्ट र बीरेन्द्र ओली) बाट प्रतिव्यक्ति ५,००,०००।–(पाँच लाख) को दरले रु.३५,०००००।-(पैतिस लाख) दुई पटकमा राजेश अर्यालको नाममा खाता रहेको नबिल बैक लिमिटेडको खाता नं. ३७१००१ ७५०७८४३ मा ई.स.२०२१।०३।२५ तारेखमा रकम रु.२०,००,०००।-(बीस लाख) र राजेश अर्यालकै नाममा खाता रहेको ज्योती बिकाश बैक लिमिटेडको खाता नं.०९९११३००२७९४५५००००००१ मा मिति २०७७।१२।१२ गतेमा रकम रु.१५,००,०००।- (पन्ध्र लाख) गरी जम्मा रकम रु.३५,००,०००।- (पैतिस लाख) बैक खाता मार्फत जम्मा गरी मेरो ज्वाई गणेश भण्डारीले जम्मा गरी दिएको र मिति २०७७।१२।१२ गतेमा गजेन्द्र बुढाथोकीको घरमै म स्वयमले नगदै रु.५,००,०००।- (पाँच लाख) समेत गरी रु.४०,००,०००।- (चालिस लाख) दिएको थिए । तपाईको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए । त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२८ गते चितवन स्थित सौराहामा रहेको भिजन सपारी रिसोर्टमा गई सन्देश शर्मा लाई भेटी पुन रु.१०,००,०००।- (दश लाख) दिई तपाईको गर्नु पर्ने

बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी निजले हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए । उक्त दिन सो भिजन सफारी रिसोर्टमा सरकारी सेतो प्लेटका गाडीहरु पनि देखेको थिएँ । सरकारी कर्मचारी जस्ता पोशाक लगाएका व्यक्तिहरु पनि थिए । उनीहरुले हामी गृह मन्त्रालयका सरकारी कर्मचारीहरु हौ भनेका थिए । त्यस मध्ये सन्देश शर्मालाई चिन्दछु, उनले पनि सरकारी कर्मचारीको पोशाक लगाएका थिए, र सो समयमा कोभिड १९ को महामारी भएका कारण अन्य व्यक्तिहरुले मास्क लगाएकोले चिन्न सकिन, सोही क्रममा मिति २०७८।०७।०७ गते पनि जिल्ला मोरङ बिराटनगर स्थित बिराट मेडिकलमा गई मेडिकल जाँच समेत गराउने उनीहरु नै हुन, त्यस मध्ये सन्देश शर्माले उक्त मेडिकल जाँचको कामको अगुवाई गरेका थिए । अरु नयाँ अनुहारहरु पनि थिए । त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउ भनी खिम राज पौडेलको कागज ।

३४) **चन्द्र प्रसाद पाण्डेको कागज**:

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राई समेतसँग मेरो चिनजान छैन । प्रतिवादी सन्देश शर्मा, जाहेरवाला गजेन्द्र बुढाथोकीलाई चिन्छु । जाहेरवाला गजेन्द्र बुढाथोकी लामो समय अमेरिका बसेको र पहिले देखिनै माथिल्लो तहका सरकारी कर्मचारी तथा राजनितज्ञहरुसँग सँगत रहेका व्यक्ति हुन । निज गजेन्द्र बुढाथोकीले मेरो छोरा मोहन पाण्डेले मथिल्लो तह र तप्काको व्यक्तिहरुसँग समन्वय गरी अमेरिका पठाई दिने भनी बिभिन्न कुरा गरी बिश्वासमा पारी मिति २०७७/१२/१२ गतेका दिन दाङ तुलसीपुर उप-महानगरपालिका वडा नम्बर ५ मा रहेको निजकै घरमा म र मेरो छोरा मोहन पाण्डेलाई बोलाई छोरालाई अमेरिका पठाउने प्रयोजनको लागी हामीबाट रु.१०,००,०००/-(दश लाख) नगदै लिई पुन:बयोमेट्रिक गर्न भनी मिति २०७८/०२/२६ गते चितवन सौराहमा बोलाई सफारी भिजन होटलमा गजेन्द्र बुढाथोकी र सन्देस शर्माले हामीलाई भेटी निजहरुले हामी बाट रु.१०,००,०००/-(दश लाख) लिए । निजहरुले रु.२०,००,०००/-(बीस लाख) लिए पछी अमेरिका र नेपाल सरकार बीच नेपालको शरणमा बसी आएका भुटानी शरणार्थीहरुलाई अमेरिकाले लैजाने सम्झौता भई सो सम्झौता अनुसार नेपाल सरकारले भुटानी शरणार्थीको नामावली संकलन गर्नुको साथै अमेरिका पठाउने प्रकृया गरी रहेको छ भनी मेरो छोरालाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु, ढुक्क हुनुस, काम पक्का हुने भयो भनी शरणार्थी कार्ड बनाउने प्रयोजनको लागी भन्दै बिराटनगर लगी तहा स्थित बिराट मेडिकलमा खोप लगाउने, मेडिकल गराउने समेतका

कार्य गरी बिभिन्न कागजातहरुमा सहीछाप गर्न लगाई मेरो छोरा मोहन पाण्डेको शरणार्थी नाम हरी शर्माबाट शरणार्थी कार्ड बन्छ र सोही नामबाट प्रकृया शुरु भई शरणार्थीको रुपमा अमेरिका जान्छन भनी पूर्ण बिश्वासमा पारे । काम भई राखेको छ, जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालको माथिल्लो निकायका व्यक्तिहरुलाई चिनेको छु, ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म निजको कुरामा विश्वास गरी बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र काम हुदै गरेको भन्ने बिभिन्न कागजहरु देखाउने गरी विश्वास दिलाउदै आएकोमा यसै बिषयमा जिल्ला प्रहरी परिसर काठमाण्डौमा मुद्दा दर्ता भई केही व्यक्तिहरु पक्राउ परेको जानकारी पाई मेरो छोरा समेतलाई ठगी गरेको थाहा हुन आएकोले अनुसन्धान अधिकृत समक्ष उपस्थित भई आफ्नो भए गरेको सहि सत्य साचो व्यहोरा लेखाई सहीछाप गरी दिएको छु । यस कार्यमा संलग्न गजेन्द्र बुढाथोकी, सन्देश शर्मा समेतका सम्पूर्ण व्यक्तिहरुलाई कानून बमोजिम सजांय गरी ठगी गरेको रकम दिलाई भराई पाउँ भन्ने ब्यहोराको चन्द्र प्रसाद पाण्डेको कागज ।

३५) **<u>दत्त बहादुर के.सी. को कागज</u>**:-

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ र सागर राई समेतसँग मेरो चिनजान छैन । प्रतिवादी सन्देश शर्मा, जाहेरवाला गजेन्द्र बुढाथोकी र मेरो घर तुलसीपुर उप-महानगरपालिका अन्तर्गत पर्ने हुँदा हामी बीच चिनजान छ । जाहेरवाला गजेन्द्र बुढाथोकी लामो समय अमेरिका बसेको र पहिले देखिनै माथिल्लो तहका सरकारी कर्मचारी तथा राजनितज्ञहरुसँग सँगत रहेका व्यक्ति हुन । निज गजेन्द्र बुढाथोकीले मेरो छोरा भरत के.सी.लाई मथिल्लो तह र तप्काको व्यक्तिहरुसँग समन्वय गरी अमेरिका पठाई दिने भनी बिभिन्न कुरा गरी बिश्वासमा पारी मिति २०७७/१२/१२ गतेका दिन दाङ तुलसीपुर उप-महानगरपालिका वडा नम्बर ५ मा रहेको निजकै घरमा म र मेरो छोरा भरत के.सी.लाई बोलाई छोरालाई अमेरिका पठाउने प्रयोजनको लागी हामीबाट रु.१०,००,०००/-(दश लाख) नगदै लिए । पछी बयोमेट्रिक गर्न भनी मिति २०७८/०२/२६ गते चितवन सौराहामा बोलाई सफारी भिजन होटलमा गजेन्द्र बुढाथोकी र सन्देस शर्माले हामीलाई भेटी निजहरुले हामीबाट रु.१०,००,०००/-(दश लाख) लिए । निजहरुले रु.२०,००,०००/-(बीस लाख) लिए पछी अमेरिका र नेपाल सरकार बीच नेपालको शरणमा बसी आएका भुटानी शरणार्थीहरुलाई अमेरिकाले लैजाने सम्झौता भई सो सम्झौता अनुसार नेपाल सरकारले भुटानी शरणार्थीको नामावली संकलन गर्नुको साथै अमेरिका पठाउने प्रकृया गरी रहेको छ भनी मेरो छोरालाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिन्छु, ढुक्क हुनुस, काम पक्का हुने भयो भनी शरणार्थी कार्ड बनाउने प्रयोजनको लागी भन्दै छोरा भरत के.सी.लाई मोरङ बिराटनगर लगी बिराट मेडिकलमा खोप लगाउने, मेडिकल गराउने समेतका कार्य गरी बिभिन्न कागजातहरुमा सहीछाप गर्न लगाई मेरो छोरा भरत के.सी.को शरणार्थी नाम यमन थापाबाट शरणार्थी कार्ड बन्छ र सोही नामबाट प्रकृया शुरु भई शरणार्थीको रुपमा अमेरिका जान्छन भनी पूर्ण बिश्वासमा पारीकाम भई राखेको छ, जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालको माथिल्लो निकायका व्यक्तिहरुलाई चिनेको छु, ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म समेतको निजको कुरामा विश्वास गरी बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र काम हुँदै गरेको भनी बिभिन्न कागजहरु देखाई विश्वास दिलाउँदै आएकोमा यसै बिषयमा जिल्ला प्रहरी परिसर काठमाण्डौमा मुद्दा दर्ता भई केही व्यक्तिहरु पक्राउ परेको जानकारी पाई मेरो छोरा समेतलाई ठगी गरेको थाहा हुन आएकोले अनुसन्धान अधिकृत समक्ष उपस्थित भई आफ्नो भए गरेको सहिसत्य साँचो व्यहोरा लेखाई सही छाप गरी

दिएको छु । यस कार्यमा संलग्न गजेन्द्र बुढाथोकी, सन्देश शर्मा समेतका सम्पूर्ण व्यक्तिहरुलाई कानून बमोजिम सजाँय गरी ठगी गरेको रकम दिलाई भराई पाउँ भन्ने व्यहोराको दत्त बहादुर के.सी. को कागज ।

३६) **पबित्रा के.सी. को कागज**:

प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ, सागर राई समेत सँग मेरो चिनजान छैन,गजेन्द्र बुढाथोकी समेतको जाहेरी दरखास्त लगाएतको कागजातहरू पढीबाची सुनी ब्यहोरा अवगत भयो । तुल्सीराम के.सी.मेरो श्रीमान हुन मेरो श्रीमान बेरोजगार भई घरमा बसेको अवस्थामा गजेन्द्र बुढाथोकीले भेटी भाई तिमीलाई म सरकारी कोटामा अमेरिका पठाई दिन्छु अमेरिका जान लाग्ने खर्च ४० लाख देखी ४५ लाख सम्म खर्च लाग्छ भनी बिश्वास दिलाएको हुँदा मेरो श्रीमानले गजेन्द्र बुढाथोकीको बिश्वास गरी अमेरिका जाने सोच बनाई आफ्नो आफन्त तथा साथीहरूबाट रकम संकलन गरी गजेन्द्र बुढाथोकीलाई मिति २०७८।१।०६ गते काठमाण्डौमा भेटी निज श्रीमान तुलसीराम के.सी.को नामबाट राजन पन्थी भनी फारम भराई नगद रु.१०,०००००।- (दश लाख) लिई तपाईको नाम राजन पन्थी हो तपाईले यो कुरा कसैलाई नभन्नु तपाईलाई जसरी हुन्छ अमेरीका पठाई दिन्छु भनी बायोमेट्रिकको लागी तयार हुनु भनी पठाएको थिए । केही दिन पछी गजेन्द्र बुढाथोकीले मेरो श्रीमानलाई दाङमा भेटी तपाईको प्रकृया शुरु भईसकेको छ, तपाई चितवन जानु चितवनमा सन्देश शर्माले बायोमेट्रिकको काम पुरा गर्छन, निजलाई नगद रु.८,००,०००।-(आठ लाख) दिनु भनेकोले मिति २०७८।२।२६ गते चितवनमा रहेको सौराहा स्थित भिजन सफारी रिसोर्टमा भेट्दा निजहरू सरकारी ड्रेस लगाई सरकारी सेतो नम्बर प्लेट भएको गाडीमा आएका थिए, निज श्रीमानलाई राजन पन्थीको नामबाट बायो मेट्रीकको काम पुरा गरे पछि रु.८,०००००।-(आठ लाख) रकम मागेकोले मेरो श्रीमानले नगदै दिएकोमा निजले तपाईको काम हुन्छ भनी सेतो नम्बर प्लेट भएको सरकारी गाडीमा चढी गएका थिए । पछी पुन:गजेन्द्र बुढाथोकीले तपाईको मेडिकल गर्नु पर्छ भनी बिराटनगर पठाई मेडिकल समेत गराई सन्देश शर्माले मेरो श्रीमानलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका उच्च पदका मानिसहरुलाई चिनेको छु,सो काम निजहरू मार्फत गर्ने हो तपाई सरकारी कोटाबाट सम्पुर्ण डकुमेन्ट बनाई अमेरीका जाने हो । कुनै दुबिधा हुदैन, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको हुँदा निज गजेन्द्र बुढाथोकीलाई मेरो श्रीमानले भेटी प्रोसेस के हुँदै छ भनीबुझ्दा निजले आश्वासन दिदै आई मेरो श्रीमानलाई बिभिन्न कागजहरु समेत तयार गरी दिई पठाएको थिए । सो कागज सम्बन्धमा निज श्रीमानले आफुले चिनेजानेका व्यक्तिहरु सँग कुराकानी गरी सोधपुछ गर्दा उक्त कागजातहरू नक्कली रहेको भन्ने कुरा समेत थाहा पाएको थिए । मेरो श्रीमानलाई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र श्रीमानलाई देखाई झुक्याई रकम लिई ठगी गरेको रहेछ भन्ने कुरा श्रीमानले मलाई भने पछी सो घटना सम्बन्धमा थाहा पाएको थिए । यसरी मेरो श्रीमानलाई गजेन्द्र बुढाथोकी मार्फत अन्य ब्यक्तीहरूको संलग्नतामा प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली नगदै रुपैया लिई ठगी गरेको कुरा श्रीमानले बताए पछी र हाल पत्र-पत्रिकामा प्रकाशित समाचारहरूबाट समेत घटना सम्बन्धमा थाहा पाएको हुँ, मेरो श्रीमान तुलसीराम के.सी.को बास्तबिक नामबाट फारम नभराई राजन पन्थीको नामबाट फारम भराई झुक्काई अमेरीका पठाई दिने भनी बिभिन्न मितिमा पटक-पटक गरी नगद लिएको जम्मा रु.१८,०००००(अठार लाख) निज प्रतिवादीहरुबाट असुल उपर गराई । हाल श्रीमान बैदेशीक रोजगारको लागी भारत जानु भएकोले सो घटना सम्बन्धमा आफ्नो ब्यहोरा लेखाउन म

आएको हुँ । उक्त घटनामा संलग्न रहेका उच्च पदस्थका कर्मचारीहरी समेतलाई अनुसन्धान गरी कानून बमोजिम कारवाही गरी पाउ भन्ने ब्यहोराको पबित्रा के.सी.को कागज ।

३७) **टोपेन्द्र डांगीले गरेको घटना विवरण कागज**:

आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुदा ज्वाई तपाई बेरोजगार हुनुहुदो रहेछ तपाई अमेरीका जान चाहनु हुन्छकी,राम्रो अवसर आएको छ भनी निजले मलाई बताउदा के-कसरी जाने भनी निजसँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिका जान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही मनोज खनाल भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.६०,०००००।-(साठी लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईएकोमा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर सापटी मागी ल्याएको रु.१०,०००००-(दश लाख) निज गजेन्द्र बुढाथोकी ऐडभान्स स्वरुप मिति २०७७ साल चैत्र १२ गते निजकै घरमा भेटी नगद दिएको र निजलाई रकम बुझेको भरपाई माग्दा तपाईको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए । त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मलाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२६ गते चितवन स्थित सौराहामा रहेको भिजन सफारी नामक रिसोर्टमा गई सन्देश शर्मा लाई भेटी पुन दश लाख दिई तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गरेजन्द्र बुढाथोकी मार्फत भेट भएका सन्देश शर्मालाई भेटी १० (दश लाख) दिई निजले हातको औलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए । त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब कहिले हुन्छ काम भनी सोद्धा निजले तपाईको काम भई राखेको छ, तपाईहलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु , तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउँ भनी टोपेन्द्र डाँगीको कागज ।

३८) **सन्तोष गौतमको कागज :**

गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्ने भएकोले निजसँग मेरो पुर्व चिनजान थियो । त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकीको घरमा मेरो भेट भई निजसँग कुराकानी हुँदा तिम्रो छोरा सन्देश गौतम र भाई सन्जिव गौतम बेरोजगार रहेछन । अमेरीका पठाउन चाहन्छौ भने म पठाई दिन्छु भनी निजले मलाई बताउँदा के-कसरी छोरा र भाईलाई अमेरीका पठाउन सकिन्छ भनी सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका

कर्मचारीहरूको राम्रो सम्बन्ध रहेको छ निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आवश्यक पर्ने कागजातहरू समेत माथिल्लो निकायबाट तयार गरी लिगल तरिकाबाट अमेरीका जान तयार गर्नु पर्ने कागजातहरूमा छोराको नाम सगुन शर्मा, भाईको नाम ऋषभ कटुवाल भनी फरक-फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च पचास/पचास लाख सम्म लाग्न सक्छ भनी बिश्वास दिलाएकोमा निजको बिश्वासमा परी मिति २०७७।०९।१५ गते नगद रु.१०,००,०००।–(दश लाख) रकम फर्म भर्नु पर्छ भनी गजेन्द्र बुढाथोकीले एडभान्स स्वरुप नगदै काठमाण्डौ जिल्लाको नयाँबानेश्वर स्थित आकाश रेग्मी भन्ने राम कुमार रेग्मीको अफिसमा भेटेर म बाट लिएका थिए। मिति २०७७।११।१६ गते रु.१०,००,०००।–(दश लाख) रकम छोरा र भाईलाई अमेरीका पठाउने प्रोशेसको लागी भनी गजेन्द्र बुढाथोकिलाई काठमाण्डौको नयाँबानेश्वर स्थित भेटेर नगदै दिएको थिए। गजेन्द्र बुढाथोकीलाई पटक-पटक गरी दिएको रु.२०,००,०००।– (बिस लाख)रकम बुझेको भरपाई माग्दा तपाईको छोरा र भाइलाई अमेरीका पठाउने काम गोप्य रुपमा गर्ने हो यदी तपाईको छोरा, भाईलाई अमेरीका पठाउन सकेन भने तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीले पुन मलाई भेटी तपाईको छोरा र भाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ। तपाईको छोरा र भाईलाई मिति २०७८।०२।२८ गते चितवन स्थित सौराहामा रहेको भिजन सफारी रिसोर्टमा पठाईदिनु भनेको हुँदा मैले मेरो छोरा सन्देश गौतम र भाई संजिव गौतमलाई अमेरीका जान लागेका अन्य साथिहरु सहित चितवनको सौराहामा पठाएको थिए। छोरा सन्देश गौतम र भाई संजिव गौतमले चितवनको सौराहामा रहेको रिसोटमा गई सन्देश शर्मालाई भेटी नगद दश/दश लाख गरी रु.२०,००,०००।-(बिस लाख) नगदै दिएका थिए। छोरा र भाईबाट रु.२०,००,०००।–(बिस लाख) रकम लिई छोरा र भाईकोबायो मेट्रिकको काम गरी तपाईको काम हुँदैछ ढुक्क भएर बस्नु भनी पठाएका रहेछन। उक्त स्थानमा सरकारी ड्रेस लगाएको गृह मन्त्रालयका कर्मचारी हुँ भनी जानकारी गराई सेतो नम्बर प्लेटको सरकारी गाडी समेत लिई आएका रहेछन।हामीहरूको बायोमेट्रिकको काम पुरा भएको छ भनी छोरा सन्देश गौतम र भाई सन्जिब गौतम समेतले मलाई जानकारी गराएका थिए। गजेन्द्र बुढाथोकीसँग कुराकानी हुँदै जाँदा मिति २०७८।०७।०८ गते बिराट मेडिकल कलेज बिराटनगरमा छोरा र भाईको मेडिकल गर्न बोलाई छोरा, भाईको मेडिकलको सम्पुर्ण काम सन्देश शर्मा मार्फत गराई तिमीहरूको काम धमाधम हुदैछ अब १ महिनामा उडछौ यो कुरा बाहिर हल्ला नगर भनी विश्वास दिलाई पठाएका रहेछन। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सके अब छोरा र भाईलाई अमेरीका पठाउने काम कहिले हुन्छ भनी सोध्दा निजले तपाईको छोरा र भाईको काम भई राखेको छ। तपाईको छोरा र भाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाई ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म निजको कुरामा विश्वास गरी छोरा र भाईलाई अमेरिका पठाईने भयो भनी ढुक्क भएर बसेकोमा निजले काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु पटक-पटक पठाई विश्वास दिलाउँदै आएकोमा सो सम्बन्धमा आफुले चिनेजानेका व्यक्तिहरु सँग कुराकानी गर्दा निजले हामीबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाई, पठाई झुक्याई रकम लिई ठगी गरेको र हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थ पदमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँ। यसरी मेरो छोरा सन्देश गौतम र भाई संजिव गौतमलाई अमेरीका

पठाई दिन्छु भनी झुक्काई मेरो भाई र छोराबाट नगद लिएको जम्मा रु.४०,००,०००।-(चालिस लाख) निज प्रतिवादीहरुबाट असुल उपर गराई निजहरूलाई कानून बमोजिम कारवाही होस भन्ने ब्यहोराको सन्तोष गौतमको कागज।

३९) **सन्देश सिंह ठकुरी को कागज :**

मिति २०७७।०९।०१ गते का.जि.का.म.न.पा.महाराजगञ्ज स्थित खाना घरमा गजेन्द्र बुढाथोकीले एकिन नामथर वतन थाहा नभएका व्यक्तिसँग अमेरिका लैजान गृह मन्त्रालयबाटै पहल हुदै छ भनी कुरा गरेको मैले पनि सोही खाजा घरमा सुनेकोले मैले पनि निज गजेन्द्र बुढाथोकीसँग सोही बेला अमेरिका कसरी पठाउन सकिन्छ भनी चासो राखेको र फोन नं. समेत आदान प्रदान गरेकोले तिमि बेरोजगार रहेछौ तिमी अमेरिका जान्छौ भनी निजले मलाई बताउदा के कसरी जाने भनी निज सँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका उच्च पदस्थका कर्मचारीहरूको राम्रो सम्बन्धमा निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आबश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ अमेरिकाजान तयार गर्नु पर्ने कागजातहरूमा तपाईको नाम चाही भुवन थापा भनी फरक नाम राख्नु पर्छ बास्तबिक नाम राख्यो भने भिषा लाग्न गाह्रो हुन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान लाग्ने खर्च रु.५०,०००००।- (पचास लाख) सम्म लाग्न सक्छ भनी बिश्वास दिलाईए को मा निजको बिश्वासमा परी साथी भाई तथा आफन्तहरू समेत सँग सर सापटी मागी ल्याएको का.जि.का.म.न.पा.वडा नं.१० बानेश्वर स्थित बिन्दावासीनी संस्थामा आकाश रेग्मीलाई मैले मिति २०७७।०९।१५ गते रु.५,००,०००।- (पाँच लाख) नगद र एक प्रति फोटो समेत बुझाएको थिए। तपाईको काम गोप्य रुपमा गर्ने हो यदी तपाईलाई अमेरीका पठाउन सकेन भनी तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनेका थिए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकी मार्फत सन्तोष शर्मालाई भेटी तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ कामको प्रकृया भई रहेको छ तपाई मिति २०७८।०२।२६ गते चितवन स्थित सौराहामा रहेको भिजन सपारी रिसोर्टमा गई सन्देश शर्मा र आकाश रेग्मीलाई भेटी रु.१,५०,०००।- (एक लाख पचास हजार) नगद र चेक मार्फत सन्तोष शर्माले भुक्तानी पाउने गरी रु.८,५०,०००।- (आठ लाख पचास हजार) दिए पछी तपाईको गर्नु पर्ने बायोमेट्रिकको काम पुरा गरी आउनु भनेकोले सो दिन म चितवनमा गई गजेन्द्र बुढाथोकी मार्फत आकाश रेग्मी र सन्देश शर्मासँग भेट भएका निजले हातको औंलाबाट बायो मेट्रिकको काम गरी तपाईको काम हुदै छ ढुक्क भएर बस्नु भनी पठाए। त्यसै क्रममा निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी रकम रु.१०,००,०००।- (दश लाख) पैसा बुझाई सके अब कहिले हुन्छ काम भनी सोध्दा निजले तपाईको काम भई राखेको छ, तपाईलाई दशै भित्र अमेरिका उडाउछु। स्वास्थ्य चेकजाँच गर्नु पर्ने पुर्व वाकी रहेको अन्य रकम बुझाउनु भनेकोले रु.२०,००,०००।- (बीस लाख) ममता आचार्यको नाममा जम्मा गर्नु भनी गजेन्द्र बुढाथोकीले बिश्वास दिलाएकोले मैले निज ममता आचार्यको नाममा खाता रहेको नेपाल एसविआई बैक लिमिटेडको नेपालगञ्ज शाखाको खाता नं.१९५१५२४१४०१०४९ मा ई.स.२०२१।१०।०८ तारेखमा रु.७,००,०००।- (सात लाख) म स्वयमले र रु.१३,००,०००।- (तेह्र लाख) मेरो माईजु जुनुमाया रायमाझीले जम्मा गराई सकेपछी गजेन्द्र बुढाथोकीले मेडिकल जाँचको लागी मोरङ जिल्लाको बिराट मेडिकलमा पठाएको र तत् पश्चात मेडिकल रिपोर्ट समेत राम्रो आएको छ भनी जानकारी गराएकोले तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण हामीहरु समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने , काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी

विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुरा कानी गर्दा निजले हामी बाट रकम लिई ठगी गर्ने योजना अनुसार नै बिभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने , पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी लगायतका उच्च पदस्थमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही पाउ भन्ने ब्यहोराको सन्देश सिंह ठकुरीको कागज।

४०) **उद्धब तिवारीको कागज :**

प्रतिवादी सागर राई चिनजानका मानिस हुन, विनिता सावदेन लिम्बु र सुनिल बुढाथोकीलाई म चिन्दिन। प्रतिवादी सागर राई चिनजानका मानिस हुन, जाहेरवाला बैदेशिक रोजगारमा जाने उद्देश्यले जाने प्रकृयाको बारेमा बुझी हिंड्ने क्रममा सागर राई र सुनिल बुढाथोकी सँग सम्पर्क हुँदा निजहरुले जाहेरवालालाई भुटानी शर्णार्थीलाई विदेश अमेरिका पठाउने कोटामा नेपालीलाई पनि भुटानी शर्णार्थी बनाई अमेरिका पठाउने गरी विशेष कोटा आएको छ तत्काल पैसा लाग्दैन अमेरिका पुगेको ३/४ दिनमा रु.३५,००,०००१ (पैतिस लाख रुपैया) दिनु पर्छ भनी विभिन्न प्रलोभन देखाई विश्वास दिलाई जाहेरवालालाई पनि सोही कोटामा अमेरिका पठाई दिन्छु भनी जाहेरवालासँग रकम माग गरी रकम जम्मा गर्नु भनी सुनिल बुढाथोकीको नामको सिद्धार्थ बैंक लि.मा 02416432880 न.को खाता नम्बर दिएकोले सो खातामा जाहेरवालाले मिति २०७७ /१०/२१ गते रु.२,००,०००।-(दुई लाख रुपैया) र मिति २०७७/१०/२५ गते रु.६,००,०००।-(छ लाख रुपैया) जम्मा गरी दिएकोमा सुनिल बुढाथोकीले विनिता सावदेन लिम्बुको 8487975194752401 नं. मा ट्रान्सफर गरी पठाई दिएको छ भनी WHATSAPP मा MESSAGE पठाई दिई काम भै रहेको भनी सन् ३ मार्च २०२२ मा काठमाण्डौ बोलाई हाल नाम र ठाँउ थाहा नभएको ललितपुर झम्सिखेलमा रहेको एक होटलमा लगी भुटानी शरणार्थीको फारम भुटानी शरणार्थीमा तिम्रो नाम जोन घिमिरे हो भनी जाहेरवालाको फोटो खिचि, बायोमेट्रिक गराई सकेपछि निजहरु सम्पर्क विहिन भएको भनी जाहेरवालाले मलाई बताएकोले थाहा पाएको हुँ। यसरी जाहेरवालालाई ठगी गर्ने कार्यमा संलग्न व्यक्तिहरुलाई कारबाही गरी जाहेरवालाको ठगी भएको रकम फिर्ता दिलाई भराई दिनु पर्छ भन्ने ब्यहोराको उद्धब तिवारीको कागज।

४१) **संजय अधिकारीको कागज :**

म २०७८।१०।०२ गते देखि गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा, शरणार्थी मामिला समन्वय सम्बन्धी राष्ट्रिय ईकाई सिंहदरबार काठमाण्डौमा शाखा अधिकृत पदमा कार्यरत रहेको छु । सो शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी संघ संस्था, कारागार माफी मिनाहा, गृह मन्त्रालयको अन्तर्राष्ट्रिय समन्वय, शरणार्थीहरुको यात्रा अनुमति पत्र शिफारिस गर्ने र शरणार्थी शिविरहरु अवलोकन भ्रमण गर्ने सम्बन्धी कार्यहरु समेत मेरो जिम्मेवारीहरु रहेका छन। उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया शाखामा कार्यरत नायव सुब्बाहरुको जिम्मामा रहन्छन। मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल २०७६" ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरु सोही शाखामा कार्यरत शाखा अधिकृत यन्तोष प्रधानको जिम्मामा रहेका थिए। म कार्यरत शाखाको चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको

प्रतिवेदनहरु मध्ये चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदन नै आधिकारीक प्रतिवेदन हो । बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेका भन्ने कुरा मलाई सो प्रतिवेदनको बारेमा प्रहरीबाट चासो राखेपछि मिति २०८०।०१।२५ गते मात्र जानकारी हुन आएको हो, सो प्रतिवेदन फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा के-कसरी रहन गए र को-कसले, के-कसरी प्रतिवेदनको ब्यहोरा फरक पारे वा पार्न लगाए भन्ने मलाई थाहा छैन । उक्त प्रतिवेदन मेरो जिम्मामा राखेको होईन र सो प्रतिवेदनको सम्बन्धमा मैले ध्यान दिईरहनु पर्ने आवश्यकता नपरेको तथा मैले प्रतिवेदनको बिषयमा काम समेत नगरेको कारण फरक-फरक प्रतिवेदन तयार गर्ने, फेरबदल गर्ने कार्यमा मेरो संलग्नता छैन । बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक-फरक तयार गरे गराएको बिषयमा मलाई कुनै जानकारी छैन भन्ने ब्यहोराको संजय अधिकारीको कागज ।

४२) **गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा, शरणार्थी मामिला समन्वय सम्बन्धी राष्ट्रिय ईकाई सिंहदरबार काठमाण्डौमा शाखा अधिकृत पदमा कार्यरत यन्तोष प्रधानको कागज**:

म गृह मन्त्रालयको स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा शाखा अधिकृत पदमा मिति २०७६।०५।२३ गते देखि हालसम्म कार्यरत रहेको छु । उक्त शाखामा रहँदा शाखाको जिम्मेवारी अन्तर्गत रहेका सबै कामको जिम्मेवारी त्याहा उपस्थित सबै शाखा अधिकृतलाई पर्न जान्थ्यो । शाखामा कार्यरत रहेको समयमा वाकीटकी, ड्रोन, यात्रा अनुमती, अन्तरराष्ट्रिय सम्बन्ध, सम्पत्ति शुद्धिकरण, Security Clearance, राजदुतहरुको माथिल्लो प्रशासकहरुको भेट, शरणार्थी व्यवस्थापन सम्बन्धि कार्यहरु गर्ने गरिन्थ्यो। म बसेको शाखामा कुनै पनि फायल, प्रतिवेदन चिठ्ठीपत्रहरु त्यहाँ कार्यरत ना.सु.कम्प्युटर अपरेटर र शाखा अधिकृतको जिम्मामा रहन्थ्यो । २०७६ सालमा पेश भएको भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन पहिलो चोटी यस शाखामा तत्कालिन शाखा प्रमुख उप सचिव कृष्ण प्रसाद शर्माले राख्नको लागि मलाई प्रदान गर्नु भएको थियो । सो पश्चात म काम गर्ने शाखाका शाखा अधिकृत प्रतिक राईले मन्त्रीपरिषदमा पेश गर्न टिप्पणी उठाई शाखा प्रमुख कृष्ण प्रसाद शर्मा, सह सचिव केदारनाथ शर्मा, सचिव प्रेम कुमार राई र गृह मन्त्री राम वहादुर थापाले सहि गरी मन्त्रीपरिषदमा पेश भएको थियो । उक्त कार्यदलले दिएको प्रतिवेदनबाट उठाईएका विकल्पहरुलाई प्रस्ताव गरी निर्णय गर्नको लागि मन्त्रीपरिषदमा पठाईएको तर कार्यदलको सक्कल प्रतिवेदन शाखामा नै रहेको थियो । त्यसबखतको मन्त्रीपरिषदबाट सो प्रस्ताव उपर मिति २०७७।११।११ गते मन्त्रीपरिषद सामाजिक समितीमा छलफलको लागि पेश गर्ने निर्णय भएको जानकारी शाखामा प्राप्त भएको थियो । उल्लिखित प्रस्ताव उपर मन्त्रीपरिषदबाट निर्णय भए पछी गृह मन्त्रालयबाट पठाइएका प्रस्तावहरु फिर्ता आएका थिए । मिति २०७८।०८।०८ गते शाखा प्रमुख उ.स.सागर मणी पाठकले भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका सम्बन्धमा मन्त्रीपरिषदमा प्रस्ताव पठाउनको लागि मलाई टिप्पणि उठाउनको लागि अनुरोध गरे बमोजिम मैले टिप्पणी उठाई शाखा प्रमुखलाई दिएको थिए । सो टिप्पणीमा मिति २०७६।०४।२४ गते मा.गृह मन्त्री राम बहादुर थापा बादलको अध्यक्षतामा बसेको बैठकको निर्णय र बालकृष्ण पन्थीको संयोजकत्वमा बनेको कार्यदलले पेश गरेको प्रतिवेदनको आधारमा टिप्पणी लेखि सिलसिलेवार शाखा प्रमुख उ.स.सागरमणी पाठक, सह-सचिव फणिन्द्रमणी पोखरेल, सचिव टेक नारायण पाण्डे र गृह मन्त्री बालकृण्ण खाड सहि गरी मन्त्रीपरिषदमा पेश भएको थियो । सो समयमा टिप्पणीको साथमा उक्त कार्यदलको प्रतिवेदनको मूख्य भागको सचिवद्वारा प्रमाणित प्रतिलिपी राखिएको थियो

। सो प्रस्ताव मन्त्रीपरिषदबाट पास भई आए पछी सक्कलै प्रतिवेदन सहित मलाई फायल राख्न दिईएको थियो। मन्त्रीपरिषदबाट फिर्ता भई आएको सो प्रतिवेदन बिभिन्न समयमा शाखा प्रमुख सागर मणी पाठक, उ.स.शेखर पौडेल, माहाशाखा प्रमुख फणिन्द्रमाणी पोखरेल र सचिव टेक नारायण पाण्डेले माग्ने गरेका थिए र म भएको समयमा मैले तथा म नभएको समयमा शाखाका सो समयमा रहे भएका साथीहरुले सो प्रतिवेदन दिने गरेका थिए। सो प्रतिवेदन मैले आफैंले राखेको अवस्थामा कहिले कसरी फेरियो वा नक्कली प्रतिवेदन कहिले कसरी कसले तयार गऱ्यो र राख्यो भन्ने एकिन साथ भन्न सक्दिन, तर सो प्रतिवेदनका सम्बन्ध तत्कालिन सचिव मा टेक नारायण पाण्डेको सबैभन्दा धेरै र अस्वाभाविक चासो रहेको, मन्त्रीपरिषदमा पेश भई निर्णय समेत भई फिर्ता आएको प्रतिवेदन बारम्बार सचिव ज्यूले माग गर्ने गरेको र मन्त्रीपरिषदबाट फिर्ता भएर आएको केही दिन पछि निजले सो प्रतिवेदन माग गरी ४/५ दिनसम्म लगातार आफैंसँग राखेको समेतका कारण निजकै निर्देशन वा संलग्नताबाट प्रतिवेदन फेरबदल भएको तथा नक्कली प्रतिवेदन म कार्यरत शाखामा राखेको भन्ने कुरामा मलाई बिश्वास लाग्छ। सो प्रतिवेदन फरक फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको बारेमा जिल्ला प्रहरी परिसर टेकुबाट मिति २०८०।०१।२६ गतेको पत्रबाट सो प्रतिवेदनको सक्कल प्रति माग भएपछि सोही दिन मैले म कार्यरत शाखाको च.नं.८४० को पत्रसाथ सो प्रतिवेदन पठाएको थिएँ। सोही दिन प्रहरी कार्यालयबाट मन्त्रीपरिषदमा पेश भएको सोही प्रतिवेदनको प्रतिलिपी पठाईदिन अनुरोध गरि पत्राचार गरेपछि मन्त्रीपरिषदबाट सो प्रतिवेदन माग गर्दा मन्त्रीपरिषदबाट प्राप्त सोही प्रतिवेदनको प्रतिलिपी हेर्दा प्रहरी कार्यालयमा पठाईसकेको प्रतिवेदनको ब्यहोरासँग मिल्दो नदेखिएकोले बालकृष्ण पन्थीको प्रतिवेदन फरक फरक रहेको बारेमा थाहा पाएको र मन्त्रीपरिषदबाट प्राप्त प्रतिवेदन म कार्यरत शाखाको च.नं.८४३ को पत्रसाथ सोही दिन प्रहरी कार्यालयमा पठाएको हुँ। यसरी फरक-फरक ब्यहोराको प्रतिवेदन रहेको थाहा पाएपछि मन्त्रीपरिषदमा पेश भएको सोही प्रतिवेदनको सक्कल कहाँ छ भनेर शाखामा कार्यरत सबैले खोजी गर्दा मन्त्रीपरिषदमा पेश भएको सोही प्रतिवेदनको सक्कल प्रति शाखामै रहेको फेला परेको थियो। बालकृष्ण पन्थीको संयोजकत्वमा बनेको कार्यदलले दिएको प्रतिवेदन तोडमोड गर्ने फरक पार्ने, नक्कली प्रतिवेदन बनाउने र शाखामा ल्याई राख्ने कार्यमा मेरो कुनै संलग्नता छैन, सो प्रतिवेदनको ब्यहोरा थप गरी तथा घटाई नेपालीहरुलाई भूटानी शरणार्थी बनाउने र अमेरिका समेत लैजाने कार्य गर्न खोजेको स्पष्ट देखिएको र सो कार्यमा सचिव टेक नारायण पाण्डेको अस्वाभाविक चासो र चिन्ता समेत रहेको तथा निज स्वार्थ समूहको प्रभावमा परेको भन्ने हाल थाहा पाएको कारण निजैले नक्कली प्रतिवेदन बनाउने तथा बनाउन लगाउने तथा राखेको कुरामा मलाई बिश्वास लाग्छ, यसमा मेरो भएको ब्यहोरा यत्ति नै हो भन्ने ब्यहोराको यन्तोष प्रधानको कागज।

४३) **<u>गोपाल कुमार अधिकारीको कागज</u> :**

म २०७७।०२।२१ गते देखि सोही सालको चैत्र ३० सम्म गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा शाखा प्रमुख (उप-सचिव) पदमा कार्यरत रहेको थिएँ। सो शाखा गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तरगत रहेको शाखा हो, सो शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा प्राप्त निर्देशनको पालना गर्ने गराउने तथा आफू प्रमुख रहेको शाखाको प्रमुख भई काम गर्ने हो। उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ। मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल २०७६" ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरुको म कार्यरत रहेको समयमा कुनै चर्चा र चासो

नभएको तथा मैले सो सम्बन्धमा म कार्यरत रहेको अवधिमा कुनै काम कारवाही समेत नभएको कारण सो प्रतिवेदन को-कसको जिम्ममा थियो भन्ने मलाई थाहा छैन । म तत्काल कार्यरत शाखाको चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदनहरु मध्ये चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदन मध्ये कुन आधिकारीक प्रतिवेदन हो भन्ने मलाई थाहा छैन । बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन सम्बन्धी कार्य म कार्यरत रहेको समयावधीमा कुनै काम नै नभएको कारण सो प्रतिवेदनको फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक-फरक तयार गरे गराएको बिषयमा मलाई कुनै जानकारी छैन, यस बाहेक अन्य केही छैन भन्ने ब्यहोराको गोपाल कुमार अधिकारीको कागज ।

४४) **गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा सिंहदरवारको शाखा प्रमुख पदमा कार्यरत रहि हाल गृह मन्त्रालय, कर्मचारी प्रशासन शाखामा शाखा प्रमुख (उप-सचिव) पदमा कार्यरत कृष्ण प्रसाद शर्माको कागज** :

म २०७६ सालको बैशाख महिनादेखी मिति २०७७।०२।१४ गते सम्म गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा शाखा प्रमुख (उप-सचिव) पदमा कार्यरत रहेको थिएँ । सो शाखा गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तरगत रहेको शाखा हो, सो शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा प्राप्त निर्देशनको पालना गर्ने गराउने तथा आफु प्रमुख रहेको शाखाको प्रमुख भई काम गर्ने हो । उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ । मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६" ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरु तत्काल सोही शाखामा कार्यरत शाखा अधिकृत यन्तोष प्रधानको जिम्मामा रहेको थियो । म तत्काल कार्यरत शाखाको चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदनहरु मध्ये चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदन नै आधिकारीक प्रतिवेदन हो । अर्को प्रतिवेदनको सम्बन्धमा मलाई जानकारी छैन । बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदनमा फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक-फरक तयार गरे गराएको बिषयमा मलाई कुनै जानकारी छैन भन्ने ब्यहोराको कृष्ण प्रसाद शर्माको कागज ।

४५) **नेपाल प्रहरी प्रधान कार्यालय कार्य बिभाग सवारी माहाशाखा नक्साल काठमाण्डौमा कार्यरत डोल राज पाण्डेको कागज**:-

म २०६४ साल देखि नेपाल प्रहरीको प्रहरी जवान पदमा भई हाल सवारी महाशाखा नक्साल काठमाण्डौमा सहायक हवलदार पदमा रही कामकाज गर्दै आईरहेको छु । त्यसै क्रममा आज भन्दा करिब ४ बर्ष अगाडी मलाई सवारी माहाशाखा नक्साल काठमाण्डौको आदेश अनुसार गृह मन्त्रालय अन्तर्गत सवारी माहाशाखामा सवारी चालकको रुपमा कामकाज गर्ने भनी खटाई पठाईएकोमा म गृह मन्त्रालयमा रहेको सवारी महाशाखामा

गई गाडी चलाउने काम गर्ने क्रममा सवारी माहाशाखाको मौखिक आदेशबाट मैले तत्कालीन गृहमन्त्री राम बहादुर थापाका सुरक्षा सल्लाहकार डा.ईन्द्रजित राईको गाडी चलाउनु भनी खटाई पठाईकोमा सो दिन देखी निज ईन्द्रजित राईले चढ्ने गरेको Ford कम्पनीको Eco sport लेखिएको सेतो नंम्बर प्लेट भएको सरकारी गाडी चलाउदै आईरहेको थिए। हाल मलाई उक्त गाडीको यकिन नम्बर प्लेट मलाई याद भएन। उक्त गाडी चलाउने क्रममा ईन्द्रजित राईले कहिले काही सो गाडी आफै चलाई मलाई तिमी घर जाउ म आफै गाडी चलाउँछु भनी निज आफैले गाडी चलाई लिई जाने गरेको थियो। उक्त गाडी निजले के-कहाँ लाने गर्दथे सो सम्बन्धमा मलाई एकिन याद भएन। निज कहिले काही ललितपुर स्थित हिमालयन होटल तथा काठमाण्डौ स्थित आँगन होटल सम्म जाने गरेको थियो। हाल पक्राउमा परी आएका प्रतिवादी सानु भण्डारीलाई गृह मन्त्रालयमा ईन्द्रजित राईसँग कुरानानी गरी रहेको अवस्थामा समेत देखेको हो। सोही कारणबाट निज सानु भण्डारी उच्च पदका ब्यक्ती होलान भनी मैले निजलाई नमस्कार समेत गरी बोलचाल गर्ने क्रममा निजलाई मैले चिनेको थिए। ईन्द्रजित राईको गाडी चालक म भएकोले निजसँग हिमालयन होटलमा जाँदा म गाडी पार्किङ गरी पार्कीङमा नै गाडी कुरी बस्ने गरेकोले निजलाई उक्त होटलमा को-कस्तो मान्छे भेट आउथे निजलाई के-कुन सामान गिफ्ट स्वरुप ल्याउथे भन्ने सम्बन्धमा मलाई केही थाहा छैन। करिव ३ बर्ष जती ईन्द्रजित राईको गाडी मैले चलाए पछी मलाई मिति २०७८।०५।१६ गतेको पत्र आदेश अनुसार नेपाल हज समितीको सचिवालयमा खटाई पठाईएकोमा उक्त कार्यालयमा गएको थिए। उक्त स्थानमा जादा मलाई हज समितको अध्यक्ष शमशेर मियाँले तपाईले आज बाट बा.१ ञ.१५८१ नम्बरको पहेलो प्लेट भएको गाडी चलाउनु भनी चाबी सहित मलाई जिम्मेबारी दिनु भएको थियो। त्यसको केही दिन पछी शमशेर मियाँले उक्त गाडीको नम्बर प्लेट परिवर्तन गरी ईम्बोस नम्बर राखी ल्याउनु भनी हज समितीले पत्र समेत मलाई दिई पठाएकोमा म बिधुत प्राधिकरको कार्यालय रत्नपार्कमा गई उक्त पत्र सो कार्यालयमा बुझाउदा मलाई बिधुत प्राधिकरणबाट पुन यातायात ब्यवस्था कार्यालय नयाबानेश्वलाई जानु भनी पत्र समेत दिई पठाएको मा म उक्त स्थानमा गई सो पत्र यातायात कार्यालयमा बुझाएकोमा उक्त गाडीको ईम्बोस नम्बर BAB1405 गाडीमा हाली दिए पछी पहिले प्रयोग भएको बा.१ ञ.१५८१ पहेलो प्लेट गाडीको पछाडी सिट मुनी राख्न उक्त सिट मुनी अर्को बा.१ झ.१५८१ नम्बरको सेतो प्लेट पनी सोही स्थानमा रहेको देखेको थिए। मन्त्रालयको गाडी भएकोले फरक-फरक नम्बर सोही गाडीमा प्रयोग गर्ने समेत गरेको रहेछ भन्ने कुरा सोचेको थिए। गाडीको एम्बोस नम्बर प्लट जडान भए पछी सो स्थानबाट म सिंहदरबार भित्र रहेको हजको कार्यालयमा आई शमशेर मियाँ ले प्रयोग गर्ने मोबाईल ९८५७०२५६९९ समेतमा फोन गरी जानकारी समेत गराएको थिए। उक्त ईम्बोस नम्बर जडान भएको गाडीमा मैले शमशेर मियाँलाई निज बस्ने गरेको डेरा कोठा बसुन्धाराबाट चढाई सिंहदरबार भित्र रहेको हज को अफिसमा ल्याउने लैजाने काम गरेको थिए। उक्त गाडीको नम्बर प्लेट मैले चलाउनु भन्दा पहिले सेतो नम्बर प्लेट रहेको भन्ने कुरा सुनी थाहा पाएको थिए के कसरी पहेलो नम्बर प्लेट बनाए सो सम्बन्धमा मलाई थाहा छैन। त्यसै क्रममा गृह मन्त्रालयमा नया गृह मन्त्री रवि लामिछाने आउनु भएकोले निजको आदेश अनुसार सम्पुर्ण प्रहरी कर्मचारीहरूलाई फिर्ता हुन भन्ने निर्देशन प्राप्त भएकोले तपाई फिर्ता हुन भनी मलाई सवारी माहाशाखा नक्साल काठमाण्डौबाट जानकारी प्राप्त भएकोले मैले उक्त गाडी हज समितीको कार्यालयमा बुझाई म फिर्ता भएको थिए भन्ने ब्यहोराको डोल राज पाण्डेको कागज।

४६) **<u>स्याङ्जा जिल्ला साविक पेलाकोट गा.वि.स. वडा नं. ७ हाल परिवर्तित ऐ. गल्याङ न.पा. वडा नं. ७ स्थायी वतन भई गृह मन्त्रालय, तत्काल स्थानिय प्रशासन तथा प्रदेश समन्वय शाखा प्रमुख र हाल जिल्ला प्रशासन कार्यालय गुल्मीमा प्रमुख जिल्ला अधिकारीको रुपमा कार्यरत सागर मणि पाठकको कागज:</u>**

म गृह मन्त्रालयको स्थानिय प्रशासन र प्रदेश समन्वय शाखा मिति २०७८।०१।०५ देखि मिति २०७८ फाल्गुणसम्म शाखा प्रमुखको रुपमा कार्यरत रहेको थिएँ। सो शाखा गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तर्गत रहेको शाखा हो, सो शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा प्राप्त निर्देशनको पालना गर्ने गराउने तथा आफू प्रमुख रहेको शाखाको प्रमुख भई काम गर्ने हो। उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ। म गृह मन्त्रालयको स्थानिय प्रशासन र प्रदेश समन्वय शाखामा मिति २०७८।०१।०५ देखि कार्यरत रहेकोले बालकृष्ण पन्थीको संयोजकत्वमा मिति २०७६।०२।३० गते गठन भएको "भुटानी शरणार्थी समस्याको स्थायी रदीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६" गठन गर्नु पर्ने आवश्यकता कसरी पर्न गयो, के कस्ता छलफल र बैठक समेतबाट उक्त कार्यदल बन्यो, को कसको शिफारिसमा सो कार्यदलका संयोजक र सदस्यहरु छनौट भए भन्ने बारेमा मलाई थाहा भएन। मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी समस्याको स्थायी रदीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल२०७६ ले पेशगरेको प्रतिवेदन शाखामा कार्यरत शाखा अधिकृत यन्तोष प्रधानले राखेका थिए। म गृह मन्त्रालयको स्थानिय प्रशासन र प्रदेश समन्वय शाखामा कार्यरत रहँदा तत्काल मन्त्रालयमा कार्यरत सचिव टेक नारायण पाण्डे ज्यूले मसँग बालकृष्ण पन्थीको संयोजकत्वको "भुटानी शरणार्थी समस्याको स्थायी रदीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६" कार्यान्वयनमा लैजानु पऱ्यो, सो को प्रकृया शुरु गर्नुहोस भन्नु भएको थियो। सचिव ज्यूको उक्त आदेश भएपछि मैले शान्ति सुरक्षा महाशाखामा तत्काल कार्यरत सह-सचिव फणिन्द्रमणि पोखरेल र अन्य शाखाका कर्मचारीहरुसँग सो बारेमा छलफल गरेको थिएँ , यस्तो छलफलमा सह-सचिव लगायत अन्य कर्मचारीहरुबाट सो प्रतिवेदनमा कार्यदल गठन हुनु अघि UNHCR र RCU को संयुक्त Verification Team ले भुटानी शरणार्थी भनी पहिचान गरेका ४२९ जना ब्यक्तिहरु नै Re-Verification गर्नु पर्ने अबस्थाका रहेको भन्ने अनौपचारिक गुनासो सुनिएको अवस्था रहेको, नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई तेश्रो देश लैजाने भन्ने हल्लाहरु सुनिएको र कार्यदलले सुझाव दिए बमोजिमको सुबिधा र प्रावधानहरु भूटानी शरणार्थीहरुको हकमा कार्यान्वयन गर्दा नेपालमा रहेका अन्य देशका शरणार्थीहरुको हकमा पनि गर्नु पर्ने अवस्था आउने र सो नीतिगत र ब्यबहारिक रुपमा कठिन हुन जाने समेतका अवस्थाहरु भएकोले उक्त प्रतिवेदन कार्यान्वयन गर्न कठिन हुने भन्ने बिभिन्न अनौपचारिक छलफलहरुमा भएकोले मैले ब्यक्तिगत रुपमा सचिव टेक नारायण पाण्डे ज्यू लाई प्रतिवेदन कार्यान्वयन गर्न अप्ठ्यारो छ, यो काम अहिले गर्नुहुन्न भनेको थिएँ। त्यसपछि हामीहरुले के कसरी पन्थी प्रतिवेदन कार्यान्वयन रोक्न सकिन्छ भन्ने सल्लाह हुँदा UNHCR र RCU को संयुक्त Verification Team ले भुटानी शरणार्थी भनी पहिचान गरेका ४२९ जना ब्यक्तिहरुको सम्बन्धमा पुन: संख्या एकिन गर्नको लागि कार्यदल बनाएमा पन्थी प्रतिवेदन कार्यान्वयनमा ढिलाई गर्न र टार्न सकिन्छ भन्ने निष्कर्ष बमोजिम Re-verification को लागि अर्को कार्यदल बनाउनु पर्छ भनी सचिवलाई मौखिक रुपमा भनी झापा जिल्लाका सहायक प्रमुख जिल्ला अधिकारीको नेतृत्वमा जिल्ला प्रहरी कार्यालयको

प्रतिनिधि, UNHCR को प्रतिनिधि र RCO ( Refugee Coordination Officer) सदस्य रहनेगरी मिति २०७८।०६।१४ गते (सचिवस्तर) निर्णय गरी कार्यदल बनाईएको थियो। सचिव टेक नारायण पाण्डे ज्यूबाट बालकृष्ण पन्थीले दिएको प्रतिवेदन कार्यान्वयनको लागि लगातार प्रेसर हुन थालेपछि सो तत्काल कार्यान्वयन हुनबाट टार्ने उद्देश्यले सो कार्यदल बनाईएको थियो। कार्यदल गठन गर्दा १५ दिनको म्याद दिई गठन गरेकोमा सो कार्यदलले मेरो सरुवा हुँदा सम्म पनि कुनै काम गरेको थिएन । पछि मिति २०७९।०२।२७ गतेको मन्त्रीस्तरिय निर्णयबाट सो कार्यदलको म्याद सोही बर्षको भदौ मसान्त सम्म थप गरी पहिले दिएको कार्यादेशमा " बालकृष्ण पन्थीको प्रतिवेदन अध्ययन गरी छुट शरणार्थीहरुको सम्बन्धमा राय सुझाव दिने" भन्ने कार्यादेश थप गरिएको बारेमा मन्त्रालयमै कार्यरत साथिहरुबाट यस सम्बन्धि बिषयमा चर्चा हुन थालेपछि साथीहरुबाट थाहा पाएँ । यसै वीचमा २०७८ सालको फाल्गुण महिनामा मेरो अप्रत्यासित रुपमा सरुवा भैसकेपछि मैले रवाना नलिंदै १ दिन टेक नारायण पाण्डेले UNHCR का प्रतिनिधिहरु Caroline Spannuth Verma र UNHCR का नेपाल प्रतिनिधि दिपा दिक्षितलाई गृह मन्त्रालयमा बोलाई बैठक बस्दा सो बैठकमा म, सह-सचिव फणिन्द्रमणि पोखरेल समेत थियौं। सो बैठकमा टेक नारायण पाण्डेले UNHCR र RCU को संयुक्त Verification Team ले भुटानी शरणार्थी भनी पहिचान गरेका ४२९ जना बाहेकका १०१७ जना मानिसहरु मध्ये केही शरणार्थीका रुपमा रहेकोले यस सम्बन्धमा समेत कार्य गर्न कसरी सकिन्छ भन्ने बिषयमा छलफल गराउनु भएको थियो । सो छलफलमा UNHCR का प्रतिनिधिहरुले ४२९ जना बाहेक अन्य मानिसहरुलाई परिचयपत्र दिन र भुटानी शरणार्थी भनी प्रमाणिकरण गर्न कुनै पनि हालतमा सकिंदैन भनेका हुन। सो बेला म र फणिन्द्रमणि पोखरेलले मैले पनि ४२९ जनाभित्रै शंकास्पद ब्यक्तिहरु रहेको भन्ने हल्ला भएको अबस्थामा सो बाहेक अन्य थप मानिसहरुलाई भुटानी शरणार्थी भनी पहिचान र प्रमाणिकरण गर्न नसकिने राय दिएका थियौं। यसै गरी शरणार्थीहरुको बिषयमा छलफल र प्रसँग उठेका बखत मैले पटक पटक गृह सचिव ज्यूलाई पनि भूटानी शरणार्थीहरुको बिषय जटिल रहेको र यो बिषयको निरुपण अन्य देशका नेपालमा रहेका शरणार्थीहरुको समस्यासँग समेत जोडेर अध्ययन गरी उपयुक्त निर्णय लिनु पर्ने खालको रहेको, भुटानी शरणार्थीहरुको नाममा बिभिन्न मानिसहरुले नक्कली मानिसहरुलाई विदेश लैजाने समेत गरी नाजायज फाईदा लिन खोजेको कुरा गरेकै हो। यसरी मेरो र शाखामा कार्यरत सम्बन्धित सबै को राय बिपरित टेक नारायण पाण्डे ज्यू ले नै बिशेष चासो दिई बालकृष्ण पन्थीको प्रतिवेदन कार्यान्वयनको अग्रसरता लिनु भएको हो। मेरो अप्रत्यासित सरुवा मैले भुटानी शरणार्थीहरुको सम्बन्धमा सचिवज्यूसँग भएको फरक मतकै कारण भएको भन्ने ठानेको थिएँ। बालकृष्ण पन्थीको प्रतिवेदन २ वटा फरक फरक ब्यहोरा र प्रकृतिका रहेको बारेमा मैले यो प्रतिवेदन प्रहरीमा पठाई सकेपछि २०८० बैशाखको अन्तिममा थाहा पाएको हुँ । सो प्रतिवेदन मिति २०७८।०८।१२ मा मन्त्रीपरिषदमा पेश भई गृह मन्त्रालयमा फिर्ता आएपछि कहिले कसरी फेरियो वा नक्कली प्रतिवेदन कहि,ले कसरी, कसले तयार गऱ्यो र राख्यो भन्ने एकिन साथ भन्न सक्दिन, तर सो प्रतिवेदनका सम्बन्धमा टेक नारायण पाण्डेको अस्वाभाविक चासो रहेको, मन्त्रीपरिषदमा पेश भई निर्णय समेत भई फिर्ता आएको प्रतिवेदन बारम्बार शाखाबाट माग गरी लामो समयसम्म राख्ने समेत गरेका कारण निजकै निर्देशन वा संलग्नता समेतबाट प्रतिवेदन फेरबदल भएको तथा नक्कली प्रतिवेदन मन्त्रालयको स्थानिय प्रशासन तथा प्रदेश समन्वय शाखामा राखेको हुन सक्छ । भुटानी शरणार्थीहरुको सम्बन्धमा UNHCR र RCU को संयुक्त Verification Team ले पहिचान गरेका ४२९ समेत अन्य थप नाम समावेश गराउने समेतका बिषयमा मेरो

शुरुदेखि नै बिपक्षमा मत रहेको थियो । मैले बालकृष्ण पन्थीको प्रतिवेदन फेरबदल गर्ने समेतको कार्यमा मेरो कुनै संलग्नता छैन भनी सागर मणी पाठकको कागज ।

४७) **जिल्ला भक्तपुर, मध्यपुर ठिमी न.पा.वडा नं.३ स्थायी वतन भई गृह मन्त्रालय, तत्काल शान्ति सुरक्षा महाशाखाको महाशाखा प्रमुख र हाल सोही मन्त्रालयको कसूरजन्य सम्पत्ति ब्यबस्थापन बिभागमा कार्यरत सह-सचिव फणिन्द्रमणि पोखरेलको कागज:-**

म गृह मन्त्रालयको शान्ति सुरक्षा महाशाखामा मिति २०७८।०४।११ देखि मिति २०७९ सालको माघ महिनासम्म महाशाखा प्रमुखको रुपमा कार्यरत रहेको थिएँ । सो पश्चात सोही मन्त्रालयको कसूरजन्य सम्पत्ति ब्यबस्थापन बिभागमा कार्यरत रहेको छु, गृह मन्त्रालयको शान्ति सुरक्षा महाशाखामा रहँदा मेरो जिम्मेवारी महाशाखा अन्तर्गतका शान्ति सुरक्षा र अपराध नियन्त्रण शाखा, अध्यागमन र सीमा प्रशासन शाखा र स्थानिय प्रशासन र प्रदेश समन्वय शाखाको सुपरिवेक्षण गर्ने रहेको थियो । म गृह मन्त्रालयको शान्ति सुरक्षा महाशाखामा मिति २०७८।०४।११ देखि कार्यरत रहेकोले बालकृष्ण पन्थीको संयोजकत्वमा मिति २०७६।०२।३० गते गठन भएको "भुटानी शरणार्थी समस्याको स्थायी रदीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल२०७६" गठन गर्नु पर्ने आवश्यकता कसरी पर्न गयो, के-कस्ता छलफल र बैठक समेतबाट उक्त कार्यदल बन्यो, को-कसको शिफारिसमा सो कार्यदलका संयोजक र सदस्यहरु छनौट भए भन्ने बारेमा मलाई थाहा भएन, स्थानिय प्रशासन र प्रदेश समन्वय शाखामा हुने कुनै पनि प्रतिवेदन, फायल र चिट्ठीपत्र समेतका कागजातहरु शाखा प्रमुखको सुपरिवेक्षणमा निजले जिम्मा दिएको अधिकृतले राख्ने गर्दछन । मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी समस्याको स्थायी रदीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल२०७६ ले पेशगरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु पनि स्थानिय प्रशासन र प्रदेश समन्वय शाखाकै जिम्मामा रहेका हुन, कहिले-कहिले, को-कुन अधिकृतले राखेका थिए भन्ने मलाई यकिन छैन ।म गृह मन्त्रालयको शान्ति सुरक्षा महाशाखामा सरुवा भइ आएपछि तत्काल मन्त्रालयमा कार्यरत सचिव टेक नारायण पाण्डे ज्यूले मसँग बालकृष्ण पन्थीको संयोजकत्वको "भुटानी शरणार्थी समस्याको स्थायी रदीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल२०७६" कार्यान्वयनमा लैजानु पऱ्यो, सो को प्रकृया शुरु गर्नुहोस भन्नु भएको थियो । सचिव ज्यूको उक्त आदेश भएपछि मैले स्थानिय प्रशासन र प्रदेश समन्वय शाखामा तत्काल कार्यरत उप-सचिव सागरमणी पाठक र अन्य शाखाका कर्मचारीहरुसँग सो बारेमा बुझ्ने कार्य गर्दा उप-सचिव लगायत अन्य कर्मचारीहरुबाट सो प्रतिवेदनमा कार्यदल गठन हुनु अघि UNHCR र RCU को संयुक्त Verification Team ले भुटानी शरणार्थी भनी पहिचान गरेका ४२९ जना ब्यक्तिहरु नै Re-Verification गर्नु पर्ने अवस्थाका रहेको भन्ने अनौपचारिक गुनासो सुनिएको अवस्था रहेको, नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई तेश्रो देश लैजाने भन्ने हल्लाहरु सुनिएको र कार्यदलले सुझाव दिए बमोजिमको सुबिधा र प्रावधानहरु भूटानी शरणार्थीहरुको हकमा कार्यान्वयन गर्दा नेपालमा रहेका अन्य देशका शरणार्थीहरुको हकमा पनि गर्नु पर्ने अवस्था आउने र सो नितीगत र ब्यवहारीक रुपमा कठिन हुन जाने समेतका अवस्थाहरु भएकोले उक्त प्रतिवेदन कार्यान्वयन गर्न कठिन हुने भन्ने बिभिन्न अनौपचारिक छलफलहरुमा भएकोले मैले ब्यक्तिगत रुपमा सचिव टेक नारायण पाण्डे ज्यू लाई प्रतिवेदन कार्यान्वयन गर्न अप्ठ्यारो छ, यो काम अहिले गर्नुहुन्न भनेको थिएँ । त्यसपछि हामीहरुले के-कसरी पन्थी प्रतिवेदन कार्यान्वयन रोक्न सकिन्छ भन्ने सल्लाह हुँदा UNHCR र RCU को संयुक्त Verification Team ले भुटानी शरणार्थी भनी पहिचान गरेका ४२९ जना ब्यक्तिहरुको

सम्बवन्धमा Re-Verification को लागी कार्यदल बनाएमा पन्थी प्रतिवेदन कार्यान्वयनमा ढिलाई गर्न र टार्न सकिन्छ भन्ने निष्कर्ष बमोजिम Re-verification को लागी अर्को कार्यदल बनाउनु पर्छ भनी सचिवलाई मौखिक रुपमा भनी झापा जिल्लाका सहायक प्रमुख जिल्ला अधिकारीको नेतृत्वमा जिल्ला प्रहरी कार्यालयको प्रतिनिधि, UNHCR को प्रतिनिधि र RCO (Refugee Co-ordination Officer) सदस्य रहनेगरी मिति २०७८।०६।१४ गते (सचिवस्तर) निर्णय गरी कार्यदल बनाईएको थियो । सचिव टेक नारायण पाण्डे ज्यूबाट बालकृष्ण पन्थीले दिएको प्रतिवेदन कार्यान्वयनको लागी लगातार प्रेसर हुन थालेपछि सो तत्काल कार्यान्वयन हुनबाट टार्ने उद्देश्यले सो कार्यदल बनाईएको थियो र मैले झापा जिल्लाका सहायक सि.डि.ओ.चोमेन्द्र न्यौपानेलाई ब्यक्तिगत रुपमा फोन गरेर र पछि निजैलाई भेटेरै सचिव टेक नारायण पाण्डे ज्यूबाट बालकृष्ण पन्थीको प्रतिवेदन कार्यान्वयनको लागी भएको प्रेसर टार्नको मात्र कार्यदल बनेकोले तत्काल यस सम्बन्धी काम नगरी ढिलाई गरी दिनु भनेर भनेको थिएँ । कार्यदल गठन गर्दा १५ दिनको म्याद दिई गठन गरेकोमा सो कार्यदलले २०७९ जेठ महिना सम्म पनि कुनै काम गरेन । पछि मिति २०७९।०२।२७ गतेको मन्त्रीस्तरिय निर्णयबाट सो कार्यदलको म्याद सोही बर्षको भदौ मसान्त सम्म थप गरी पहिले दिएको कार्यादेशमा "बालकृष्ण पन्थीको प्रतिवेदन अध्ययन गरी छुट शरणार्थीहरुको सम्बन्धमा राय सुझाव दिने" भन्ने कार्यादेश थप गरिएको थियो । सो थप कार्यादेश टेक नारायण पाण्डेबाटै भएको हो । यस पछि सचिव ज्यूले चोमेन्द्र न्यौपानेलाई बारम्बार प्रतिवेदनको लागि ताकेता गर्नु भयो भने मलाई सो प्रतिवेदन छिटो माग गर्नका लागी दवाव दिन थालेकोले मैले बालकृष्ण पन्थीको प्रतिवेदन र नयाँ बनेको कार्यदलको प्रतिवेदन समेत भुटानी शरणार्थीहरु को सम्बन्धमा पहिले भईसकेको बाहेक थप काम गर्न सक्दिन, बरु हजुरलाई मेरो कारण सहज अनुभव भएको छैन भने म अन्य महाशाखामा रहेर काम गर्छु समेत भनेको थिएँ । यसै वीचमा २०७८ सालको फाल्गुण महिनामा टेक नारायण पाण्डेले UNHCR का प्रतिनिधिहरु Caroline Spannuth Verma र UNHCR का नेपाल प्रतिनिधि दिपा दिक्षितलाई गृह मन्त्रालयमा बोलाई बैठक बसी UNHCR र RCU को संयुक्त Verification Team ले भुटानी शरणार्थी भनी पहिचान गरेका ४२९ जना बाहेकका १०१७ जना मानिसहरु मध्ये केही शरणार्थीका रुपमा रहेकोले यस सम्बन्धमा समेत कार्य गर्न कसरी सकिन्छ भन्ने सम्बन्धमा छलफल गराउनु भएको थियो । सो छलफलमा UNHCR का प्रतिनिधिहरुले ४२९ जना बाहेक अन्य मानिसहरुलाई परिचयपत्र दिन र भुटानी शरणार्थी भनी प्रमाणिकरण गर्न कुनै पनि हालतमा सकिंदैन भनेका हुन । सो बेला मैले पनि ४२९ जनाभित्रै शंकास्पद ब्यक्तिहरु रहेको भन्ने हल्ला भएको अबस्थामा सो बाहेक अन्य थप मानिसहरुलाई भुटानी शरणार्थी भनी पहिचान र प्रमाणिकरण गर्न नसकिने राय दिएको हुँ । यसै गरी शरणार्थीहरुको बिषयमा छलफल र प्रसँग उठेका बखत मैले गृह मन्त्री ज्यूहरुलाई पनि भूटानी शरणार्थीहरुको बिषय जटिल रहेको र यो बिषयको निरुपण अन्य देशका नेपालमा रहेका शरणार्थीहरुको समस्यासँग समेत जोडेर अध्ययन गरी उपयुक्त निर्णय लिनु पर्ने खालको रहेको, भुटानी शरणार्थीहरुको नाममा बिभिन्न मानिसहरुले नक्कली मानिसहरुलाई विदेश लैजाने समेत गरी नाजायज फाईदा लिन खोजेको कुरा गरेकै हो । यसरी मेरो र शाखामा कार्यरत सम्बन्धित सबै को राय बिपरित टेक नारायण पाण्डे ज्यू ले नै बिशेष चासो दिई बालकृष्ण पन्थीको प्रतिवेदन कार्यान्वयनको अग्रसरता लिनु भएको हो । बालकृष्ण पन्थीको प्रतिवेदन २ वटा फरक-फरक ब्यहोरा र प्रकृतिका रहेको बारेमा मैले यो प्रतिवेदन प्रहरीमा पठाई सकेपछि २०८० बैशाखको अन्तिममा थाहा पाएको हुँ । सो प्रतिवेदन मिति २०७८।०८।१२ मा मन्त्रीपरिषदमा पेश भई गृह मन्त्रालयमा फिर्ता आएपछि कहिले कसरी फेरियो वा नक्कली प्रतिवेदन कहिले, कसरी, कसले तयार गर्‍यो र राख्यो भन्ने यकिन साथ भन्न सक्दिन, तर सो प्रतिवेदनका

सम्बन्धमा टेक नारायण पाण्डेको अस्वाभाविक चासो रहेको, मन्त्रीपरिषदमा पेश भई निर्णय समेत भई फिर्ता आएको प्रतिवेदन बारम्बार शाखाबाट माग गरी लामो समयसम्म राख्ने समेत गरेका कारण निजकै निर्देशन वा संलग्नता समेतबाट प्रतिवेदन फेरबदल भएको तथा नक्कली प्रतिवेदन मन्त्रालयको स्थानिय प्रशासन तथा प्रदेश समन्वय शाखामा राखेको हुन सक्छ । भुटानी शरणार्थीहरुको सम्बन्धमा UNHCR र RCU को संयुक्त Verification Team ले पहिचान गरेका ४२९ समेत अन्य थप नाम समावेश गराउने समेतका बिषयमा मेरो शुरुदेखि नै बिपक्षमा मत रहेको थियो । मैले बालकृष्ण पन्थीको प्रतिवेदन फेरबदल गर्ने समेतको कार्यमा मेरो कुनै संलग्नता छैन भनी फणिन्द्रमणी पोखरेलको कागज ।

४८) **यम बहादुर परियारको कागज** :

म बिगत केही बर्ष देखी साना गाडीहरू चलाउदै आईरहेको थिए यसै क्रममा मिति २०७९।०११।१५ गते नेपाल सह-समितको संचिवालयको निर्णायानुसार मासिक २७,६१२।- मा साना गाडी चलाउने भनी सहमती भएको थियो । उक्त सहमतीको प्रतिलिपी पाना १ यसै निबेदन साथ पेश गरेको छु । सोही क्रममा मैले मिति २०७९।११।१६ गते देखी नेपाल हज समितका अध्यक्ष शमशेर मियाँ चढने BAB 1405 नम्बरको ईम्बोस नम्बर प्लेट भएको भएको गाडी चलाउने गरेको थिए । उक्त गाडी शमशेर मियाँको आदेशबाट उपत्यका भर चलाई लिई जाने गरेको थिए । उक्त गाडीमा प्राय:जसो शमशेर मियाँ नै चढ्नु हुन्छ । सो गाडीमा BAB1405 नम्बर प्लेट बाहेक अन्य नम्बर प्लेट प्रयोग गरी मैले सो गाडी चलाएको छैन । गाडी सरसफाई गर्ने क्रममा उक्त गाडीको सिट मुनी बा.१ झ.१५८१ नम्बरको सरकारी प्लेट भएको नम्बर र बा.१.ञ. भएको पहेंलो रंगको नम्बर प्लेट समेत देखेको थिए । सो गाडी मन्त्रालयको भएकोले फरक फरक नम्बर प्लेट राखेको होला भन्ने सोचेको थिए । सो बाहेक मलाई केही थाहा छैन । त्यसै क्रममा मिति २०८०।०१। २६ गते नेपाल हज समितको काम बिषेशले पुर्व तर्फ सप्तरी,सुनसरी,मोरङ लगाएको जिल्लामा हर्ज समितको अन्य कर्मचारीहरूलाई लिई गएकोमा मिति २०८०।१।२८ गते मैले चलाई लिई गएको BAB1405 नम्बरको गाडी जिल्ला प्रहरी परिसर काठमाण्डौमा बुझाउनु भनी गृह मन्त्रालय अन्तर्गत सवारी तथा समारोह ब्यवस्थापन शाखाबाट मलाई जानकारी प्राप्त हुन आएकोले उक्त गाडी मिति २०८०।१।२९ गते निबेदन साथ दाखिला गरेको हो । उक्त गाडी भित्र सरकारी नम्बर प्लेट बा.१ झ.१५८१ भएको सेतो प्लेट थान १, बा.१ ञ.१५८१ भएको पहेलो रंगको नम्बर प्लेट थान १ समेत सोही गाडीको सिट मुनी सुरक्षीत रहेको छ भन्ने ब्यहोराको यम बहादुर परियारले अनुसन्धानको क्रममा गरी दिएको घटना बिवरण कागज ।

४९) **गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा सिंहदरवारको नायव सुब्बा पदमा कार्यरत रहि हाल कारागार कार्यालय डिल्लीबजारमा नायव सुब्बा पदमा कार्यरत सोम प्रसाद पोखरेलको कागज:-**

म २०७६ सालको फागुन महिना देखी मिति २०७७।१०।१० गते सम्म गृह मन्त्रालयको, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा नायव सुब्बा पदमा कार्यरत रहेको थिए । गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तरगत शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको सुरक्षा तथा समन्वय शाखा प्रमुख, शाखा अधिकृतहरु बाट प्राप्त निर्देशनको पालना गर्ने तथा आफूलाई जिम्मा दिएको कामको कार्यान्यिन गर्ने हो । उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ काम सम्पन्न भए पश्चात फाईलिङ गरिन्छ, उक्त कागजातहरु सम्पुर्ण शाखाका कर्मचारीहरुको जिम्मामा रहने गर्दछ । मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी

समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६" ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरु तत्काल सोही शाखामा रहेको सम्बन्धमा मलाई केही थाहा छैन। म तत्काल कार्यरत शाखाको चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदनहरु मध्ये कुन अधिकारीक प्रतिवेदन हो सो म छुट्याउन सक्दिन। बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन फरक फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक फरक तयार गरे गराएको बिषयमा मलाई कुनै जानकारी छैन, भन्ने ब्यहोराको सोम प्रसाद पोखरेलको कागज।

५०) **गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा सिंहदरवारको नायव सुब्बा पदमा कार्यरत रहि हाल कारागार कार्यालय नख्खुमा नायव सुब्बा पदमा कार्यरत धन कृष्ण पाण्डेको कागजः-**

म २०७७ सालको फागुन महिना देखी मिति २०७८।०६।१० गते सम्म गृह मन्त्रालयको, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा नायव सुब्बा पदमा कार्यरत रहेको थिए। गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तरगत स्थानिय प्रशासन तथा प्रदेश समन्य शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको सुरक्षा तथा समन्वय शाखा प्रमुख, शाखा अधिकृतहरु बाट प्राप्त निर्देशनको पालना गर्ने तथा आफू लाई जिम्मा दिएको कामको कार्यान्यिन गर्ने हो। उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ। मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६" ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरु तत्काल सोही शाखामा रहेको सम्बन्धमा मलाई केही थाहा छैन। म तत्काल कार्यरत शाखाको चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदनहरु मध्ये कुन अधिकारीक प्रतिवेदन हो सो म छुट्याउन सक्दिन। बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन फरक फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक फरक तयार गरे गराएको बिषयमा मलाई कुनै जानकारी छैन भन्ने ब्यहोराको धन कृष्ण पाण्डेको कागज।

५१) **गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा सिंहदरवारको शाखा अधिकृत पदमा कार्यरत रहि हाल जुगल गा.पा.सिन्धुपाल्चोकको प्रमुख प्रशासकिय अधिकृत पदमा कार्यरत नर्बदा घिमिरेको कागजः-**

म २०७६ सालको असार महिना देखी मिति २०७९ भदौ महिना सम्म गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा शाखा अधिकृत पदमा कार्यरत रहेकी थिएँ। मिति २०७९ भदौ देखी गृह मन्त्रालयको शान्ति प्रवर्द्धन शाखामा शाखा अधिकृत पदमा कार्यरत रहेकी थिए। गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तरगत शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको स्थानिय प्रशासन तथा प्रदेश सभा शाखा प्रमुखबाट प्राप्त निर्देशनको पालना गर्ने गराउने तथा आफूलाई जिम्मा दिएको कामको कार्यन्यन गर्ने गराउने हो। उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ काम सम्पन्न भए पश्चात फाईलिङ गरिन्छ, तत्पश्चात कागजातहरु सम्पुर्ण शाखाका कर्मचारीहरुको जिम्मामा रहने गर्दछ। मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित

“भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६” ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरु तत्काल सोही शाखामा रहेको थियो उक्त प्रतिवेदन जिम्मा तोकिएर राख्न लगाएको सम्बन्धमा मलाई केही थाहा छैन। म तत्काल कार्यरत शाखाको चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदनहरु मध्ये कुन अधिकारीक प्रतिवेदन हो सो म छुट्याउन सक्दिन। बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक-फरक तयार गरे गराएको बिषयमा मलाई कुनै जानकारी छैन भन्ने ब्यहोराको नर्बदा घिमिरेको कागज।

५२) **गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा सिंहदरवारको शाखा अधिकृत पदमा कार्यरत रहि हाल अध्यागमन कार्यालय त्रिभुवन अन्तराष्ट्रिय विमानस्थलमा अध्यागमन अधिकृत पदमा कार्यरत शारदा चालिसेको कागज:**

म २०७९ सालको भदौ महिना देखी मिति २०७९।१०।०४ गते सम्म गृह मन्त्रालय, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा शाखा अधिकृत पदमा कार्यरत रहेको थिएँ। सो शाखा गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तर्गत रहेको शाखा हो। सो शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा प्रमुखबाट प्राप्त निर्देशनको पालना गर्ने गराउने तथा आफुलाई जिम्मा दिएको कामको कार्यान्वियन गर्ने गराउने हो। उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ। मिति २०७६।०२।३० गते गृह मन्त्रालयद्वारा गठित “भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल २०७६” ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरुको- कस्को जिम्मामा रहेको थियो सो सम्बन्धमा मलाई केही थाहा छैन। गृह मन्त्रालय स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखा, शरणार्थी मामिला समन्वय सम्बन्धी राष्ट्रिय ईकाईको चलानी चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदनहरु कुन आधिकारी प्रतिवेदन हो सो सम्बन्धमा मलाई थाहा छैन। बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक-फरक तयार गरे/गराएको बिषयमा मलाई कुनै जानकारी छैन भन्ने ब्यहोराको शारदा चालिसेको कागज।

५३) **राज कुमार शाहीको कागज :**

म २०७७ सालको पुस महिना देखी मिति २०७८ सालको असार मसान्त सम्म गृह मन्त्रालयको, स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा कम्प्युटर अपटेटर पदमा कार्यरत रहेको थिए। गृह मन्त्रालयको सुरक्षा तथा समन्वय महाशाखा अन्तर्गत स्थानिय प्रशासन तथा प्रदेश समन्य शाखामा कार्यरत रहँदा मेरो जिम्मेवारी मन्त्रालयको सुरक्षा तथा समन्वय शाखा प्रमुख, शाखा अधिकृतहरु बाट प्राप्त निर्देशनको पालना गर्ने तथा आफू लाई जिम्मा दिएको कामको कार्यान्यिन गर्ने हो। उक्त शाखामा हुने फायल, प्रतिवेदन, चिठ्ठीपत्रहरु सामान्यतया जो जुन कर्मचारीले काम गरेको कागजातहरु हो उसैको जिम्मामा रहेको हुन्छ। मिति २०७६।०२।३० गते गृह

मन्त्रालयद्वारा गठित "भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६" ले पेश गरेको प्रतिवेदन लगायत सो सँग सम्बन्धित फायलहरु कागजातहरु तत्काल सोही शाखामा रहेको सम्बन्धमा मलाई केही थाहा छैन। म तत्काल कार्यरत शाखाको चलानी नं.८४० मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको प्रतिवेदन र गृह मन्त्रालयको सोही शाखाको चलानी नं.८४३ मिति २०८०/०१/२६ गतेको पत्रसाथ प्राप्त हुन आएको मन्त्रीपरिषदबाट फिर्ता भई आएको कार्यदलले पेश गरेको प्रतिवेदनहरु मध्ये कुन अधिकारीक प्रतिवेदन हो सो म छुट्याउन सक्दिन। बालकृष्ण पन्थीको कार्यदलले पेश गरेको प्रतिवेदन फरक-फरक ब्यहोरा र प्रकृतिका २ वटा रहेको र राखेको, सो प्रतिवेदन फेरबदल गरेको वा फरक-फरक तयार गरे/गराएको बिषयमा मलाई कुनै जानकारी छैन भन्ने ब्यहोराको राज कुमार शाहीको कागज।

५४) **मोहोनदत्त अधिकारीको कागज** :

म गृह मन्त्रालयको स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा शाखा अधिकृत पदमा मिति २०७६ साल फागुन महिना देखि मिति २०७८ कात्तिक महिना सम्म कार्यरत रही हाल म प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालय सिंहदरवारमा शाखा अधिकृत पदमा कार्यरत रहेको छु। म गृह मन्त्रालयमा कार्यरत रहँदा मलाई शाखाको जिम्मेवारी अन्तर्गत रहेका सबै कामको जिम्मेवारी त्यहाँ उपस्थित सबै शाखा अधिकृतलाई पर्न जान्थ्यो। शाखामा कार्यरत रहेको समयमा अन्तर्राष्ट्रिय सम्बन्ध, Security Clearance, राजदुतहरुको माथिल्लो प्रशासकहरुसँग भेट, शरणार्थी व्यवस्थापन सम्बन्धी कार्यहरुमा समन्वय गर्ने गरिन्थ्यो। म बसेको शाखामा कुनै पनि फायल, प्रतिवेदन चिठ्ठीपत्रहरु त्यहाँ कार्यरत ना.सु.कम्प्युटर अपरेटर र शाखा अधिकृतको जिम्मामा रहन्थ्यो। २०७६ सालमा पेश भएको भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन को-कसलाई दिइयो, कहाँ राखियो मलाई कुनै जानकारी भएन। म गृह मन्त्रालयमा कार्यरत रहँदा सो सम्बन्धी कुनै टिप्पणी तथा प्रशताव तयार गरी पेश गरेको मलाई याद छैन किनकी मैलै शरणार्थी मामिला भन्दा शाखाका अन्य कार्यहरू जस्तै:अन्तराष्ट्रिय मामिला सम्बन्धी कार्यमा समन्वय गर्ने, कुटनीतिक भेटघाटहरूमा समन्वय गर्ने लगायतका कार्यमा बढी जिम्मेवारी दिइएको थियो। म उक्त शाखामा कार्यरत रहँदा अंग्रेजी शुभकामना तथा भाषण तयार गर्ने, बैदेशिक मामिला, Security Clearance, राजदुतहरुको माथिल्लो प्रशासकहरुसँग भेट लगायतमा समन्वय गर्ने कार्य गर्थे। उक्त शरणार्थी कार्यदल सम्बन्धी कार्यमा मैले कुनै पनि कार्य गरेको थिइन। यसै क्रममा मिति २०७८ सालको कात्तिक तिर मेरो अर्थ मन्त्रालयमा सरुवा भएको थियो। त्यस पछि के- के भयो सो सम्बन्धमा थाहा छैन। हाल पत्र-पत्रिकामा समाचार प्रकाशित हुँदा गृह मन्त्रालय अन्तर्गत नक्कली भुटानी शरणार्थीको फाईल तयार पारी उच्च पदस्थका कर्मचारी समेतको योजनामा संगठित अपराध गरेको भन्ने कुरा सुनी थाहा पाएँ। बालकृष्ण पन्थीको संयोजकत्वमा बनेको कार्यदलले दिएको प्रतिवेदन तोडमोड गर्ने फरक पार्ने कार्यमा मेरो कुनै संलग्नता छैन र को-कसले गरे भन्ने कुरामा पनि मेरो कुनै जानकारी छैन भन्ने ब्यहोराको मोहोदत्त अधिकारीको कागज।

५५) **प्रतिक राईको कागज** :

म गृह मन्त्रालयको स्थानीय प्रशासन तथा प्रदेश समन्वय शाखामा शाखा अधिकृत पदमा मिति २०७६।०५।१८ गते देखि मिति २०७६।११।१४ गते सम्म कार्यरत रही हाल म गृह मन्त्रालय अन्तर्गत जिल्ला प्रशासन कार्यालाय झापामा शाखा अधिकृत पदमा कार्यरत रहेको छु। म गृह मन्त्रालयमा कार्यरत रहँदा मलाई शाखाको जिम्मेवारी अन्तर्गत रहेका सबै कामको जिम्मेवारी त्यहा उपस्थित सबै शाखा अधिकृतलाई पर्न जान्थ्यो। शाखामा कार्यरत रहेको समयमा वाकीटकी, ड्रोन, यात्रा अनुमती, अन्तर्राष्ट्रिय सम्बन्ध, सम्पत्ति शुद्धिकरण,

Security Clearance, राजदुतहरुको माथिल्लो प्रशासकहरुको भेट, शरणार्थी व्यवस्थापन सम्बन्धि कार्यहरु गर्ने गरिन्थ्यो । म बसेको शाखामा कुनै पनि फायल, प्रतिवेदन चिठ्ठी पत्रहरु त्यहाँ कार्यरत ना.सु.कम्प्युटर अपरेटर र शाखा अधिकृतको जिम्मामा रहन्थ्यो । २०७६ सालमा पेश भएको भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन पहिलो चोटी यस शाखामा तत्कालिन शाखा प्रमुख उप-सचिव कृष्ण प्रसाद शर्माले सो स्थानमा रहेका कर्मचारीहरूलाई राख्नको लागी दिने गर्नु भएको थियो तर मलाई हाल प्रष्ट एकिन याद भएन को-कस्लाई राख्न दिए थाहा भएन । म गृह मन्त्रालयमा कार्यरत रहँदा मलाई शाखा प्रमुख कृष्ण प्रसाद शर्माको आदेश बमोजिम मैले मन्त्रीपरिषदमा पेश गर्न टिप्पणी उठाई शाखा प्रमुख कृष्ण प्रसाद शर्मा, सह-सचिव केदारनाथ शर्मा, सचिव प्रेम कुमार राई र गृहमन्त्री राम वहादुर थापाले सही गरी मन्त्रीपरिषदमा पेश भएको थियो । उक्त कार्यदलले दिएको प्रतिवेदनबाट उठाईएका विकल्पहरुलाई प्रस्ताव गरी निर्णय गर्नको लागि मन्त्रीपरिषदमा पठाईएको तर कार्यदलको सक्कल प्रतिवेदन शाखामा नै रहेको थियो । उक्त प्रतिबेदन के-कस्तो थियो भन्ने सम्बन्धमा हाल मलाई याद भएन । यसै क्रममा मिति २०७६।११।१४ गते मेरो गृह मन्त्रालय अन्तर्गतको शान्ती सुरक्षा तथा अपराध नियन्त्रण शाखामा सरुवा भएको थियो । त्यस पछी के-के भयो सो सम्बन्धमा थाहा छैन । हाल पत्र-पत्रिकामा समाचार प्रकाशित हुँदा गृह मन्त्रालय अन्तर्गत नक्कली भुटानी शरणार्थीको फाईल तयार पारी उच्च पदस्थका कर्मचारी समेतको योजनामा सँगठीत अपराध गरेको भन्ने कुरा सुनी थाहा पाए । बालकृष्ण पन्थीको संयोजकत्वमा बनेको कार्यदलले दिएको प्रतिवेदन तोडमोड गर्ने फरक पार्ने कार्यमा मेरो कुनै संलग्नता छैन र को-कस्ले गरे भन्ने कुरा पनि मेरो कुनै जानकारी छैन भन्ने ब्यहोराको प्रतिक राईको कागज ।

५६) **प्रेम कुमार गौतमको कागज:**

म २०६४ साल देखि सशस्त्र प्रहरी बलमा नया भर्ना भई हाल म सहायक हवलदार पदमा रही काम काज गर्दै आईरहेकोमा मलाई गृह मन्त्रालयको मिति २०७७।०७।१६ गतेको पत्र आदेश अनुसार नेपाल हज समितीको सचिवालयमा खटाई पठाईएकोमा उक्त कार्यालय मा गएको थिए । उक्त स्थानमा जाँदा मलाई हज समितको अध्यक्ष शमशेर मियाँले तपाईले आजबाट बा.१ झ.१५८१ नम्बरको सरकारी गाडी चलाउनु भनी चाबी सहित मलाई जिम्मेवारी दिनु भएको थियो । उक्त गाडी शमशेर मियाँले आफै चढनु हुन्थ्यो । कहिले काही निजको आदेशबाट हज समितीका सदस्य तथा निजका परिवारहरू समेत चढ्ने गरेका थिए । निजले उक्त गाडी आफै पनी चलाउने गरेको थिए । निजहरूलाई मैले शमशेर मियाँको आदेश अनुसार उपत्यकाभर चढाई लिई समेत जाने गरेको थिए । उक्त गाडीमा को-कुन पीडित ब्यक्ती चढाए भन्ने सम्बन्धमा मलाई थाहा छैन निजहरूलाई म चिन्दिन । यसै क्रममा मलाई मिति २०७८ सालको जेष्ठ महिनाको अन्तिमतिर उक्त गाडी शमशेर मियाँले तपाईले चलाउने गरेको उक्त गाडी ललितपुर जिल्लामा रहेको नर्बेजियन एम्बेसीको अगाडी रहेको रातो ईट्टाले बनेको ठुलो घरको गेटबाट भित्र तर्फ रहेको रेस्टुरेन्टमा लगी छाडी दिनु भनेकोले मैल उक्त गाडी निजले भनेको स्थानमा लगी छाडी सो होटलका कर्मचारी अमृत नामले चिनिने मोबाईल नम्बर ९८४९१७५४९८ प्रयोग गर्ने ब्यक्तीलाई गाडीको चाबी बुझाई फर्की आएको थिएँ । सो समयमा उक्त रेस्टुरेन्टको संचालक तथा नाम मलाई एकिन थाहा थिएन हाल आएर बुझ्दा उक्त रेस्टुरेन्ट अनुसन्धानको क्रममा पक्राउ परेका प्रतिवादी टंक गुरुङले संचालन गरेको नाम्लो गार्डेन रेस्टुरेन्ट रहेको थाहा पाए । बीचमा अध्यक्ष शमशेर मियाँलाई सम्पर्क गरी कार्यालय आउन पर्छ पर्दैन भनी सोध्दा निजले म यतै छु गाडी बाहिर छ काम परे म बोलाउँला नत्र घर तिर बसीराख्नुस भनेकाले म घरमा नै बसीरहें । त्यसको करिव १ हप्ता पछी शमशेर मियाँको मोबाईल नम्बर

९८५७०२५६९९ बाट मेरो मोबाईल ९८४१०५२०२२ मा फोन गरी तपाईले गाडी छाडेको स्थानमा गई उक्त गाडी लिई आउनु भनेकोले म उक्त स्थानमा गई गाडी चेक गर्दा उक्त गाडीको चेक लाईट बलीरहेको अवस्था देखेको थिए। उक्त गाडीको चाबी सोही गाडीमानै रहेकोले सो गाडी चलाई ल्याएको थिए। उक्त गाडी चलाउँदा मैले कन्डिसनमा छाडेको गाडी बिग्रेको जस्तो, गाडी एक्कासी तात्ने, पिकअप पनी नदिने भएको भएकाले सो कुरा शमशेर मिंयालाई जानकारी गराएकोमा निजले तपाईले हज समितीको अफिसमा जानकारी गर्नु भनेकोले मैले अफिसमा जानकारी गराउँदा मर्मतको लागी कुलेश्वरमा रहेको ग्यारेजमा लानु भनेकोले मैले सो गाडी कुलेश्वरमा रहेको दिप अटो ईन्जिनियरीङ ग्यारेजमा लगी छाडी दिएको थिए। त्यसको १ हप्ता पछाडी ग्यारेजका कर्मचारीले मलाई फोन गरी गाडी तयार भयो तपाई गाडी लिन आउनु भनेकोले उक्त स्थानमा गई गाडी हेर्दा उक्त गाडीको नम्बर प्लेट बा.१ ञ.१५८१ नम्बरको पहेलो रंगको नम्बर प्लेट जडान भएको देखी उक्त गाडीको सेतो नम्बर प्लेट खोई किन नम्बर प्लेट चेन्ज गरेको भनी सोध्दा निजले मलाई यसको खास नम्बर प्लेट पहेंलो हो भनी जानकारी गराएकोले सो कुरा शमशेर मियाँ लगायत अफिसमा रहेका अन्य कर्मचारीहरू समेतलाई जानकारी गराउँदा निजहरूले मलाई त्यसको नम्बर प्लेट पहेंलो नै हो भनेका थिए। उक्त ग्यारेजका कर्मचारीलाई फेरीएको नम्बर प्लेट (बा.१ झ.१५८१) खोई त भन्दा निजले गाडीको पछाडीको सिट मुनी राखी दिएको छु भनी जानकारी गराएकाको उक्त गाडीको सिट मुनी हेर्दा सेतो नम्बर प्लेटको (बा.१ झ.१५८१) प्लेट देखेको थिए। बिधुत प्राधिकरणको नाममा रहेको गाडी हो, उक्त गाडी लिई आउ भनेकोले सो गाडी पहेंलो प्लेटमा नै लिई आई केही समय उक्त प्लेट प्रयोग भएको गाडी २०७८ सालको भदौ महिना सम्म चलाई आएकोमा सो गाडी भदौ महिनाको दोस्रो तेस्रो हप्ता तिर नेपाल प्रहरीका जवान डोल राज पाण्डेले मन्त्रालयबाट खटाईएकोले मैले उक्त गाडी निजलाई जिम्मा लगाई म गृह मन्त्रालय फिर्ता भएको थिए। सो बाहेक अन्य मलाई केही थाहा छैन। मलाई हज समितीमा चालकको रुपमा खटाईएको पत्रको प्रतिलिपी पाना-१ समेत यसै साथ पेश गरेको छु भन्ने ब्यहोराको प्रेम कुमार गौतमको कागज।

**५७) <u>दुर्गा बहादुर रानाको कागज:</u>**

म २०७४ सालदेखी गृह मन्त्रालयमा कार्यरत रहेको थिएँ, पहिले मन्त्रालय सुरक्षा ड्यूटी ग रिहेकोमा पछि २०७७।०९।१६ गते देखि सोही सालको असार महिनासम्म गृह मन्त्रीको सुरक्षा सल्लाहकार इंन्द्रजीत राईको व्यक्तिगत सुरक्षा अधिकृतको रुपमा कार्यरत रहेको थिएँ। प्रतिवादीहरु सानु भण्डारी, केशव प्रसाद दुलाल र टोप महादुर रायमाझी ईन्द्रजीत राईको कार्यकक्षमा बारम्बार आइरहने मानिसहरु भएकोले निजहरुलाई म चिन्छु, यस बाहेक अन्य प्रतिवादीहरुलाई चिन्दिन। निजहरु, इन्द्रजीत राईको कार्यकक्षमा बारम्बार आइरहने भएतापनि कार्यकल भित्र दिजहरको के के कुरा हुन्थ्यो भन्ने मलाई थाहा छैन। २०७७ सालको साउन भदौ महिनातिर एक पटक सानु भण्डारी, शव प्रसाद दुलाल र टोपबहादुर रायमाझी ईन्द्रजीत राईको कार्यकक्षमा भएकै समयमा निजहरुवीच विवाद भई हा हालसम्मको अवस्था हुँदा म समेत गई छुट्याएर सानु भण्डारी, केशव प्रसाद दुलाल र टोप बहादुर रायमाझीलाई इंन्द्रजीत राईको कार्यकक्ष बाहिर लगेको हो तर निजहरुको के विषयमा विवाद भएको हो भन्ने मलाई तत्काल थाहा भएन। त्यतिबेला मलाई ईन्द्र जीत राईले अबदेखि यीनीहरुलाई भित्र पस्न नदिनु भन्ने आदेश दिएका थिए। हाल बुझ्दा सो बखत निजहरुबीच जाहेरवालाहरु समेतका नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका लैजाने भनी जाहेरवालाहरु समेतबाट लिएको रकमको सम्बन्धमा बिबाद भएको रहेछ, सो बाहेक जाहेरवालाहरु समेतका नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका लैजाने भनी जाहेरवालाहरु समेतबाट प्रतिवादीहरुले रकम लिई खाई ठगी

गरेको सम्बन्धमा हालसालै पत्र पत्रिकामा समाचारहरु पढेर थाहा पाएको हुँ । यस बाहेक अन्य केही छैन भन्ने ब्यहोराको दुर्गा बहादु रानाको कागज ।

५८) **अम्बिका राईले गरेको घटना विवरण कागज :**

गजेन्द्र बुढाथोकी समेतको जाहेरीले बादी नेपाल सरकार प्रतिवादी केशव प्रसाद दुलाल समेत भएको संगठित तथा ठगी सम्बन्धी कसुर मुद्दाको अनुसन्धानको क्रममा जाहेरी दरखास्तको व्यहोरा पढिवाचि सुनाउदा सुनि पाएँ । हाल पक्राउमा परी अनुसन्धानको क्रममा हिरासतमा रहेको प्रतिवादी ईन्द्रजित राई मेरो फुपाजु नाताका ब्यक्ती हुनुहुन्छ । ललितपुर जिल्लामा दर्ता कायम रहेको कि.नं.०-८-१-० को जग्गा मेरो नाममा र ऐ.जिल्लामा रहेको कि.नं.०-७-१-० को जग्गा मेरो छोरी नबिना राईको नाममा दर्ता कायम रहेको थियो । हाल छोरी U.K.मा गएकी छिन । मेरो फुपाजु ईन्द्रजितले राईले तिम्रो जग्गा मलाई बिक्री गर भनेकोले मलाई पैसाको खाँचो परेको हुँदा ललितपुर जिल्लामा रहेको मेरो नाममा दर्ता कायम रहेको कि.नं.०-८-१-० को जग्गा र मेरो छोरी नबिना राईको नाममा ललितपुर जिल्लामा दर्ता कायम रहेको कि.नं.०-७-१-० को जग्गा छोरीबाट मन्जुरी लिई दुईवटा जग्गाको मूल्य रु.७७,०००००।-(सतहत्तर लाख) कायम गरी ईन्द्रजित राईको श्रीमती भुवन देवी राईको नाममा नामसारी गरीएको थिएँ । के-कुन मितिमा नामसारी गरेको भन्ने सम्बन्ध यकिन मिति मलाई याद भएन । निजहरू मेरो आफन्तका ब्यक्ती भएकोले निज ईन्द्रजित राईले बिभिन्न मितिमा मलाई पटक-पटक गरी रु.५,००,०००।-(पाँच लाख), रु.१०,००,०००।-(दश लाख) समेत गरी हाल सम्म रु.६२,००,०००।-(बैईसठ्ठी लाख) जति नगद दिएको थियो । अझै निजबाट मैले रु.१५,००,०००।-(पन्ध्र लाख) लिनु छ । निजलाई जग्गा बिक्री गर्दा निजले मलाई नगद रुपैया दिएकोमा उक्त रकम निजले के-कहाँबाट के-कसरी ल्याई मलाई दिए त्यस सम्बन्धमा मलाई कुनै जानकारी छैन । आफुले जग्गा बिक्री गरेको रकम निजबाट मैले लिएको हो भन्ने ब्यहोराको अम्बिका राईको कागज ।

५९) **गौतम गिरीको कागज :**

आज भन्दा ६ बर्ष पहिले देखी म जिल्ला ललितपुर स्थित खुमलटारमा रहेको निसान प्रा.लि.अटो सेन्टरमा गाडी मर्मतको कामकाज गर्दै आईरहेको छु । उक्त स्थानमा मेरो गाउ घर तिरको चिनजानको आकाश रेग्मी भन्ने राम कुमार रेग्मीले आफ्नो रातो रंगको गाडी लिई आई सर्भिस गराई लिई जाने गर्नु हुन्थ्यो । निजले म सँग कुराकानी गर्दा आफुले नेपाली नागरीकहरूलाई केही रकममा अमेरीका पठाईदिने काम समेत गर्छु भनी मलाई समेत बताएको थिए। त्यसै क्रममा आकाश रेग्मी भन्ने राम कुमार रेग्मीले मलाई भाई अमेरीका जाने मानिसहरूको बायोमेट्रीकको काम चितवनमा हुन्छ मेरो ड्राईभर पनि छैन, मेरो गाडी तिमीले लिई हिंड, तिम्रो पनि बायोमेट्रिकको काम गर्नु पर्छ भनेको हुँदा हुन्छ भनी निजको सल्लाह बमोजिम २०७८ सालको जेष्ठ महिनाको चौथो हप्ताको २६/२८ गते तिर आकाश रेग्मी भन्ने राम कुमार रेग्मीको घरमा रहेको बा.१ झ.१५८१ सेतो नम्बर प्लेट भएको निसान लेखिएको पट्रोल गाडी चलाई सो मा आकाश रेग्मी भन्ने राम कुमार रेग्मी, राजेश अर्याल यकिन नाम थाहा नभएको महिला कर्मचारी समेत सवार भई सो दिन चितवनको सौराहा पुगी होटल भिजन सफारीमा बास बस्यौ । सो को भोली पल्ट उक्त स्थाममा अन्य ६०।७० जना मानिसहरू पनि बायोमेट्रिकको काम गर्न आएका थिए । गृह मन्त्रालयले पठाएको भनी शरणार्थी लेखेको कागजमा साँझको समयमा औठा छाप लगाएको र बिहान समयमा ल्यापटपको क्यामेराबाट फोटो खिची राखेको थिए । निजहरुले बायोमेट्रिक काम पुरा गरी निजहरूबाट नगद लाख/लाखको बण्डल भएको रकमहरू बुझेका थिए, त्यसको प्रत्यक्षदर्शी समेत हुँ । आफु पनि अमेरीका जाने सोच बनाई उक्त दिन राम कुमार रेग्मीको सल्लाह बमोजिम मेरो

पनि बायोमेट्रीक काम पुरा गरी सो मा लाग्ने खर्च राजेश अर्याललाई दिनु भनी राम कुमार रेग्मीले बताए पछी मैले निज राजेश अर्यालको ज्योती बिकास बैकमा रहेको बैंक खातामा ०९९११३००२७९४५५००००१ मा मोबाईल बैकिङ मार्फत रु.२,०००००।–(दुई लाख) र नगद रु.१,००,०००।–(एक लाख) राजेश अर्यालयलाई दिएको थिएँ। निजले मेरो पनि आँखा चेक गर्ने, फोटो टाँस गर्ने, औंठा छाप लिने लगायतको कार्य गरेका थिए। उक्त स्थानमा बायोमेट्रिकको काम गर्न आएका अन्य पीडित ब्यक्तीसँग समेत बायोमेट्रिकको काम गरी निजहरूबाट नगद पैसा उठाई उक्त पैसा सोही स्थानमा निज आकाश रेग्मी भन्ने राम कुमार रेग्मी मार्फत सन्देश शर्मालाई बुझाएकोमा निजले उक्त रकम प्लाष्ट्रिकको सेतो २ वटा बोरामा राखिरहेको मेलै देखेको थिएँ। म काम बिशेषले काठमाण्डौ आउनु पर्ने भएकोले निज राम कुमार रेग्मीलाई म जान्छु भन्दा निजले मेरो साथी सन्देश शर्माको कालो रङगको गाडी लिई गई मेरो घरमा छाडी दिनु भनेको हुँदा मैले हुन्छ भनी उक्त गाडी लिई आउन खोज्दा सन्देश शर्माले मलाई बा.१ झ.१५८१ सेतो नम्बरको गाडीको पछाडी प्लाष्टिकको सेतो बोरा राख भनेको हुँदा १ बोरा मैले उचाली सो गाडीमा राखे भने अर्को १ बोरा निजको चालक नाम थाहा नभएको ब्यक्तिले राखे पछी मैले चलाई लगेको सरकारी नम्बर प्लेटको सेतो गाडी सोही स्थानमा छाडी म उक्त स्थानबाट सन्देश शर्माको कालो रङको गाडी चलाई काठमाण्डौ आई सन्देश शर्माको चालकलाई पुल्चोकमा भेटी उक्त गाडी जिम्मा लगाई पठाएको थिएँ। अनुसन्धानको क्रममा दाखिला भएको BBA1405 नम्बरको ईम्बोस नम्बर प्रयोग भएको गाडी र मैले चितवनको सौराहा स्थित होटल भिजन सफारी सम्म लिई गएको बा.१ झ.१५८१ नम्बरको सरकारी सेतो रङको गाडी एकै गाडी हुन, उक्त गाडी हेरी, चिनी सनाखत समेत गरी दिएँ भन्ने ब्यहोराको गौतम गिरीको कागज।

६०) **राजु भण्डारीको कागज**:

प्रतिवादी सानु भण्डारी मेरो सहोदर भाई नाताका मानिस हुन । प्रतिवादी केशव प्रशाद दुलालसँग मेरो काठमाण्डौमा ४/५ वर्ष अगाडी चिनजान भएको हो । भाई सानु भण्डारी समेतले जाहेरवालाहरु तथा जाहेरवालाका चिनजानका मानिसहरुलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरीकामा पठाईदिन्छौ, हामीले उच्च अधिकारीहरुलाई चिनेका छौं, यस्तो अफर आई रहँदैन, मौकाको फाईदा लिनुहोस भनी विश्वास दिलाई जाहेरवालाहरुले चलाउने गरेको WhatsApp मा सन्देस शर्माले श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धि समाचारको फोटो पठाउने जस्ता कार्यहरु गरी जाहेरवालाहरुलाई बिश्वास दिलाई रकम लिई ठगी गरेको भन्ने घटना सम्बन्धमा भाई सानु भण्डारी पक्राउ परे पश्चात थाहा भएको हो। मेरो आजभन्दा करिव २५ दिन अगाडी बौद्ध बस्ने अं.वर्ष ६५ का आङटावा शेर्पासँग साथी भाईहरु मार्फत काठमाण्डौ जिल्ला बागबजार स्थित एक चिया पसलमा सामान्य चिनजान भएको थियो । चिनजानकै क्रममा निजले मलाई तपाई सानु भण्डारीको दाजु हुनुहुन्छ भनी सोधेका थिए । मैले निजलाई आफु सानु भण्डारीको सहोदर दाजु भएको जानकारी गराएको थिए। कुराकानी कै क्रममा निजले मेरो नागरिकताको फोटो खिची तथा मेरो नम्बर समेत मागी लगेका थिए र निजको नामको सभासद Member of Constitution Elected मा.आङटावा शेर्पा संविधान सभा सदस्य लेखिएको भिजिट कार्ड समेत दिएका थिए। उक्त कार्ड यसै कागजसाथ पेश गरेको छु। यस्तै क्रममा पुन:दोश्रो पटक करिब आजभन्दा १९/२० दिन अगाडी निज आङटावा शेर्पाले मलाई फोन गरी म तपाईलाई पुर्व गृहमन्त्री बालकृष्ण खाँणको पि.ए.नरेन्द्र के.सी.सँग भेट गराउँछु भनी बरन्डा क्याफे एण्ड रेस्टुरेन्ट नाम गरेको बहिरा बहिरीहरुले संचालन गरेको काठमाण्डौको चुच्चेपाटी स्थित रहेको होटलमा भेट गर्न

बोलाएका थिए। म उक्त होटलमा अं.११/१२ बजेको समयमा जाँदा निजले मलाई उक्त होटलमा बस्न लगाई आफुले बाल कृष्ण खाँणको पि.ए.नरेन्द्र के.सी.बोलाएर ल्याउछु भनी करिब २ घण्टाजति सोही होटलमा कुर्न लगाएका थिए। होटलमा कुर्ने क्रममा मलाई एक नयाँ नम्बरबाट फोन गरी म बालकृष्ण खाँण ज्युको पि.ए.नरेन्द्र के.सी.बोलेको हुँ। तपाईसँग आङटावा शेर्पाले कुराकानी गर्नु भएको रहेछ म तपाईसँग भेट गर्न चाहन्छु। मेसो मिलाएर घरमा भेटौन भनी कुराकानी गरेका थिए। त्यस पश्चात पनि आङटावा शेर्पा होटलमा नआएको हुँदा म उक्त स्थानबाट समय यकिन भएन दिउसोको अं.०२;०० बजेको समयमा आफ्नो घर फर्किएको थिएँ। आङटावा शेर्पाले प्रयोग गर्ने ९८५१०६२०८९ नं. बाट मेरो नम्बर ९८६१३३७१७१ नम्बरमा फोन गरी उक्त होटलमा भेट गर्न बोलाएका थिए। नरेन्द्र के.सी.ले मलाई फोन गरेको नम्बर मैले मोबाईलमा सेभ नगरेको हुँदा हाल उक्त मोबाईल नम्बर याद भएन। उक्त होटलमा बस्दा आङटावा शेर्पाले तपाईको भाई सानु भण्डारी प्रतिवादी भएको मुद्दाको सम्बन्धमा केही कुराहरु मिलाउनु पर्नेछ, सोही कारण नरेन्द्र के.सी.सँग भेट गराउन लागेको भनी जानकारी गराएका थिए। निजले मलाई उक्त होटलमा कुर्न लगाएर आफु नआई निजले फोन गरेर मलाई एउटा घरमा जानुपर्छ भनी गोप्य ठाउँहरुमा भेट्न बोलाएको हुँदा मैले निजको कुरा इन्कार गरी आफुले कुनै घरमा गई नभेट्ने भेट्ने भए यहि होटलमा आउनु नत्र म भेट्दिन भनी निजलाई जानकारी गराई म उक्त चुच्चेपाटी स्थित रहेको होटलबाट निस्केको थिए। मलाई भाईसँग केही कुराहरु मिलाउनु पर्ने छ भनी जानकारी गराई पुर्व गृहमन्त्री बालकृष्ण खाँणको पिए नरेन्द्र के.सी.सँग भेट गराउँछु भनी जानकारी गराउने तथा पकट पटक फोन सम्पर्क गर्ने आङतावा शेर्पासँग सोधपुछ गरी अनुसन्धान गरी पाउँ। जाहेरवाला लगायतका अन्य निजका आफन्तहरुलाई भुटानी शरणार्थी बनाई भुटानी शरणार्थीहरुको रुपमा अमेरिकामा पठाई दिन्छौं भनी ठगी गर्ने कार्यमा संलग्नत व्यक्तिहरुलाई कानुन बमोजिम गरीयोस भन्ने ब्यहोराको राजु भण्डारीको कागज।

६१) **गणेश भण्डारीको कागज**:

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ, सागर राई समेतका ब्यक्तिहरुलाई म चिनजान छैन, गजेन्द्र बुढाथोकी समेतको जाहेरी दरखास्त लगाएतको कागजातहरू पढीबाची सुनी ब्यहोरा अबगत भयो। म बिगत १७ बर्ष देखी तुल्लसीपुर जिल्ला गणेश सप्लायर्स नामको खाद्यान्न पसल संचालन गर्दै आईरहेको थिए। यसै क्रममा मेरो नजिकको आफन्तहरुले मलाई २०७७ सालको चैत महिना तिर भाई हामीहरू अमेरीका जाने प्रकृयामा रहेका छौ। अमेरीका लैजान मानिसहरुले रकम माग गरेको छ। हामीहरू सँग कुनै रकम पठाउने बैक खाताहरू छैन तिमीले बैकिङ प्रणाली मार्फत रकम पठाई दिई सहयोग गर भनेकोले हुन्छ भनी मेरो आफ्नत खेम राज पौडेल कमल बिष्ट, माधब के.सी., देव बहादुर के.सी. भरत के.सी., दोर्ण अधिकारी, बिरेन्द्र बहादुर ओली समेतले मलाई जनही ५/५/ (पाँच लाख) दिएकोमा निजहरूले भनेको व्यक्ती गजेन्द्र बुढाथोकीसँग सम्पर्क गरी सो सम्बन्धमा बुझ्दा निज गजेन्द्रले हामीहरूले अमेरीका पठाउने कार्य गर्दै छौ तिमीलाई तिम्रो आफन्तले दिएको रकम मेरो साथी राजेश अर्यालको नाममा हाली दिनु भनेकोले मैले आफ्नो नामबाट राजेश अर्यालको नाममा ज्योती बिकास बैकमा रहेको खाता नम्बर ०९९११३००२७९४५५००००००९ मा मिति २०७७।१२।१२ गते रु.१५,०००००(पन्ध्र लाख) र राजेश अर्यालको नाममा नबिल बैकमा रहेको खाता नम्बर ३७१००१७५०७८४३ नम्बरको खातामा सन २०२१-३-२५ मा रु.२५,०००००(पच्चिस लाख) रकम जम्मा गरी दिएको थिए। त्यसको केही समय पछी निज गजेन्द्र बुढाथोकीले मलाई निजको घरमा भेट्न बोलाएको निजलाई भेट्न गई मैले राजेश अर्यालयको नाममा जम्मा गरीदिएको सक्कल भौचर पाना २ निजलाई भेटी दिई सो स्थानबाट फर्की आएको थिए। त्यही दिन देखी

निजलाई मैले चिनेको हुँ । मेरो आफन्तहरुले मलाई दिएको रकम मैले गजेन्द्र बुढाथोकी मार्फत राजेश अर्यालको नाममा जम्मा गरी दिएको हुँ । पछी बुझ्दा गजेन्द्र बुढाथोकी मार्फत रकम जम्मा गरी दिएको राजेश अर्याल समेतले मेरो आफन्तहरूलाई भुटानी शरणार्थीमा अमेरीका पठाई दिन्छु भनी बिश्वास दिलाई ठगी गरेकोमा निज गजेन्द्र बुढाथोकीले सो कुराहरू उल्लेख गरी जिल्ला प्रहरी परिसर काठमाण्डौ ठगी सम्बन्धी कसुरमा मुद्धा दिएकोमा हाल उक्त घटनामा संलग्न ब्यक्तीहरूलाई प्रहरी पक्राउ गरी अनुसन्धान गरि रहेको छ भन्ने सुनी थाहा पाएको थिए । मैले गजेन्द्र बुढाथोकी मार्फत राजेश अर्यालको नाममा जम्मा गरी दिएको रकम माथी उल्लेखित नाम भएको मेरो आफ्नतहरुको रकम हो । उक्त रकम समेत निज प्रतिवादी राजेश अर्याल समेत मिली ठगी गरेकोले सो सम्बन्धमा प्रतिवादीहरुबाट सम्बन्धीत पीडित ब्यक्तीहरूलाई दिलाई भराई नक्कली कागजातहरू तयार गरी अमेरीका पठाई दिन्छु भनी ठगी गर्ने मानिसहरूलाई कानून बमोजिम कारवाही होस भन्ने ब्यहोराको गणेश भण्डारीको कागज ।

६२) **झप्पड बहादुर खत्रीको कागज**:

म २०५८ साल देखी साना तथा ठुला सवारी साधान चलाउदै आईहेको छु । आज भन्दा ५ बर्ष पहिले मैले जिल्ला काठमाण्डौ स्थित हाडीगाउऊमा रहेको एक्टिभ हिमालयन टुर्सप्रा.लि.को गाडी चलाउदै आईरहेको थिए। सन्देश शर्माले हाम्रो अफिसमा गाडी बुक गरेकोले अफिसको आदेशले निज सन्देश शर्मा भन्ने ब्यक्तीलाई ललितपुर स्थित पाटन अस्पतालमा भेटी निजलाई हाम्रो अफिसको गाडीमा चढाई बुटवल तर्फ गएको थिए, करिब ५ दिन बसी फर्किएको हो । यसै गरी निजलाई पटक-पटक मैले गाडीमा चढाई कहिले बुटवल कहिले काठमाण्डौ समेत ल्याउने गरेकोमा निज सन्देश शर्मासँग मेरो राम्रो चिनजान परिचय समेत भएको थियो । निजसँग कुराकानी गर्दा निजले मलाई आफु पुनरबासको हाकिम रहेको तिमीलाई पनि जग्गा दिलाई दिन सक्छु केही रकम दिन सक्छौ भनी बताएकोले मैले निजको कुरामा विश्वास गरी मेरो लक्ष्मी बैक लि.को खाता नं.०६६००५००६५६८८ बाट निजको मेगा बैंक खातामा रु.७,५०,०००।- (सात लाख पचास हजार) सन २०२० जनवरी २६ तारेखमा जम्मा गरी दिएको थिए । मिति २०७८ सालको जेष्ठ महिनाको २४ /२५ गतेको बिहान तिर मलाई सन्देश शर्माले फोन गरी तिमी गाडी लिएर चितवन जानु पर्ने भयो काहा छौ ललितपुर हिमालयन होटल भन्दा अली अगाडी रहेको एम्बेसी नजिक रिसोर्टमा आउ भनेको हुँदा उक्त स्थानमा म गएको र सन्देश शर्मा बसि रहेका थिए । निजलाई मैले भेट्दा तिमिले ललितपुर स्थित टोप बहादुर रायामाझी दाईको घरबाट गाडी लिई आउनु भनी मलाई मोटरसाईकलमा चढाई पठाएको र मैले ललितपुर स्थित सातदोबाटोबाट १ कि.मी.भित्र रहेको रातो रङ्गको साढे २ तलाको घर अगाडी छाडि दिएको र सो घरबाट १ जना पुरुष ब्यक्ती आई मलाई मैले गाडीको चाबी माग्दा निजले मलाई सो स्थानमा रहेको कालो रंगको निशान कम्पनीको गाडीको चाबी दिई पठाएकोले उक्त गाडी लिई पुन:सन्देश शर्मा भएको स्थानमा आएको थिए । उक्त गाडीको नम्बर प्लेट मैले यकिन याद गरिन । सो रिसोर्टबाट सन्देश शर्मा चढी कार्टुनको बक्सामा सामान समेत राखी गाडी लिई गएकोमा ललितपुर स्थित कुमारी पाटीमा आई पुग्दा सन्देश शर्माको साथी हरी महर्जन भन्ने ब्यक्ती र निजको साथी तामाङ्ग थरको मानिस समेत सो गाडीमा चढी सन्देस शर्मा चाही भरे म प्लेनबाट आउछु भनी उक्त गाडीबाट झरेकोले मैले ति २ जनालाई चितवनको सौराहामा रहेको होटल भिजन सफारीमा अं.१३:०० बजेको समयमा पुगी सो होटलमा बसेका थियौ । सो को भोली पल्ट बिहान उक्त होटलमा सन्देश शर्मा पनि आई सकेको रहेछन मैले निजलाई देखी कति खेर आउनु भो भन्दा निजले भखरै आएको भनी बताएको थिए । उक्त स्थानमा बायोमेट्रिक्सको काम गर्न भनी ४०/५० जना मानिसहरू समेत आएका रहेछन । निजहरूको

बायोमेट्रिक्सको काम सरकारी कर्मचारी भनी बताउने हरी महर्जन, निजको तामाङ्ग थरको साथी र सन्देश शर्मा समेतले सरकारी लुगा (सेतो सट निलो पाईन्ट) लगाई घाटीमा गृह मन्त्रालय लेखिएको कार्ड समेत लगाई बायोमेट्रिक्स गर्ने फोटो खिच्ने काम गरी रहेका थिए। निजहरुसँग नगद रुपैया संकलन गरी सोही स्थानमा रहेको सेतो बोरामा राखिरहेका थिए। त्यसै गरी निजहरूले अन्य मानिसहरुलाई पनि तीन दिन सम्म बायोमेट्रिक्स, फोटो खिच्ने काम रातको २२:०० बजेको समयसम्म गर्ने गरेको थिए। त्यसैक्रममा २०७८ जेष्ठको २८/२९ गते बिहान म, हरी महर्जन र निजको साथी समेत चितवनको भाटभटेनीमा गई २ वटा सुर्केस खरिद गरी सो स्थानमा आई ऐ.मिति को अं.११:०० बजे तिर सन्देश शर्माले मलाई गाडी लिई काठमाण्डौ जानु पर्छ अब तयार हौ भनेकोले आफु तयार हुँदा मैले लिई गएको कालो रङको गाडी गौतम गिरीले चलाई काठमाण्डौसम्म लिई जान्छ तिमीले सरकारी गाडी लिई जाने सामान गाडीमा राख भनेकोले सो स्थानमा रहेको सेतो बोरामा रहेको पैसाको बोरा म र हरी महर्जनले उचाली हालेकोर अर्को झोला गौतम गिरीले राखे पछी उक्त स्थानमबाट गौतम गिरीले कालो गाडी चलाई गए। मैले सेतो रङको बा.१ झ.५८१ नम्बरको सरकारी गाडी चलाई हेटौडा हुँदै काठमाण्डौसम्म आएका थियौ। काठमाण्डौ आईपुगे पछी चोभार हुदै हामी जाउलाखेल निस्की ललितपुर स्थित महालक्ष्मीस्थानमा उक्त पैसाको बोरा र सुर्केश थान २ समेत झारी उक्त पैसाको बोरा र सुर्केश हरी महर्जन र निजको तामाङ्ग थरको साथीले लिई के-कहाँ गए मलाई थाहा भएन। म उक्त स्थानबाट ललितपुर स्थित एम्बेसी अगाडी रहेको रिसोर्टमा गाडी लगी पार्कीङ गरी चाबी होटलकै कर्मचारीलाई जिम्मा लगाई दिए। उक्त स्थानबाट मोटरसाईकल चढी कोटेश्वर पुगी गौतम गिरीलाई भेटी निजलाई ठिमीमा छोडी म चाही सोही कालो गाडि लिई फेरी चितवनमा रहेको होटल भिजन सफारीमा पुगी बसे। सो को भोली पल्ट सो स्थानबाट सन्देश शर्मा र आकाश रेग्मीलाई उक्त गाडीमा चढाई हामीहरू पोखरा पुगी बस बस्यौ। २ दिन सम्म पोखरामा बसी ३ दिनको दिन हामीहरु तीनै जना काठमाण्डौ फर्की आयौ। आकाश रेग्मीलाई निजको घर ठिमीमा लगी छाडी सन्देश शर्मालाई ललितपुरमा रहेको एम्बेसी नजिकको रिसोर्टमा लगी छाडेकोमा सो स्थानबाट मलाई टंक गुरूङले सोही गाडीमा चढाई कपनसम्म लगी छाडी दिएका हुन। त्यसको केही महिना पछी पुन:१ पटक कालो रङको होण्डा कम्पनीको क्रेटा कम्पनी गाडी पहिलेको रिसोर्टबाट चलाई सौराहामा गएको थिए। निज सन्देश शर्मा, टंक गुरुङ, हरी महर्जन र निजको साथी समेत आएका थिए। त्यसको ३ दिन पछी सो स्थानमा अन्य मानिसहरूको बायोमेट्रिक्स, फोटो खिच्ने काम गरी हामीहरू सबै जना गाडीमा चढी हेटौडा हुँदै काठमाण्डौ फर्की आएका थियौ। उक्त गाडीमा रकम हाले नहालेको मलाई थाहा भएन। मिति २०७८ सालको जेष्ठ महिनाको २८/२९ गते चितवनबाटबा.१ झ.१५८१ नम्बरको सरकारी गाडीको पछाडी सिटमा सेतो बोरामा रकम राखि मैले चलाई ल्याएको गाडी र अनुसन्धानको क्रममा दाखिला भएको BAB 1405 नम्बर गाडी एकै हुन उक्त गाडी समेत देखाउँदा देखी पाएँ। मलाई चितवन लैजाने, मैले चलाएको गाडीमा बसि जाने, कुराकानी गर्ने सन्देश शर्मा र टंक गुरुङ हाल प्रहरी हिरासतमा रहेका सन्देश शर्मा र टंक गुरुङ नै हुन निजहरूलाई चिन्ही सनाखत समेत गरी दिई भन्ने ब्यहोराको झप्पड बहादुर खत्रीको कागज।

६३) **<u>धर्मराज शाहीको कागज</u>**:

म २०६१ सालमा प्रहरी सहायक निरीक्षक पदमा भर्ना भई हाल म सुरक्षा सेवा ब्यवस्थापन निर्देशनालय नक्साल काठमाण्डौमा प्रहरी बरिष्ठ नायव निरीक्षक पदमा कार्यरत रहेको छु। गृह मन्त्रालयमा सचिव टेक नारायण पाण्डे नियुक्ती भए पश्चाल मलाई प्रहरी प्रधान कार्यालयको आदेश अनुसार निज गृह सचिव टेक नारायण पाण्डेको ब्यक्तिगत सुरक्षार्थमा खटाईएकोमा म सोही दिन देखी निजको ब्यक्तिगत सुरक्षाकर्मीको रुपमा

खटिएको थिएँ। निज गृह मन्त्रालयमा गृह सचिव पदमा रहुन्जेल निजको ब्यक्तीगत सुरक्षा दिने मेरो मुख्य जिम्मेवारी रहेकोले निजलाई मैले सुरक्षा दिंदै आएको थिएँ। निज र मेरो कहिले काँही मन्त्रालय भित्र निजकै कार्यकक्षमा घरायसी कुराकानी पनि हुने गर्दथ्यो। त्यसै क्रममा तत्कालिन गृह सचिव टेक नारायण पाण्डेले मलाई बिभिन्न मितिमा निजको कार्यकक्षमा बोलाई आफु केही ब्यस्त भएकोले तपाईले मेरोब्यक्तीगत बैंक खातामा रकम जम्मा गरी आउनु भनी पठाउने गर्नु भएकोले गृह सचिबको आदेश बमोजिम निजले भने अनुसारको निजको बिभिन्न बैंक खाताहरूमा बिभिन्न मितिमा मेरो नामबाट सम्बन्धित बैंकहरुमा गई रकम जम्मा गरी दिई उक्त रकम जम्मा गरेको भौचर निजलाई भेटी दिने गरेको थिए। निजलाई हाल सम्म मैले पठाएको रकमहरूको एक मुष्ट बिवरण याद भएन मलाई थाहा भए सम्मको बैंक दाखिला गरेको बिवरण तपशील बमोजिम रहेको छ। निजले मलाई गृह मन्त्रालय अन्तरगत निज कार्यकक्षबाट भेटी नगद रुपैया दिई पठाउने भएकोले उक्त रकम के कहाँबाट निजले कसरी प्राप्त गरे भन्ने सम्बन्धमा मलाई कुनै जानकारी छैन। म गृह सचिव टेक नारायण पाण्डेको ब्यक्तिगत सुरक्षामा खटीदा एकिन मिति याद भएन निजले मलाई केशब प्रशाद दुलाल मलाई भेट्न आउनु हुन्छ निजलाई भित्र पठाई दिनु भनी जानकारी गराएकोले उक्त दिन निज मन्त्रालयमा आए नआएको कुरा बाहिर बस्ने कर्मचारीहरूलाई सोध्दा निजहरुले मलाई केशब प्रसाद दुलाल हाल सम्म आएको छैन भनी जानकारी गराएकोले सो कुरा मैले गृह सचिव टेक नारायण पाण्डेलाई जानकारी गराएको थिए। निज केशब प्रसाद दुलाल मन्त्रालयमा गृह सचिव टेक नारायण पाण्डेलाई बेला-बेला भेट्न आउने जाने गर्नु हुन्थ्यो भन्ने कुरा सुनेको थिए। मैले सानु भण्डारी, सन्दिप शर्मा समेतलाई देखेको चिनेको छैन। गैरभुटानी शरणार्थीहरुलाई भुटानी शरणार्थी बनाई तेश्रो मुलुक पठाउने कार्यमा गृह सचिव रहेका टेक नारायण पाण्डको के-कस्तो भूमिका रहेको छ भन्ने सम्बन्धमा मलाई केही जानकारी छैन। टेक नारायण पाण्डेको सम्बन्धमा हाल पत्र-पत्रिकामा समाचारहरू आउँदा सो सम्बन्धमा थाहा पाएको हो। मलाई थाहा जानकारी भए सम्मको मेरो नामबाट निजको नामको बैंक खातामा रकम जम्मा गरेको बिवरण निम्न अनुसार उल्लेख गरी सो को भौचरको प्रतिलिपी समेत यसै साथ पेश गरेको छु। मेरो भए गरेको ब्यहोरा यती नै हो अन्य केही लेखाउनु छैन भन्ने व्यहोराको धर्मराज शाहीको कागज।

**तपशिल:-**

| सि.न | मिति | खातावालाको नाम | बैक खाता नम्बर | जम्मा गरेको रकम |
|---|---|---|---|---|
| १. | २०७८।०८।२२ | टेक नारायण पाण्डे | ००१००१०५००००१८ को कोष प.प.नं.०२४६१३३ एभरेष्ट बैक लि. | रु.२,००,०००।-(दुई लाख) नगद जम्मा गरेको |
| २. | सन २०२१/१२/९ | टेक नारायण पाण्डे | ०२७०४६७२४७००१८ हिमालय बैक लि. | रु.९,४०,६४२।-(नौ लाख चालिस हजार छ सय बयालिस) नगद जम्मा गरेको |
| ३. | २०७८।११।११ | टेक नारायण पाण्डे | ००१००१०५००००१८ को कोष प.प.नं.०२४६१३३ एभरेष्ट बैक लि. | रु.२१,५०,०००।-(एक्काई लाख पचास हजार) नगद जम्मा गरेको |
| ४. | २०७८।११।२३ | टेक नारायण पाण्डे | ००१००१०५००००१८ को कोष प.प.नं.०२४६१३३ एभरेष्ट बैक लि. | रु.५७,४५३.३०।-(सन्ताउन्न हजार चार सय त्रिपन्न रुपैया तिस पैसा) नगद जम्मा गरेको |
| ५. | २०७८।११।२६ | टेक नारायण पाण्डे | ०२७०४६७२४७००१८ हिमालय बैक लि. | रु.१२,०३,८३२.८३।-(बाह्र लाख तिन हजार आठ सय बत्तिस रुपैया तिरासी पैसा) |
| ६. | २०७८।११।२६ | टेक नारायण पाण्डे | ०२७०४६७२४७००१८ हिमालय बैक लि. | रु.१,०५,०००।-(एक लाख पाच हजार मात्र) नगद जम्मा गरेको |
| ७. | २०७८।०८।१५ | टेक नारायण पाण्डे | ००१००१०५००००१८ को कोष प.प.नं.०२४६१३३ एभरेष्ट बैक लि. | रु.४,००,०००।-(चार लाख) मेरो नाममा चेक काटीएकोले उक्त रकम मैले जम्मा गरीएको। |
| ८. | २०७९।२।२३ | टेक नारायण पाण्डे | ००१००१०५००००१८ को कोष प.प.नं.०२४६१३३ | रु.१५,००,०००।-(पन्ध्र लाख) नगद जम्मा गरेको |

| | | | एभरेष्ट बैक लि.को खातामा | |
|---|---|---|---|---|
| ९. | सन २०२१/१२।०५ | टेक नारायण पाण्डे | ००१००५१६२०८२८८ एभरेष्ट बैक लि.मा चेक मार्फत | रु.४,२७,१७०।-(चाल लाख सत्ताईस हजार एक सय सत्तरी) |
| १०. | २०७८।७।२८ | टेक नारायण पाण्डे | ००१००१०५००००१८ को कोष प.प.नं.०२४६१३३ एभरेष्ट बैक लि. | रु.१०,००,०००।-(दश लाख) नगद जम्मा गरेको। |
| ११ | २०७८।८।०२ | टेक नारायण पाण्डे | कोष प.प.नं.०२४६१३३ | रु.४५,०००।-(पैतालिस हजार) नगद जम्मा गरेको। |
| १२ | २०७८।८।०२ | टेक नारायण पाण्डे | कोष प.प.नं.०२४६१३३ | रु.४,५५,०००।-(चार लाख पचपन्न हजार) नगद जम्मा गरेको। |
| १३ | सन २०२२/०७/११ | टेक नारायण पाण्डे | ००१००५१६२०८२८८ एभरेष्ट बैक लि.मा | रु.१०,०००।-(दश हजार) नगद जम्मा गरेको |

६४) **जित बहादुर धिमालको कागज**:

मिति २०७५ सालको माघ महिनाको अन्तिम तिरको समयमा हाम्रो गाँउमा हाम्रो तत्कालिन जिल्ला मोरङ पथरी शनिश्चरे न.पा.वडा नं.१० का वडा अध्यक्ष सागर राई, जिल्ला मोरङ पथरी शनिश्चरे नगरपालिका वडा नं.-१० मुनाल टोल बस्ने केशब दुलाल र जाहेरीमा नाम उल्लेखीत सानु भण्डारी समेत हाम्रो गाउमा आई मलाई समेत भेटी हामी तपाईलाई भुटानी शरणार्थीको परिचय पत्र बनाई दिई तिन महीना भित्रमा अमेरीका पठाई दिन्छौ। उक्त काम गरे बापत तपाइले हामीलाई प्रति व्यक्ती दश लाख रुपैया दिनु पर्छ भनी बताए। निजहरु हाम्रो गाउमा आउँदा पनि सरकारी गाडी नै लिएर आएका थिए। उक्त गाडीको नम्बर मलाई थाहा छैन। मिति २०७६।४।२० गते तिर होला हामीलाई तपाइहरु तुरुन्तै फ्लाईट मार्फत काठमाण्डौ जानु भनी सागर राईले भने पछी म समेत सोही दिन फ्लाईट मार्फत काठमाण्डौ गई एयरपोर्ट नजिक रहेको यूनिक होटलमा बस्यौ। हामी त्यहाँ बसे पछी हाल नम्बर थाहा नभएको सरकारी गाडीमा एक जना एकिन नाम थर वतन थाहा नभएका ल्यापटप बोकेका मानिस, केशब दुलाल र सानु भण्डारी आई निजहरुले ल्याएका फारममा मेरो फोटो टाँसी सही गर्न लगाई ल्याप्चे समेत गर्न लगाए। त्यस पछी मैले दश लाख रुपैया सानु भण्डारी र केशब दुलाललाई दिएको हुँ। त्यस पछी निजहरुले बताएको समयमा म समेतलाई अमेरीका नपठाए पछी बुझ्दै जाँदा निजहरुले गाँउ लेबल देखी गृह मन्त्रालय सम्मको सेटीङमा हामीलाई त्यसरी नक्कली भुटानी शरणार्थी बनाई अमेरीका पठाउन खोजेका रहेछन। निजहरुले त्यसरी पठाउन नसकेपछी मैले सागर राई, केशव दुलाल र सानु भण्डारी सँग रकम फिर्ता माग्दा तिमीले जे गर्न सक्छौ गर भनी बताएको हुँदा हामीलाई ठगी गर्ने मानिसहरुलाई कारवाही गरी क्षतिपुर्ति सहीत बिगो समेत दिलाई पाउँ भन्ने ब्यहोराको जित बहादुर धिमालको कागज।

६५) **बिजय खरेलको कागज**:

२०७५ सालको माघ महिनाको अन्तिम तिरको समयमा हाम्रो गाँउमा जिल्ला मोरङ पथरी शनिश्चरे न.पा.वडा नं. १० मुनाल टोल बस्ने केशब दुलाल र जाहेरीमा नाम उल्लेखीत सानु भण्डारी समेत सानु भण्डारीको अन्तिममा ४४० नम्बर भएको I10 गाडीमा हाम्रो गाउमा आई मलाई समेत भेटी म तपाईलाई भुटानी शरणार्थिको परिचय पत्र बनाई दिई तिन महीना भित्रमा अमेरीका पठाई दिन्छौ भनी प्रलोभनमा पारे। उक्त काम गरे बापत तपाइले हामीलाई प्रति व्यक्ती पच्चिस लाख रुपैया दिनु पर्छ, पहिलो चरणमा १० लाख बुझाउनु पर्छ, हामी खबर गर्छौ काठमाण्डौ आउदा दश लाख लिएर आउनु भनी बताएका थिए। मिति २०७६।४।२० गते तिर होला हामीलाई तपाइहरु तुरुन्तै फ्लाईट मार्फत काठमाण्डौ जानु भनी केशव दुलालले फोन गरी भने पछी म समेत सोहि दिन फ्लाईट मार्फत काठमाण्डौ गई गौसला नजिक रहेको होटल रोज स्टारमा बस्यौ। हामी त्यहाँ

बसे पछी नम्बर थाहा नभएको सरकारी गाडीमा एक जना यकिन नाम थर वतन थाहा नभएका ल्यापटप बोकेका मानिस, केशब दुलाल र सानु भण्डारी आई निजहरुले ल्याएका फारममा मेरो फोटो टाँसी सही गर्न लगाई ल्याप्चे समेत गर्न लगाए । त्यस पछी मेरो तर्फबाट दिनु पर्ने दश लाख रुपैया मेरो ठुलोबुबाको छोरा दाजु जाहेरबाला रोशन खरेलले सानु भण्डारी र केशब दुलालको खातामा हाली दिनु भएको छ । उक्त स्टेटमेन्ट दाजु रोशन खरेरले जाहेरी साथ पेश गरी सक्नु भएको छ । त्यस पछी निजहरुले बताएको समयमा म समेतलाई अमेरीका नपठाए पछी बुझ्दै जाँदा निजहरुले गाँउ लेबल देखी गृह मन्त्रालय सम्मको सेटीङमा हामीलाई त्यसरी नक्कली भुटानी शरणार्थी बनाई अमेरीका पठाउन खोजेका रहेछन । निजहरुले त्यसरी पठाउन नसकेपछी मैले सागर राई, केशब दुलाल र सानु भण्डारी सँग रकम फिर्ता माग्दा तिमिले जे गर्न सक्छौ गर भनी बताएको हुदा म समेतलाई निजहरुले अमेरीका पठाई दिने भनी प्रलोभनमा पारी ठगी गरेको कुरा एकिन थाहा हुन आयो । म समेतलाई ठगी गर्ने मानिसहरु सागर राई, केशब दुलाल र सानु भण्डारी समेतका सेटीङ गर्ने तल देखीका मन्त्रालय सम्मका मानिहरुलाई कानून बमोजिम कारबाही गरी क्षतिपुर्ति सहीत बिगो समेत दिलाई पाउ भन्ने व्यहोराको बिजय खरेलको कागज ।

६६) **आशिष सिटौलाको कागज**:

२०७५ सालको माघ महिनाको अन्तिम तिरको समयमा हाम्रो गाँउमा जिल्ला मोरङ पथरी शनिश्चरे न.पा.वडा नं. १० मुनाल टोल बस्ने केशब दुलाल र जाहेरीमा नाम उल्लेखीत सानु भण्डारी समेत सानु भण्डारीको अन्तिममा ४४० नम्बर भएको I10 गाडीमा हाम्रो गाउमा आई मलाई समेत भेटी म तपाईलाई भुटानी शरणार्थीको परिचय पत्र बनाई दिई तिन महीना भित्रमा अमेरीका पठाई दिन्छौ । उक्त काम गरे बापत तपाईंले हामीलाई प्रति व्यक्ती पच्चिस लाख रुपैया दिनु पर्छ, पहिलो चरणमा १० लाख बुझाउनु पर्छ, हामी खबर गर्छौं काठमाण्डौ आउदा दश लाख लिएर आउनु भनी बताएका थिए । मिति २०७६।४।२० गते तिर होला हामीलाई तपाइहरु तुरुन्तै फ्लाईट मार्फत काठमाण्डौ जानु भनी केशव दुलालले फोन गरी भने पछी म समेत सोहि दिन फ्लाईट मार्फत काठमाण्डौ गई गौसला नजिक रहेको होटल रोज स्टारमा बस्यौ । हामी त्यहाँ बसे पछी नम्बर थाहा नभएको सरकारी गाडीमा एक जना एकिन नाम थर वतन थाहा नभएका ल्यापटब बोकेका मानिस, केशब दुलाल र सानु भण्डारी आई निजहरुले ल्याएका फारममा मेरो फोटो टाँसी सही गर्न लगाई ल्याप्चे समेत गर्न लगाए । त्यस पछी मेरो तर्फबाट दिनु पर्ने दश लाख रुपैया मेरो दाजु जाहेरबाला रोशन खरेलले सानु भण्डारी र केशब दुलालको खातामा हाली दिनु भएको छ । उक्त स्टेटमेन्ट दाजु रोशन खरेरले जाहेरी साथ पेश गरी सक्नु भएको छ । त्यस पछी निजहरुले बताएको समयमा म समेतलाई अमेरीका नपठाए पछी बुझ्दै जाँदा निजहरुले गाँउ लेबल देखी गृह मन्त्रालय सम्मको सेटीङमा हामीलाई त्यसरी नक्कली भुटानी शरणार्थी बनाई अमेरीका पठाउन खोजेका रहेछन । निजहरुले त्यसरी पठाउन नसकेपछी मैले सागर राई , केशब दुलाल र सानु भण्डारी सँग रकम फिर्ता माग्दा तिमिले जे गर्न सक्छौ गर भनी बताएको हुदा म समेतलाई निजहरुले अमेरीका पठाई दिने भनी ठगी गरेको कुरा एकिन थाहा हुन आयो । म समेतलाई ठगी गर्ने मानिसहरुलाई कानून बमोजिम कारबाही गरी क्षतिपुर्ति सहीत बिगो समेत दिलाई पाउ भन्ने व्यहोराको आशिष सिटौलाको कागज ।

६७) **चिरञ्जिवी खरेलको कागज**:

२०७५ सालको माघ महिनाको अन्तिम तिरको समयमा हाम्रो गाँउमा जिल्ला मोरङ पथरी शनिश्चरे न.पा.वडा नं. १० मुनाल टोल बस्ने केशब दुलाल र जाहेरीमा नाम उल्लेखीत सानु भण्डारी समेत सानु भण्डारीको अन्तिममा ४४० नम्बर भएको I10 गाडीमा हाम्रो गाउमा आई मलाई समेत भेटी म तपाईलाई भुटानी

शरणार्थिको परिचय पत्र बनाई दिई तिन महीना भित्रमा अमेरीका पठाई दिन्छौ । उक्त काम गरे बापत तपाइले हामीलाई प्रति व्यक्ती पच्चिस लाख रुपैया दिनु पर्छ, पहिलो चरणमा १० लाख बुझाउनु पर्छ , हामी खबर गर्छौ काठमाण्डौ आउदा दश लाख लिएर आउनु भनी बताएका थिए। मिति २०७६।४।२० गते तिर होला हामीलाई तपाइहरु तुरुन्तै फ्लाईट मार्फत काठमाण्डौ जानु भनी केशव दुलालले फोन गरी भने पछी म समेत सोहि दिन फ्लाईट मार्फत काठमाण्डौ गई गौसला नजिक रहेको होटल रोज स्टारमा बस्यौ । हामी त्यहाँ बसे पछी नम्बर थाहा नभएको सरकारी गाडीमा एक जना एकिन नाम थर वतन थाहा नभएका ल्यापटब बोकेका मानिस, केशब दुलाल र सानु भण्डारी आई निजहरुले ल्याएका फारममा मेरो फोटो टाँसी सही गर्न लगाई ल्याप्चे समेत गर्न लगाए। त्यस पछी मेरो तर्फबाट दिनु पर्ने दश लाख रुपैया मेरो भाई जाहेरबाला रोशन खरेलले सानु भण्डारी र केशब दुलालको खातामा हाली दिनु भएको छ। उक्त स्टेटमेन्ट भाइ रोशन खरेलले जाहेरी साथ पेश गरी सक्नु भएको छ । त्यस पछी निजहरुले बताएको समयमा म समेतलाई अमेरीका नपठाए पछी बुझ्दै जाँदा निजहरुले गाँउ लेबल देखी गृह मन्त्रालय सम्मको सेटिङमा हामीलाई त्यसरी नक्कली भुटानी शरणार्थी बनाई अमेरीका पठाउन खोजेका रहेछन। निजहरुले त्यसरी पठाउन नसकेपछी मैले सागर राई, केशब दुलाल र सानु भण्डारी सँग रकम फिर्ता माग्दा तिमिले जे गर्न सक्छौ गर भनी बताएको हुदा म समेतलाई निजहरुले अमेरीका पठाई दिने भनी ठगी गरेको कुरा एकिन थाहा हुन आयो । म समेतलाई ठगी गर्ने मानिसहरुलाई कानून बमोजिम कारबाही गरी क्षतिपुर्ति सहीत बिगो समेत दिलाई पाउ भन्ने व्यहोराको चिरञ्जिवि खरेलको कागज।

६८) **<u>प्रदिप कार्कीको कागज</u>**:

२०७५ सालको माघ महिनाको अन्तिम तिरको समयमा हाम्रो गाँउमा जिल्ला मोरङ पथरी शनिश्चरे न.पा.वडा नं.१० मुनाल टोल बस्ने केशब दुलाल र जाहेरीमा नाम उल्लेखित सानु भण्डारी समेत सानु भण्डारीको अन्तिममा ४४० नम्बर भएको I10 गाडीमा हाम्रो गाउमा आई मलाई समेत भेटी म तपाईलाई भुटानी शरणार्थिको परिचय पत्र बनाई दिई तिन महीना भित्रमा अमेरीका पठाई दिन्छौ । उक्त काम गरे बापत तपाइले हामीलाई प्रति व्यक्ती पच्चिस लाख रुपैया दिनु पर्छ, पहिलो चरणमा १० लाख बुझाउनु पर्छ, हामी खबर गर्छौ काठमाण्डौ आउदा दश लाख लिएर आउनु भनी बताएका थिए। मिति २०७६।४।२० गते तिर होला हामीलाई तपाइहरु तुरुन्तै फ्लाईट मार्फत काठमाण्डौ जानु भनी केशव दुलालले फोन गरी भने पछी म समेत सोहि दिन फ्लाईट मार्फत काठमाण्डौ गई गौसला नजिक रहेको होटल रोज स्टारमा बस्यौ । हामी त्यहाँ बसे पछी नम्बर थाहा नभएको सरकारी गाडीमा एक जना एकिन नाम थर वतन थाहा नभएका ल्यापटब बोकेका मानिस, केशब दुलाल र सानु भण्डारी आई निजहरुले ल्याएका फारममा मेरो फोटो टाँसी सही गर्न लगाई ल्याप्चे समेत गर्न लगाए। त्यस पछी मेरो दश लाख रुपैया भएको मेरो झोला सानु भण्डारी र केशब दुलाललाई दिएको हुँ। त्यस पछी निजहरुले बताएको समयमा म समेतलाई अमेरीका नपठाए पछी बुझ्दै जाँदा निजहरुले गाँउ लेबल देखी गृह मन्त्रालय सम्मको सेटीङमा हामीलाई त्यसरी नक्कली भुटानी शरणार्थी बनाई अमेरीका पठाउन खोजेका रहेछन । निजहरुले त्यसरी पठाउन नसकेपछी मैले सागर राई, केशब दुलाल र सानु भण्डारी सँग रकम फिर्ता माग्दा तिमीले जे गर्न सक्छौ गर भनी बताएको हुदा म समेतलाई निजहरुले अमेरीका पठाई दिने भनी ठगी गरेको कुरा एकिन थाहा हुन आयो । म समेतलाई ठगी गर्ने मानिसहरुलाई कानून बमोजिम कारबाही गरी क्षतिपुर्ति सहित बिगो समेत दिलाई पाउ भन्ने व्यहोराको प्रदिप कार्कीको कागज।

६९) **रोशन पराजुलीको कागज**:

२०७५ सालको माघ महिनाको अन्तिम तिरको समयमा हाम्रो गाँउमा हाम्रो तत्कालिन जिल्ला मोरङ पथरी शनिश्चरे न.पा.वडा नं. १० का वडा अध्यक्ष सागर राई, जिल्ला मोरङ पथरी शनिश्चरे नगरपालिका वडा नं.१० मुनाल टोल बस्ने केशव दुलाल र जाहेरीमा नाम उल्लेखीत सानु भण्डारी समेत हाम्रो गाउमा आई मलाई समेत भेटी म तपाईलाई भुटानी शरणार्थिको परिचय पत्र बनाई दिई तिन महीना भित्रमा अमेरीका पठाई दिन्छौ। उक्त काम गरे बापत तपाइले हामीलाई प्रति व्यक्ती दश लाख रुपैया दिनु पर्छ भनी बताए। निजहरु हाम्रो गाउमा आउदा पनि सरकारी गाडीनै लिएर आएका थिए। उक्त गाडीको नम्बर हाल मलाई याद भएन। मिति २०७६।४।२० गते तिर होला हामीलाई तपाइहरु तुरुन्तै फ्लाईट मार्फत काठमाण्डौ जानु भनी सागर राईले भने पछी म समेत सोहि दिन फ्लाईट मार्फत काठमाण्डौ गई एयरपोर्ट नजिक रहेको यूनिक होटलमा बस्यौ। हामी त्यहाँ बसे पछी नम्बर थाहा नभएको सरकारी गाडीमा एक जना एकिन नाम थर वतन थाहा नभएका ल्यापटब बोकेका मानिस, केशब दुलाल र सानु भण्डारी आई निजहरुले ल्याएका फारममा मेरो फोटो टाँसी सही गर्न लगाई ल्याप्चे समेत गर्न लगाए। त्यस पछी मेरो दश लाख रुपैया सानु भण्डारी र केशब दुलाललाई दिएको हुँ। त्यस पछी निजहरुले बताएको समयमा म समेतलाई अमेरीका नपठाए पछी बुझ्दै जाँदा निजहरुले गाँउ लेबल देखी गृह मन्त्रालय सम्मको सेटीङमा हामीलाई त्यसरी नक्कली भुटानी शरणार्थी बनाई अमेरीका पठाउन खोजेका रहेछन। निजहरुले त्यसरी पठाउन नसकेपछी मैले सागर राई, केशब दुलाल र सानु भण्डारी सँग रकम फिर्ता माग्दा तिमिले जे गर्न सक्छौ गर भनी बताएको हुदा म समेतलाई निजहरुले अमेरीका पठाई दिने भनी ठगी गरेको कुरा एकिन थाहा हुन आयो। म समेतलाई ठगी गर्ने मानिसहरुलाई कानून बमोजिम कारबाही गरी क्षतिपुर्ति सहीत बिगो समेत दिलाई पाउ भन्ने व्यहोराको रोशन पराजुलीको कागज।

७०) **दिलिप कुमार राईको कागज**:

गजेन्द्र बुढाथोकी समेतको जाहेरी लगाएतको मिसिल संलग्न कागजातहरू पढीबाची सुनी ब्यहोरा अवगत भयो। म २०७४ सालमा जिल्ला मोरङ पथरी सनिश्चरे नगरपालिकाको नगर प्रमुख पदमा निर्वाचित भई काम काज गर्दै आई रहेको थिए। सो अवधिभर भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालिन समाधानका उपायहरू पहिल्याउन पुर्व सह-सचिब बालकृष्ण पन्थीको संयोजकत्वमा गठित कार्यदल २०७६ को प्रतिवेदन तयार गरेको सम्बन्धमा पथरी शनिश्चरे नगरपालिकाको कार्यालयमा कोही कसैले कुनै लिखत तथा मौखिक जानकारी समेत गराएका मलाई थाहा छैन। निज प्रतिवादीहरूले सोही बिषयमा गृह मन्त्रालयबाट समिती समेत गठन गरी मोरङ जिल्लाबाट भुटानी शरणार्थीको नामावली समेत संकलन गरी सो सम्बन्धमा स्थानिय जनप्रतिनिधीहरूलाई कुनै लिखित तथा मौखिक जानकारी समेत नदिई नामावली उतार गरी लिई गएको भन्ने कुरा समेत हाल थाहा पाए।हाल आम संचारको माध्यमबाट समाचार प्रकाशित हुँदा नेपाली नागरीकहरूलाई गैर-भुटानीको कागजातहरू तयार गरी भुटानी शरणार्थीमा तेश्रो मुलुक पठाई दिने भनी उच्च पदस्थका कर्मचारीहरु मिली सँगठीत रुपमा ठगी गरेको भन्ने कुरा सुनी थाहा पाएँ। निजहरूले के-कसरी भुटानी शरणार्थीहरूको नामावली उतार गरी लिई गए सो मलाई केही थाहा जानकारी छैन भन्ने व्यहोराको दिलिप कुमार राईको कागज।

७१) **चोमेन्द्र न्यौपानेको कागज**:

म जिल्ला प्रशासन कार्यालय झापामा सहायक प्रमुख जिल्ला अधिकारीको रुपमामिति २०७८ साल पौषदेखि मिति २०७९ असोजसम्म कार्यरत रहेको थिएँ। जिल्ला प्रशासन कार्यालय झापामा शरणार्थीहरुको काम गर्नको

लागि RCU (Refugee Coordination Unit) रहेको छ, मलाई प्रमुख जिल्ला अधिकारीले सो युनिट समेत हेर्ने जिम्मेवारी दिईएको थियो । RCU ले शरणार्थीहरुको शरणार्थी ब्यवस्थापन सम्बन्धी काम गर्ने गर्छ । "भुटानी शरणार्थी समस्याको स्थायी रदीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल, २०७६" गठन भएको र सो कार्यदलले प्रतिवेदन दिएको सम्बन्धमा मलाई गृह मन्त्रालयबाट उक्त कार्यदलको प्रतिवेदन कार्यान्वयन गर्नका लागी लेखी आएपछि सो कार्यदलले प्रतिवेदन दिएको भन्ने थाहा पाएको हो । तर उक्त प्रतिवेदन मैले गृह मन्त्रालयबाट प्राप्त हुन नसकेकोले अध्ययन गरेको छैन । उक्त प्रतिवेदन कार्यान्वयन गर्नका लागी गृह मन्त्रालयबाट सहायक प्रमुख जिल्ला अधिकारीको नेतृत्वमा जिल्ला प्रहरी कार्यालयको प्रतिनिधि, UNHCR को प्रतिनिधि, राष्ट्रिय अनुसन्धान बिभागका प्रतिनिधि र RCO ( Refugee Coordination Officer) सदस्य रहने गरी मिति २०७८।०६।१४ गते (सचिवस्तर) निर्णयले समिती बनाई जिल्ला प्रशासन कार्यालय झापामा पत्राचार भएको थियो । उक्त समयमा सहायक प्रमुख जिल्ला अधिकारी कृष्ण बहादुर शाही रहेकोमा म २०७८ पौषमा सो कार्यालयमा हाजिर भएपछि मलाई समितीको संयोजक तोकिएको थियो । मिति २०७८।०९।१२ गते र ऐ १४ गते प्रमुख जिल्ला अधिकारीको अध्यक्षतामा बसेको बैठकको निर्णय बमोजिम सो प्रतिवेदनका सम्बन्धमा " सन् २०१९ मा दर्ता हुन छुट भएका Census Absentees हरुको Verification को लागी पन्थी कार्यदलको टोली गठन, टोलीको कार्यादेश र टोलीको संरचनाको बिषय, Census Absentees हरुको Verification गर्दा प्रयोगमा ल्याएको स्वीकृत भएको SOP तथा गाईडलाईन कस्तो थियो ? र पन्थी कार्यदलले बुझाएको प्रतिवेदन समेत पठाईदिनु "भनी मिति २०७८।०९।२१ मा मैले गृह मन्त्रालयलाई पत्राचार गरेको थिएँ । गृह मन्त्रालयले उक्त टोलीको कार्यादेश तथा प्रतिवेदन नपठाएकोले उक्त समितीको १ पटक पनि बैठक बसेको थिएन । यस वीचमा मलाई कार्यदलको प्रतिवेदन कार्यान्वयन गर्नका लागी गृह मन्त्रालयबाट ताकेता भएको थियो । मिति २०७९।०२।२७ गते गृह मन्त्रालयले माननीय मन्त्रीस्तरको मिति २०७९।०२।२७ को निर्णय अनुसार " सो समितीले उपसमिती बनाई कार्य गर्न सक्ने र बालकृष्ण पन्थीले पेश गरेको प्रतिवेदन समेत अध्ययन गरी छुट शरणार्थीहरु समेतका सन्दर्भमा दीर्घकालिन रुपमा समस्या समाधानका लागी ठोस राय सुझाव सहित पेश गर्न" लेखी आएको थियो । म समितीको संयोजक भएको नाताले पन्थी कार्यदलको प्रतिवेदन कार्यान्वयन कहिले हुन्छ भनी गृह मन्त्रालयका सम्बन्धित शाखाहरुबाट, UNHCR का प्रतिनिधिहरुबाट, शरणार्थीहरुका केही नेताहरुबाट, राजनितिक दलका नेताहरुबाट, शरणार्थीहरुबाटै र तत्कालिन गृह सचिवबाट बिभिन्न समयमा सोधिखोजी हुने गरेको थियो । यस बिषयमा मलाई कसैले आर्थिक प्रलोभनमा पारेको थिएन । सो प्रतिवेदन कार्यान्वयनकै बिषयमा तत्कालिन गृह सचिव टेक नारायण पाण्डेले मलाई फोन गरी १ जना केशव दुलाल नामका नेता भेट्न आउँछन उनको कुरा सुनी दिनु भनेका थिए, मैले निजसँग भेटघाट नै गरिन । जिल्ला प्रशासन कार्यालय झापाबाट पहिले नै माग गरेको पन्थी कार्यदलको कार्यादेश तथा प्रतिवेदन गृह मन्त्रालयले नपठाएको, शरणार्थी शिविरमा RCU को कर्मचारी रिक्त रहेको, जिल्ला प्रशासनको आफ्नै कार्य चाप अत्याधिक रहेको, निर्वाचन र शान्ति सुरक्षामा ध्यान केन्द्रित गर्नु परेको अवस्थाले गर्दा सो बिषयमा कुनै कार्य पनि नगरेको र कुनै बैठक नै नबसेको हो भन्ने व्यहोराको चोमेन्द्र न्यौपानेको कागज ।

७२) **<u>उज्जवल रिजालको कागज</u>**:

हाल पक्राउमा परी हिरासतमा रहेका प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी, टंक कुमार गुरूङ, सागर राई समेतलाईसँग मेरो चिनजान छैन, गजेन्द्र बुढाथोकी समेतको जाहेरी दरखास्त लगाएतको कागजातहरू पढी

बाची सुनी ब्यहोरा अवगत भयो । गजेन्द्र बुढाथोकी र मेरो एकै जिल्ला पर्ने भएकोले निजलाई मैले चिनेको थिए, सन्देश शर्मा भन्ने मानिसलाई मैले चितवनको होटल भिजन सफारीमा जाँदा निजहरु मार्फत काम हुने हो भनी गजेन्द्र बुढाथोकीले चिनाएकोले निजलाई समेत चिनेको छु । त्यसै क्रममा आज भन्दा २ बर्ष पहिले गजेन्द्र बुढाथोकी सँग निजको घरमा भेट भई निजसँग कुराकानी हुँदा तपाई अमेरीका जान चाहनु हुन्छ, राम्रो अवसर आएको छ भनेकोले मैले के-कसरी जाने भनी निजसँग सल्लाह गर्दा मेरो माथिल्लो निकायका गृह मन्त्रालयका उच्च पदस्थका कर्मचारीहरूसँग राम्रो सम्बन्ध छ, सोही मन्त्रालय मार्फत निजहरुकै सहयोगमा सरकारी कार्यालयबाट आफुलाई आवश्यक पर्ने कागजातहरू तयार गरी लिगल तरिकाबाट अमेरीका जान सकिन्छ भनी बिश्वास दिलाई उक्त कागजातहरू तयार गरी अमेरीकामा जान रु.५५,००,०००।-(पचपन्न लाख) सम्म लाग्न सक्छ, यदी तपाईलाई अमेरीका पठाउन सकिन भने तपाईबाट लिएको पुरै रकम फिर्ता गर्छु भनी बिश्वास दिलाईएकोले मैले घरमा अभिभावकसँग सो कुरा राखि मेरो बुबा मार्फत जाहेरवाला गजेन्द्र बुढाथोकीलाई मेरो बुवा पुष्कर राज रिजालको सिद्धार्थ बैंकको खाताको रु.१०,००००० - (दश लाख) को चेक निज दिएको हो, उक्त चेक कृष्ण प्रसाद भुसालको नाममा सटही भई रकम भुक्तानी लिएको मैले पछि बैंक जानकारी पाएको हो । निज गजेन्द्र बुढाथोकीले पुन:मलाई तपाईको बायोमेट्रीकको प्रकृया पुरा गर्नु पर्ने हुन्छ, कामको प्रकृया भई रहेको छ, तपाई मिति २०७८।०५।२७ गते तिर चितवन स्थित सौराहामा रहेको भिजन सफारी नामक रिसोर्टमा आउनु भनी जानकारी गराएको हँदा म उल्लेखित मितिमा उक्त रिसोर्टमा गई जाहेरवाला मार्फत सन्देश शर्मालाई भेट्दा निजले तपाईको बायोमेट्रिकको काम पुरा गर्नु पर्छ, सो गर्नु भन्दा अगाडी रु.१० लाख नगदै बुझाउनु भनेकोले मैले सन्देश शर्मालाई भेटी रु.१० (दश लाख) नगदै दिई हातको औंलाबाट बायोमेट्रिकको काम गरी, फोटो खिची, औंठाछाप समेत दिई आएको हो । निज गजेन्द्र बुढाथोकीलाई मैले सम्पर्क गरी पैसा त सबै बुझाई सकें अब कहिले काम हुन्छ भनी सोद्धा निजले तपाईको काम भई राखेको छ, तपाईलाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाई ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण म समेत निजको कुरामा विश्वास गरी अमेरिका जान पाईन्छ भनी ढुक्क भएर बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिंदै विश्वास दिलाउँदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिनेजानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले म समेतबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै गृह मन्त्रालय मार्फत अमेरिका पठाउँछु भनी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी, सन्देश शर्मा लगायतका उच्च पदस्थ पदमा कार्यरत रहेका ठुला-ठुला कर्मचारीहरू समेत मिली म लगायत विभिन्न व्यक्तिहरुसँग रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा निज प्रतिवादीहरु समेतलाई कानून बमोजिम कारवाही गरी मेरो ठगिएको रकम रु.२०,००,०००।–(बिस लाख) समेत दिलाई भराई पाउँ, जाहेरवाला गजेन्द्र बुढाथोकीले जाहेरी दिंदाका बखत भुलवस मैले दिएको रकम रु.१५,००,०००।–(पन्ध्र लाख) भनी उल्लेख गरेको हुँदा मैले रु.२०,००,०००।–(बिस लाख) बुझाएकोले सोही रकम बिगो कायम गरी पाउँ, माथी लेखिएको व्यहोरा ठिक छ, फरक छैन भन्ने व्यहोराको उज्जवल रिजालको कागज ।

७३) **प्र.स.नि. ज्ञानेन्द्र पन्तले गरेको कागज**:

गजेन्द्र बुढाथोकी समेतको जाहेरी लगाएतको संलग्न मिसिल कागजातहरू पढी बाची सुनी ब्यहोरा अबगत भयो । म २०७६ सालमा प्रहरी सहायक निरीक्षक पदमा भर्ना भई हाल म सुरक्षा सेवा ब्यवस्थापन निर्देशनालय नक्साल काठमाण्डौमा कार्यरत रहेको छु । मिति २०७८ सालको भदौ महिनाको ८/९ गते तिर देखी म गृह

सचिव टेक नारायण पाण्डेको ब्यक्तिगत सुरक्षामा खटिएको थिए । निज गृह मन्त्रालयमा गृह सचिव पदमा रहुन्जेल निजको ब्यक्तीगत सुरक्षा दिन प्र.ब.ना.नि.धर्मराज शाही र मेरो मुख्य जिम्मेवारी रहेकोले हामीहरू पालै पालै निजलाई सुरक्षा दिदै आएको थियौ । सवारी चालकको रुपमा सहदेव कैती मोबाईल नम्बर (९८४१३००३८७) थिए। निज गृह संचिवको उपराष्ट्रपति कार्यालयमा सरुवा भई गएको र नयाँ गृहमन्त्री आए पछी म सुरक्षा सेवा ब्यवस्थापन निर्देशानलय नक्साल काठमाण्डौमा फिर्ता भएको थिए । मलाई निज टेक नारायण पाण्डेले १ पटक रकम जम्मा गर्न लगाएका थिए लामो समय भएकोले रकम,मिति र बैकको नाम याद भएन । निज गृह मन्त्रालयमा गृह संचिव रहदा निजलाई भेट्न को-कस्तो मानिसहरु आउथ्ये भन्ने सम्बन्धमा सचिबज्यू भित्र आफ्नो कार्यकक्षमा रहने र म बाहिर रहने गरेकोले मलाई थाहा भएन । हाल अनुसन्धानको क्रममा पक्राउ परेका प्रतिवादिहरू केशव प्रसाद दुलाल र सानु भण्डारी समेतलाई मैले देखेको चिनेको पनि छैन। गैह्र भुटानी शरणार्थीहरुलाई भुटानी शरणार्थी बनाई तेस्रो मुलक पठाउने कार्यमा गृह सचिव रहेका टेक नारायण पाण्डे समेतको भूमिका रहेको भन्ने कुरा हाल पत्र-पत्रिकामा समाचारहरू आउदा थाहा पाएको हो भन्ने व्यहोराको प्र.स.नि.ज्ञानेन्द्र पन्तको कागज ।

७४) **प्रेम बहादुर डि.सी.को कागज**:

मेरो काका नाताका ब्यक्ति कुल बहादुर बस्नेत मार्फत रामकुमार रेग्मीलाई भेट गराई निज सँग कुराकानी हुदा तपाईको छोरा मनिस डिसीलाई सरकारी कोटामा अमेरीका पठाई दिन सक्छु भनी बिश्वास दिलाई भिषा प्रोसेस तथा कागजातहरू मिलाउनको लागी केही रकम जम्मा गर्नु पर्छ भनेकोले २०७८।१।०२ गते निज आकाश रेग्मी भन्ने रामकुमार रेग्मीलाई काठमाण्डौ स्थित **बानेश्वरमा रहेको खरेल हाउसको माथिल्लो तलामा रहेको बिन्दाबासिनी ना**मले संचालन रहेको एक संस्थामा गई भेटी निज सँग कुराकानी हुदा भुटानी शरणार्थीको कोटामा अमेरीका पठाई दिन्छु उक्त कुरा कसैलाई नभन्नु काम १०० प्रतिशत हुन्छ, गृह मन्त्रालयका उच्च कर्मचारीहरू समेतले सहयोग रहेको हुन्छ, रु.५०,०००००।-(पाँच लाख) खर्च लाग्छ भनी बिश्वास दिलाएको बास्तबिक नामबाट फर्म नभराई नगद ५,०००००।-(पाच लाख) दिई गएको, पछी तपाईलाई हामी फोन गर्छौ बायोमेट्रीको लागी तयार हुनु होस, उक्त दिन रु.१५,००००००।-पन्ध्र लाख लिई आउनु भनेकोले मिति २०७८ जेष्ठ महिनाको २६ गते तिर तपाईको छोराको बायोमेट्रिक चितवन सौराहाको होटल भिजन सफारीमा आउनु भनेकोले त्यहाँ जादा अन्य ३०/४० जना मानिसहरू समेतलाई देखेको थिए । उक्त स्थानमा बायोमेट्रिक गर्ने मानिसहरुको घाटीमा गृह मन्त्रालय लेखिएको कार्ड समेत घाटीमा भिरी सरकारी युनिफर्म समेत लगाई काम गरी रहेका थिए । छोराको बायोमेट्रिक गर्ने पालो आएकोले निजलाई बायोमेट्रिक गर्न पठाए । बिधुतिय माध्यमबाट आखाको फोटो, हातको औलाको छाप तथा ल्यापटबाट फोटो समेत खिची दिएकोले उक्त स्थानमा रहेका आकाश रेग्मी भन्ने राम कुमार रेग्मीले १५,०००००।- (पन्ध्र लाख) रकम माग गरेकोले म सँग अहिले १०,०००००।- (दश लाख) मात्र रहेको छ बाकी रकम पछी दिन्छु भनी निजाई १० लाख बुझाएको थिए । केही महिना पछी आकाश रेग्मी भन्ने राम कुमार रेग्मीले फोन गरी तपाईको छोराको मेडिकल गर्नु पर्छ काम अन्तिम हुन लागेको छ भनी बताएकोले निजले भनेको दिनमा छोरा सहित मेडिकलको लागी बिराटनगर गएकोमा बिराटनगर मेडिकल सेन्टरमा मेडिकल गर्नु पर्ने सम्पुर्ण काम गरी निज आकाश रेग्मी भन्ने राम कुमार रेग्मीले पठाएको बैंक खातामा रकम जम्मा गर्नु भनेकोले ज्योती बिकास बैक लि.मा रहेको खातामा राजेश अर्यालको नाममा रु.५०००००।-(पाच लाख) पठाएको थिए । केही महिना पछी राम कुमार रेग्मीलाई फोन सम्पर्क गरी बुझ्दा निजले तपाईको काम भई राखेको छ, जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो

निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिई आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोले सो सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरु सँग कुराकानी गर्दा निजले हामीबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै विभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने, पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भन्डारी, सन्देश शर्मा तथा नेपाल सरकार अन्तर्गतका गृह मन्त्रालयमा काम गर्ने उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएको हुँदा मेरो छोराको बास्तबिक नाम मनिस डिसीबाट फारम नभराई अभिनास सुव्वाको नामबाट फारम भराएकोमा हाल बुझ्दा भुटानी शरणार्थी मेरो छोरालाई अमेरीका पठाई दिने भनी म बाट नगद १५,०००००।-, बैक खाता मार्फत ५,०००००।-(पाच लाख) रकम समेत लिई जम्मा रकम २०,०००००।-(बिस लाख) रकम लिई ठगी गरेको हुदा निज प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी ठगी भएको रकम असुल उपर गराई पाउ भन्ने व्यहोराको प्रेम बहादुर डि.सी.को कागज।

७५) **<u>कूल बहादुर बस्नेतको कागज</u>**:

गजेन्द्र बुढाथोकी मार्फत रामकुमार रेग्मीलाई भेट गराई निज सँग कुराकानी हुदा तपाईको छोरा अन्जान बस्नेत लाई सरकारी कोटामा अमेरीका पठाई दिन सक्छु, भिषा प्रोसेस तथा कागजातहरू मिलाउनको लागी केही रकम जम्मा गर्नु पर्छ भनेकोले २०७८।१२।२५ गते निज आकाश रेग्मी भन्ने रामकुमार रेग्मीलाई काठमाण्डौ स्थित **बानेश्वरमा रहेको खरेल हाउसको माथिल्लो तलामा रहेको बिन्दाबासिनी नाम**को संस्थामा गई भेटी निज सँग कुराकानी हुदा तपाइको छोरा अन्जान बस्नेतलाई भुटानी शरणार्थीको कोटामा अमेरीका पठाई दिन्छु उक्त कुरा कसैलाई नभन्नु काम १०० प्रतिशत हुन्छ यसमा गृह मन्त्रालयका उच्च कर्मचारीहरू समेतले सहयोग रहेको हुन्छ उक्त काम सम्पन हुदा सम्म ५०,०००००।-(पचाल लाख) सम्म खर्च लाग्छ भनी बिश्वास दिलाएको आकाश कार्कीको नामबाट फारम भराई निजलाई नगद ५,०००००।-(पाच लाख) दिई गएको, मिति २०७८ जेष्ठ महिनाको २६ गते तिर तपाईको छोराको बायोमेट्रोक चितवन सौराहाको होटल भिजन सफारीमा लिई आउनु भनी जानकारी गराएकोले उल्लेखित मितिमा छोरालाई होटल भिजन सफारीमा लिई गई छोराको बिधुतिय माध्यमबाट आखाको फोटो,हातको औलाको छाप तथा ल्यापटबाट फोटो समेत खिची आकाश रेग्मी भन्ने राम कुमार रेग्मीले रु.१५,०००००।- (पन्ध्र लाख) रकम माग गरेकोले रु.१०,०००००।-(दश लाख) बुझाएको थिए। केही महिना पछी आकाश रेग्मी भन्ने राम कुमार रेग्मीले फोन गरी तपाईको छोराको मेडिकल गर्नु पर्छ काम अन्तिम हुन लागेको छ भनेकोले उक्त दिनमा छोरालाई मेडिकलको लागी बिराटनगर गई बिराटनगर मेडिकल सेन्टरमा सम्पुर्ण काम गरी राम कुमार रेग्मीले पठाएको ज्योती बिकास बैक लि.को खातामा राजेश अर्यालको नाममा रु.५०००००।- (पाच लाख) जम्मा गरी दिएको, पछी केही महिना पछी बुझ्दा निजले तपाईको काम भई राखेको छ, तपाईको छोरालाई जसरी पनि अमेरिका पठाई दिन्छु, मैले नेपालका माथिल्लो निकायका मानिसहरुलाई चिनेको छु, तपाईहरु ढुक्क भएर बस्नु भनी आश्वासन दिएको कारण निजको कुरामा विश्वास गरी ढुक्क भई बसेकोमा निजले आज भोली भन्दै समय विताउने, काम भई राखेको छ भनी आश्वासन दिने र सो सम्बन्धी बिभिन्न कागजहरु समेत हामीहरुलाई पठाउने गरी विश्वास दिलाउदै आएकोमा निजले गरेको उक्त कार्यको सम्बन्धमा आफुले चिने जानेका व्यक्तिहरुसँग कुराकानी गर्दा निजले हामीबाट रकम लिई ठगी गर्ने योजना अनुसार नै विभिन्न प्रकारका नक्कली कागज पत्रहरु बनाई सोही कागज पत्र हामीहरुलाई देखाउने,

पठाउने गरी झुक्याई रकम लिई ठगी गरेको र सो कार्यमा हाल पक्राउमा परी आएका प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भन्डारी,सन्देश शर्मा तथा नेपाल सरकार अन्तगतका गृह मन्त्रालयमा काम गर्ने उच्च पदस्थमा कार्यरत रहेका ठुला ठुला कर्मचारीहरू समेत मिलि रकम लिई ठगी गरेको कुरा हाल आएर थाहा पाएकोले मेरो छोराको बास्तबिक नाम अन्जान बस्नेतबाट फारम नभराई योजनाबद्ध तरिकाले आकाश कार्कीको नामबाट फारम भराएकोमा हाल बुझ्दा भुटानी शरणार्थीमा मेरो छोरालाई अमेरीका पठाई दिने भनी रु.१५,०००००।-बैक खाता मार्फत रु.५,०००००।-(पाच लाख) रकम समेत लिई जम्मा रकम रु.२०,०००००।-(बिस लाख) रकम लिई ठगी गरेको हुदा ठगी गर्ने कार्यमा संलग्न प्रतिवादीहरुलाई कानून बमोजिम कारवाही गरी ठगी भएको रकम निज प्रतिवादीहरूबाट असुल उपर गराई पाउ भन्ने व्यहोराको कुल बहादुर बस्नेतको कागज।

७६) **सहदेव नेत्र बिक्रम कैटीको कागज**:

सचिव टेक नारायण पाण्डे गृह मन्त्रालयमा कार्यरत रहँदा निजको सवारी साधन चलाईको थिए। सचिव टेक नारायण पाण्डेले मलाई बिभिन्न मितिमा आफ्नो बैक खातामा नगद जम्मा गरी आउनु भनी नगद दिई पठाउने तथा कहिले काही चेक पनि साट्न भनी पठाउने गर्नु भएकोले आफुलाई लेख्न नआउने भएकोले धर्मराज शाही सरलाईसंगै लिई गई निज सचिवले भने अनुसारको निजको संचयकोषको ऋण सापटी वापतको रकम बैक खाताहरूमा मेरो नाम समेतबाट नगद जम्मा गर्ने र चेक मार्फत समेत नगद निकाली ल्याउने समेत गरेको थिए। मैले के कती रकम के कुन बैक खातामा जम्मा गरी दिएँ भन्ने सम्बन्धमा एकिन मिति थाहा भएन। निज गृह मन्त्रालयमा गृह संचिव रहदा निजलाई भेट्न को कस्तो मानिसहरु आउथे भन्ने सम्बन्धमा सचिब ज्यू भित्र आफ्नो कार्यकक्षमा रहने र म बाहिर गाडी पार्किङ गर्ने ठाउमा बस्ने भएकोले सो सम्बन्धमा मलाई थाहा भएन। हाल अनुसन्धानको क्रममा पक्राउ परेका प्रतिवादीहरू केशब प्रसाद दुलाल र सानु भण्डारी समेतलाई मैले देखेको चिनेको छैन। गैह्र भुटानी शरणार्थीहरुलाई भुटानी शरणार्थी बनाई तेस्रो मुलक पठाउने कार्यमा गृह सचिव रहेका टेक नारायण पाण्डे समेतको भूमिका रहेको भन्ने कुरा हाल पत्र पत्रिकामा समाचारहरू आउदा थाहा पाएको हो भन्ने व्यहोराको सहदेव नेत्र बिक्रम कैटीको कागज।

**३२. प्रहरी प्रतिवेदनहरु:**

क) मिति २०७९।०२।१८ गते जाहेरवालाहरु राम कुमार रेग्मी र गजेन्द्र बुढाथोकीले जिल्ला दाङ तुलसीपुर उ.प.म.न.पा.-१६ घर भई ललितपुर गोदावरी नगरपालिका हरिसिद्धि बस्ने बर्ष ३४ को सन्देश शर्मा, जि.पाँचथर फिदिम न.पा.-७ घर भई हाल ललितपुर धापाखेल बस्ने वर्ष५५ को टंक गुरुङ, जि.मोरङ पथरी शनिश्चरे न.पा.-१ घर भई हाल का.म.न.पा.-१० शान्तिनगर बस्ने बर्ष ६२ को केशब प्रसाद दुलाल र जि.मोरङ बिराटनगर घर भई हाल ललितपुर हात्तीवन बस्ने वर्ष ४३ को सानु भण्डारीको संयुक्त मिलोमतोमा २०७७ साल देखि हाल सम्म बिभिन्न नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका लैजान्छु भनी बिभिन्न किसिमका प्रलोभन र बिश्वासमा पारी ८१ जना पीडितहरुबाट करिब रु.१३ करोड ६३ लाख भन्दा बढी ठगी गरेको भनी सबै ८१ जना पीडितहरुको नाम र ठगी भएको रकम समेत जाहेरीमा खुलाएको, जाहेरवालाहरु मध्ये रामकुमार रेग्मीले "का.म.न.पा.३१ स्थित नयाँ बानेश्वरमा Bindabasini International Institute Pvt. Ltd. संचालन गरी बिदेश जाने श्रमिकहरुलाई तालिम दिने कार्यहरु गर्दै आइरहेकोमा २ बर्ष अघि बिपक्षी सन्देश शर्मासँग चिनजान भई निजले काठमाणडौंको बिभिन्न स्थानमा बोलाई भेट गरि तपाई, तपाईको परिवार, इष्टमित्र, साथीभाईहरु अमेरिका जान चाहनुहुन्छ भने भुटानी शरणार्थीको नाममा अमेरिका पठाउन सकिन्छ, प्रोसेसिङ र मौका फाइदा लिइहाल्नु भनी मैले चलाउने गरेको WhatsApp मा श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारको बिभिन्न

निकायहरुबाट भूटानी शरणार्थीको नाममा भएका निर्णय, समाचार एवं फोटोहरु समेत पठाई विश्वास दिलाई म सहित मेरो भाई श्रवण कुमार रेग्मी, मेरो दिदी कल्पना रेग्मी, भिनाजु उपेन्द्र बुढाथोकी, भाई पर्ने राजेश अर्याल सहित मेरो चिनजानको जम्मा २० जना व्यक्तिहरुलाई भूटानी शरणार्थीको फारम भर्न लगाई प्रोसेसिङको लागि रु. ५ लाख प्रति व्यक्ति लाग्छ भनी सो रकम लिई पछि फेरि बायोमेट्रिक गर्नुपर्छ सो बापत रकम दिनु भनी प्रति व्यक्ति १० लाख देखि २० लाख सम्म नगदै रकम लिई कामको ग्यारेन्टिका लागि निजले आफ्नो ग्लोबल आइएमई बैंकको कुल ३ करोड बराबरको ४ थान चेक मिति २०७८।१२।२४ देखि २०७८।१२।२५ सम्म रकम भुक्तानी पाउने गरि दिएको र प्रोसेस गरेका हरुको ट्राभल डकुमेन्ट बनिसकेको भनी मेरो WhatsApp मा नामावली विवरणहरु समेत पठाई समयमै काम हुन्छ भनी काम नगरि चेक समेत सटही हुन नसकेको र पछि सम्पर्कमा समेत नआई निजले ठगी गर्ने योजना बनाई म लगातय २० जना व्यक्तिहरुबाट जम्मा ३ करोड ८५ लाख रकम ठगी गरी फरार भएकाले निज कसुरदारलाई मुलुकी अपराध संहिताको दफा २४९(१) र (२) बमोजिमको कसुर अपराधमा कानुनी कारबाही गरि सोही संहिताको दफा २५४ बमोजिम ठगी गरेको विगो समेत दिलाई भराई पाऊँ" भनी यस कार्यालयमा जाहेरी दरखास्त पेश गरेको, अर्का जाहेरवाला गजेन्द्र बुढाथोकीले " म सामाजिक काम गर्दै आइरहेकोमा बिपक्षी मध्येका दाङ जिल्ला ठेगाना भएका सन्देश शर्मासँग चिनजान भई एउटै जिल्ला को व्यक्ति भएकाले फोन सम्पर्क मार्फत् कुराकानी भैरहेकोमा निजले तपाईंको परिवार, साथीभाई, इष्टमित्रहरु अमेरिका जान चाहनुहुन्छ भने मेरो साथीहरु केशवप्रसाद दुलाल, सानु भण्डारी, टंक गुरुङ समेत भई हामीहरुले इच्छुकहरुलाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाईदिन्छौं मौकाको फाइदा लिनुहोस् भनी पटक-पटक विश्वास दिलाई भेट गरि मैले चलाउने गरेको WhatsApp भुटानी शरणार्थी सम्बन्धि नेपाल सरकारबाट बिभिन्ननिकायबाट भएका निर्णयहरुको फोटो पठाई गृह मन्त्रालयमा भुटानी शरणार्थीको नाम मिलाई अमेरिका पठाइदिन्छु भनी विश्वास दिलाएकाले मैले मेरो चिनजानका साथीहरु सन्तोष शर्मा, विवेक थापा सहित ६१ जनासँग शुरुमा प्रोसेसिङका लागि भन्दै भुटानी शरणार्थीको फाराम भर्न लगाई प्रति व्यक्ति रु.५ लाख र पछि बायोमेट्रिक तथा ट्राभल डकुमेन्ट बनाउनुपर्छ भनी प्रतिव्यक्ति रु.१० लाख र रु.१५ लाखका दरले नगदै रकम लिई उक्त रकमको ग्यारेन्टि स्वरुप निजले आफ्नो ग्लोबल आइएमई बैंकको खाता नं.R507010007916 को रु.१ करोड दरले ५ थान चेकको रु.५ करोडको चेक मेरो नाममा काटी दिई ट्राभल डकुमेन्ट बनी सकेको भन्दै मेरो WhatsApp मा नामावली विवरणहरु समेत पठाई समयमै काम हुन्छ भनी काम नगरी चेक समेत सटही हुन नसकेको र पछि सम्पर्कमा समेत नआई निज सन्देश शर्मा, केशवप्रसाद दुलाल, सानु भण्डारी, टंक गुरुङ समेतको मिलेमतोमा ठगी गर्ने योजना बनाई मेरो ६१ जना साथीहरुबाट जम्मा रु.९ करोड ७८ लाख रकम ठगी गरी फरार भएकाले निज कसुरदारलाई मुलुकी अपराध संहिताको दफा २४९(१) र (२) बमोजिमको कसुर अपराधमा कानुनी कारबाही गरी सोही संहिताको दफा २५४ बमोजिम ठगी गरेको विगो समेत दिलाई भराई पाऊँ" भनी यस कार्यालयमा जाहेरी दरखास्त पेश गरेको,जाहेरवालाहरुले बिपक्षी सन्देश शर्मासँग ह्वाट्सएप मार्फत् भुटानी शरणार्थी बनी बनाई अमेरिका पठाउने सम्बन्धमा भएका कुराकानीहरुको स्क्रिनसट तथा फोटोहरुको अध्ययन गर्दा सन्देश शर्माले केशव तुलाधर नाम गरेको व्यक्तिको लुम्बिनी विकास बैंकको न्यूरोड शाखाको खाता नं.०१६४०२२०१५४१३४००००४, निजकै सिद्धार्थ बैंक न्यूरोड शाखाको खाता नं. ००४१५१४९३९३, केशव तुलाधर/सिर्जना तुलाधरको एनआईसी एसिया बैंकको न्यूरोड शाखाको खाता नं.००६४१५०८७४८००००१ र लक्ष्मी महर्जन नाम गरेको व्यक्तिको हिमालयन बैंकको महाराजगञ्ज शाखाको खाता नं.००२०३८४६९०००१८ जाहेरवाला गजेन्द्र बुढाथोकीलाई ह्वाट्सएप कुराकानीका क्रममा

पठाएको देखिएको, अर्का जाहेरवाला रामकुमार रेग्मीले जाहेरी साथ पेश गरेको बिन्दबासिनी इन्टरनेशनल इन्स्टिच्युट प्रा.लि.को प्रभु बैंकको खाता नं.००१०११३०२२३०००१५ को बैंक स्टेटमेन्ट पाना-१ मा 18-MAR-2021 मा रु.१० लाख हरिभक्त महर्जनबाट डेबिट भएको देखिएको,बिपक्षी सन्देश शर्माले जाहेरवालाहरुलाई भुटानी शरणार्थी सम्बन्धी समाचार लिंकहरु, सिडियो लगायत कर्मचारीको सरुवा सम्बन्धि कुराहरु, बिभिन्न व्यक्तिको नाम समावेश भएको शरणार्थीको नामावली विवरण भएका लिष्टहरु, गृह मन्त्रालय र जिल्ला प्रशासन कार्यालयको पत्रहरु, बिभिन्न फोटो, भिडियोहरु, बिभिन्न व्यक्तिका नाममा बनेका शरणार्थी परिचय पत्र लगायतका विवरणहरु सेयर गरको देखिएको; जाहेरवाला रामकुमार रेग्मीले बिपक्षी केशव प्रसाद दुलाललाई बिभिन्न व्यक्तिबाट लिएको १२/१५ करोड पैसा फिर्ता गर्न भन्दै ह्वाट्सएप मार्फत् मेसेजहरु पठाएको देखिएको,जाहेरवाला रामकुमार रेग्मीलाई बिपक्षी सन्देश शर्माले ग्यारेन्टी स्वरुप आफ्नो ग्लोबल आइएमई बैंक शंखमुल शाखाको खाता नं. R507010007916 को रु.३ करोड बराबरको ४ थान चेक बाउन्स भई नसाटिएको देखिएको,अर्का जाहेरवाला गजेन्द्र बुढाथोकीलाई बिपक्षी सन्देश शर्माले आफ्नो ग्लोबल आइएमई बैंक शंखमुल शाखाको खाता नं.R507010007916 को रु.५ करोड बराबरको चेक बाउन्स भई नसाटिएको देखिएको,जाहेरीमा उल्लेखित कसुरदारहरुको CDR Analysis समेत गरिएको,मिति २०७९।०२।३१ गते "भुटानी शरणार्थी बनाएर अमेरिका लैजाने भन्दै करौडौं असुली" शीर्षकमा कान्तिपुरमा प्रकाशित विस्तृत समाचार र मिति २०७९।०३।१७ गते "नेपालीलाई भुटानी शरणार्थी बनाउने खेल" शीर्षकको कान्तिपुरमा नै प्रकाशित समाचार समेत प्रिन्ट गरी मिसिलसाथ संलग्न राखिएको,माथि उल्लेखित लक्ष्मी महर्जन नाम गरेको व्यक्तिको हिमालयन बैंकको महाराजगञ्ज शाखाको खाता नं.००२०३८४६९०००१८ को JAN-2021 देखिको बैंक स्टेटमेन्ट माग गरी हेर्दा निज लक्ष्मी महर्जनको खातामा मिति 24-AUG-2021 मा जाहेरवाला गजेन्द्र बुढाथोकीले रु.९ लाख ९९ हजार र मिति 14-DEC-2021 मा रु.१० लाख डिपोजिट गरेको देखिएको, उक्त रकमहरु सोही मितिमा हरिभक्त महर्जनको खातामा ट्रान्सफर भएको र हरिभक्त महर्जनको खाताबाट मिति 24-AUG-2021 मा रु.८ लाख ५३ हजार र रु.३ लाख फरक-फरक खातामा ट्रान्सफर भएको तथा मिति 14-DEC-2021 मा रु.१ लाख ४६ हजार ४०० र मिति 15-DEC-2021 मा ८ लाख ५० हजार बिकेन महर्जनको खातामा रकमान्तर भएको भेटिएको,त्यस्तै केशव तुलाधरको सिद्धार्थ बैंक न्यूरोड शाखाको खाता नं.००४१५१४९३९३ को JAN-2021 देखिको बैंक स्टेटमेन्ट माग गरी हेर्दा निज केशव तुलाधरको खातामा मिति 16-SEPT-2021 मा जाहेरवाला गजेन्द्र बुढाथोकीले रु.२० लाख र 21-SEPT-2021 मा रु.१५ लाख डिपोजिट गरेको देखिएको, उक्त रकमहरु सोही मितिमा रु.१० लाखका दरले दुईपटक भएको र 22-SEPT-2021 मा रु.१० लाख र रु.५ लाखका दरले दुइपटक गरीConnectIPS मार्फत् अन्य खातामा रकमान्तर भएको देखिएको,मिति २०७९।१२।०१ गते जाहेरवाला रामकुमार रेग्मीकी श्रीमती सुनिता रेग्मीले "भुटानी शरणार्थी सम्बन्धि समस्याको स्थायी र दीर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन" नामक बाइन्डिङ गरिएको फाइल दाखिला गरेको, उक्त फाइल भित्र परिच्छेद २.६ अन्तर्गत अनुसूची-७, अनुसूची-८, अनुसूची-९ (क), अनुसूची-९ (ख) र अनुसूची१० गरि जम्मा ५ वटा अनुसूची मध्ये अनुसूची-७ मा 2019 Joint Refugee Coordination Unit & UNHCR Census Absentee Verification लेखिएको २१२ जनाको नामावली विवरण भएको तालिका रहेको,अनुसूची-८ मा जनगणनामा छुट (CA) भई दर्ताको लागि Verified भएका शरणार्थीहरु मध्य तेश्रो देश पुनस्थापना हुन इच्छुकहरुको विवरण (३९ परिवारका जम्मा ११९ जनाको विवरण तालिका) रहेको, अनुसूची-९ (क) मा बिभिन्न कारण देखाई

शरणार्थीमा छुट दर्ता गरी तेस्रो देशमा पुनर्स्थापना माग गर्दै कार्यदल समक्ष निवेदन दिने क्याम्प बाहिर ठेगाना देखाएका जम्मा ४५१ परिवारका ५३५ जना निवेदकहरुको विवरण तालिका रहेको, अनुसूची-९ (ख) मा बिभिन्न कारण देखाई शरणार्थीमा छुट दर्ता गरि तेस्रो देशमा पुनर्स्थापना गर्न माग गर्दै कार्यदल समक्ष निवेदन दिने क्याम्पभित्र ठेगाना देखाएका जम्मा १३० परिवारका ३४० जना निवेदकहरुको नामावली विवरण भएको तालिका रहेको र अनुसूची-१० मा तेस्रो देश पुनर्स्थापनाको लागि निवेदन दिने दर्तावाल शरणार्थी र तिनका १७४ परिवारका सदस्यहरुको विवरण तालिका रहेको,जाहेरवालाहरुले जाहेरी साथ पेश गरेको विपक्षी सन्देश शर्मासँगको ह्वाट्सएप कुराकानीको मेसेज विवरणमा रहेको Name List लेखिएको Real Name र Refugee Name सहितको ११६ जनाको विवरण भएको तालिकामा समाविष्ट भएका पाना-३ नामावलीहरुलाई सुनिता रेग्मीको प्रतिवेदन साथ दाखिला हुन आएको "भुटानी शरणार्थी सम्बन्धि समस्याको स्थायीर दीर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन" भित्र रहेका अनुसूचीमा रहेका नामावली विवरणसँग भिडाएर हेर्दा जाहेरीमा उल्लेखित पीडितहरुको नामावली विवरण तपशिल बमोजिम कायम हुन आएको पाइएको ।

**"भुटानी शरणार्थी सम्बन्धि समस्याको स्थायी र दीर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन" मा रहेका शरणार्थीको नामावलीसँग मिल्ने जाहेरीमा उल्लेखित पीडितहरुको विवरण:-**

| सि.नं. | जाहेरीमा उल्लेखित पीडितको नाम | शरणार्थीको नाम | प्रतिवेदनमा रहेको अनुसुची बमोजिमको विवरण (सि.नं.) | कैफियत |
|---|---|---|---|---|
| १ | सन्तोष शर्मा | रोहित शर्मा कोइराला | - | नामावली नभेटिएको |
| २ | विवेक थापा | कृष्ण कार्की | अनुसूची ९ (क) १०४ | |
| ३ | प्रदिप अर्याल | प्रदिप पौडेल | अनुसूची ९ (क) ९९ | |
| ४ | सन्देशजंग ठकुरी | भुवन थापा | अनुसूची ९ (क) २८६ | |
| ५ | संजिव गौतम | ऋषभ कटुवाल | अनुसूची ९ (क) १३१ | |
| ६ | सन्देश गौतम | सगुन शर्मा | अनुसूची ९ (क) २२१ | |
| ७ | कुमार पोखरेल | युवराज पोखरेल | अनुसूची ९ (क) ३०५ | |
| ८ | अनिश बुढाथोकी | अमर अधिकारी | अनुसूची ९ (क) ४३९-४ | |
| ९ | भरत अधिकारी | राजन अधिकारी | अनुसूची ९ (क) ९१ | |
| १० | रमेशजंग शाही | हरी भण्डारी | अनुसूची ९ (क) १२४ | |
| ११ | सुदनजंग क्षेत्री | राम सुवेदी | अनुसूची ९ (क) ३२८-७ | |
| १२ | खिमराज पौडेल | कपिल खनाल | अनुसूची ९ (क) ४६ | |
| १३ | निर्मल केसी | रमेश कटुवाल | अनुसूची ९ (क) १०३ | शरणार्थी परिचय पत्र द.नं. ५५१-१५८१५२०६ |
| १४ | शंकर न्यौपाने | अर्जुन काफ्ले | अनुसूची ९ (क) १३६ | |
| १५ | माधव केसी | दामोदर शुबेदी | अनुसूची ९ (क) ३२८-६ | |
| १६ | देवबहादुर केसी | रुपेश बस्नेत | अनुसूची ९ (क) २९५ | |
| १७ | मोहन पाण्डे | हरी शर्मा | अनुसूची ९ (क) १६ | |
| १८ | कोमलबहादुर बिष्ट | नविन पौडेल | अनुसूची ९ (क) ८६ | |

| १९ | द्रोणबहादुर अधिकारी | उपेन्द्र अधिकारी | अनुसूची ९ (क) ५४-१ | |
|---|---|---|---|---|
| २० | तेन्जिना लम्साल | शारदा चौलागाई | अनुसूची ९ (क) ११९ | |
| २१ | राजकुमार ओली | भरत अधिकारी | - | नामावली नभेटिएको |
| २२ | भुपेन्द्र बुढाथोकी | रामजी प्रसाद तिवारी | अनुसूची ९ (क) ७५ | |
| २३ | बिशाल केसी | अंकित तिवारी | अनुसूची ९ (क) ७४ | |
| २४ | निर्मला लम्साल | सोविता शर्मा | अनुसूची ९ (क) ३२६ (१) | |
| २५ | बिरेन्द्र कुमार ओली | रेमन्त पौडेल | अनुसूची ९ (क) ६५ | |
| २६ | मिना राणा | सिम्रन थापा | - | नामावली नभेटिएको |
| २७ | घनश्याम बस्नेत | सुमन राई | अनुसूची ९ (क) ३०२ | |
| २८ | राजेशराज डांगी | रिजन गुरुङ | - | शरणार्थी परिचय पत्र द.नं. ८५२-१७१५३२०८ |
| २९ | पदम आचार्य | टेकनाथ सुवेदी | अनुसूची ९ (ख) को १०२ (१) | शरणार्थी परिचय पत्र द.नं. १०८२-१७११२४१५ |
| ३० | दिपेश गौतम | सुनिल अधिकारी | अनुसूची ९ (क) ३२९-४ | शरणार्थी परिचय पत्र द.नं. १२८-१७२७४४१३ |
| ३१ | घनश्याम भण्डारी | कुशल श्रेष्ठ | - | नामावली नभेटिएको |
| ३२ | शुरेश गौतम | राजन नेपाल | - | नामावली नभेटिएको |
| ३३ | बालाराम डाँगी | नरेन्द्र अधिकारी | अनुसूची ९ (क) ३२९-१ | |
| ३४ | शुशिल ओली | बरुण थापा | अनुसूची ९ (क) १७८ | |
| ३५ | भुप बाहदुर डाँगी | डम्बर अधिकारी | अनुसूची ९ (क) ४३९-३ | |
| **३६** | दिपेन्द्र बुढाथोकी | टेक मैनाली | अनुसूची ९ (क) **३२५-३** | शरणार्थी परिचय पत्र द.नं. ३५६-१११९२०९ |
| ३७ | प्रमोद राणा | कृष्ण क्षेत्री | अनुसूची ९ (क) ३८० | |
| ३८ | रन्जित अधिकारी | महेश कार्की | अनुसूची ९ (क) १६९ | शरणार्थी परिचय पत्र द.नं. ८४३-३३८९१९ |
| ३९ | राजन लामिछाने | विवेक शर्मा | - | नामावली नभेटिएको |
| ४० | निकेश केसी | प्रकाश खड्का | अनुसूची ९ (क) २८७ | |
| ४१ | राकेश लामिछाने | समिर अधिकारी | अनुसूची ९ (क) ३०३ | |
| ४२ | प्रकाश बस्नेत | संजय खत्री | अनुसूची ९ (क) १५५ | |
| ४३ | श्याम सुन्दर बस्नेत | रमेश बस्नेत | अनुसूची ९ (क) ८४ (१) | |
| ४४ | राजिव केसी | पवन रिजाल | अनुसूची ९ (क) ३०८ | |
| ४५ | दिलिप लामिछाने | जिवन आचार्य | अनुसूची ९ (क) १८ | |
| ४६ | सजित गिरी | आशिष गुरुङ | अनुसूची ९ (क) १० | |
| ४७ | भविन्द्र प्रसाद पगाली | लिला थापा | अनुसूची ९ (क) ६१ | |
| ४८ | टोपेन्द्र डांगी | मनोज खनाल | अनुसूची ९ (क) ८९ | |
| ४९ | हरिश कोरल | मिलन बुढाथोकी | अनुसूची ९ (क) १९ | |

| ५० | उज्ज्वल रिजाल | नारायण प्रसाद दाहाल | अनुसूची ९ (क) ९६ | |
|---|---|---|---|---|
| ५१ | प्रेमनाथ योगी | निर्देश खड्का | अनुसूची ९ (क) ९४ | |
| ५२ | लेखनाथ योगी | रविन पौडेल | अनुसूची ९ (क) ६६ | |
| ५३ | निर्जन ओली | राम आचार्य | अनुसूची ९ (क) ११५ | |
| ५४ | अमृत कंडेल | राममणी आचार्य | अनुसूची ९ (क) ७६ | शरणार्थी परिचय पत्र द.नं. ७८८-१९१४०५ |
| ५५ | अञ्जना मल्ल | रेणु भण्डारी | अनुसूची ९ (क) ३०६ | |
| ५६ | रोशी रेग्मी | लक्ष्मीमाया तामाङ | - | नामावली नभेटिएको |
| ५७ | दिपेन्द्र लामिछाने | सुर्यराज शर्मा | अनुसूची ९ (क) ०७ | |
| ५८ | दिपक केसी | उमेश बस्नेत | अनुसूची ९ (क) ८८ | |
| ५९ | धनबहादुर भण्डारी | आशिष अधिकारी | अनुसूची ९ (क) ४२ | |
| ६० | भरत केसी | यमन थापा | अनुसूची ९ (क) ३६ | |
| ६१ | तुलसीराम केसी | राजन पन्थी | - | नामावली नभेटिएको |
| ६२ | रामकुमार रेग्मी | - | - | |
| ६३ | श्रवण कुमार रेग्मी | कृष्ण पाण्डे | - | |
| ६४ | कल्पना रेग्मी | - | - | |
| ६५ | उपेन्द्र बुढाथोकी | रामजी प्रसाद तिवारी | - | Name List मा भूपेन्द्र बुढाथोकी नाम रहेको। |
| ६६ | राजेश अर्याल | मिलन उप्रेती | - | |
| ६७ | बिराज पाण्डे | - | - | |
| ६८ | डम्बर खत्री | गंगाराम खनाल | - | |
| ६९ | यज्ञ ओली | सुक बहादुर राई | - | |
| ७० | समिर लामिछाने | तुलसीराम शर्मा | अनुसूची ९ (ख) को ३८(२) | ट्राभल डकुमेन्ट समेत बनेको देखिएको। |
| ७१ | गौतम गिरी | - | - | |
| ७२ | सुजल के.सी. | राजु सुब्बा | - | |
| ७३ | असिम ओली | सन्तोष थापा | - | |
| ७४ | चन्द्रबहादुर खड्का | कृष्ण कुमार तामाङ | - | |
| ७५ | पदम सिंह खत्री | होमनाथ चौधरी | - | |
| ७६ | महेन्द्र कुसारी | अर्जुन भण्डारी | अनुसूची ९ (ख) ४३(५) | |
| ७७ | मानबहादुर खत्री | किरण पौडेल | - | |
| ७८ | मनिष डिसी | अविनाश सुब्बा | - | अनुसूची ९(ख) को ६१ (४) मा अभिषेक सुब्बा रहेको |
| ७९ | मुमकान्त पान्डे | | | Name List निमाकान्त पाण्डे रहेको। |
| ८० | मनोज केसी | बिक्रम बस्नेत | अनुसूची ९ (क) २८८ | |
| ८१ | अनुदान बस्नेत | आकाश कार्की | - | |

माथि उल्लेखित तालिका विवरण अध्ययन गर्दा जाहेरवालाहरुले जाहेरीमा संलग्न गरेका पीडितहरुको नामावली "भुटानी शरणार्थी सम्बन्धि समस्याको स्थायी र दीर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित

कार्यदलको प्रतिवेदन" को अनुसूची-९ (क) र अनुसूची-९ (ख) अन्तर्गतका नामावली विवरणहरुमा भेटिएको देखिएको । मिति २०७९।१२।०५ गते अर्का जाहेरवाला गजेन्द्र बुढाथोकीकी श्रीमती प्रितम शर्माले निजको श्रीमान् गजेन्द्र बुढाथोकी र विपक्षी सन्देश शर्मा वीच भएको फोन कुराकानीको अडियो क्लिपहरु सुरक्षित रहेको सिडि थान-१ आवाश्यक अनुसन्धानका लागि यस कार्यालयमा पेश गरेको; उक्त सिडिमा रहेको अडियो क्लिपहरु मध्ये VOICE RECORD-1 ८ मिनेट २१ सेकेन्ड, VOICE RECORD-2 २ मिनेट ०६ सेकेन्ड, VOICE RECORD-3 १ मिनेट ३५ सेकेन्ड लामो रहेको देखिएको,प्रस्तुत मुद्दामा जाहेरवाला रामकुमार रेग्मीको श्रीमती सुनिता रेग्मीको निवेदनसाथ पेश हुन आएको "भुटानी शरणार्थी सम्बन्धि समस्याको स्थायी र दीर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन" नामक बाइन्डिङ गरिएको फाइल र अर्का जाहेरवाला गजेन्द्र बुढाथोकीकी श्रीमती प्रितम शर्माले निजको श्रीमान् गजेन्द्र बुढाथोकी र विपक्षी सन्देश शर्मा वीच भएको फोन कुराकानीको अडियो क्लिपहरु सुरक्षित रहेको सि.डी.थान-१ भित्र रहेका अडियोहरु समेतको आधिकारिकता परीक्षण गरि प्रमाणमा लगाई पाउँ ।

यसरी माथी उल्लेखित आधार कारणहरुबाट बिपक्षीहरु सन्देश शर्मा, केशब प्रसाद दुलाल समेतको मिलेमतोमा लक्ष्मी महर्जन, हरिभक्त महर्जन, केशव तुलाधर समेतको बैक खाता प्रयोग गरी ठगी गर्ने योजना बनाई नेपाल सरकारका उच्च अधिकारीहरुसँग सम्पर्क गरी रहेका छौ भनी फोन गरेर सुनाउदै सेटिङ्ग मार्फत भुटानी शरणार्थी बनाई अमेरिकामा पठाई दिन्छु भनी बिश्वास दिलाई जाहेरवालाहरू समेतबाट जम्मा रु.१३,६३,००,०००।- (तेह्र करोड त्रिसठ्ठी लाख) रकम लिई ठगी गरेको खुल्न आएको हुँदा निजहरूलाई कानुन बमोजिम पक्राउ गरी अनुसन्धान गर्नु पर्ने देखिएको हुँदा सोही व्यहोराको प्रतिवेदन लेखि पेश गरेका छौँ। कानुन बमोजिम गरी पाउँ भन्ने व्यहोराको काठमाडौं उपत्यका अपराध अनुसन्धान कार्यालय मिनभवनमा कार्यरत प्र.नि.दयाकृष्ण भट्ट समेले पेश गरेको प्रतिवेदन ।

**(ख) <u>अडियो रेकर्ड लिपिबद्ध गरेको प्रहरी प्रतिवेदन:</u>**

गजेन्द्र बुढाथोकी समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी केशव प्रसाद दुलाल समेत भएको ठगी सम्बन्धी मुद्धाको अनुसन्धानको शिलशिलामा पक्राउमा परी आएका प्रतिवादी केशव प्रसाद दुलाल र सानु भण्डारीसँग जाहेरवाला रोशन खरेलले गरेको कुराकानी अडियोमा रहेको हुँदा उक्त अडियोमा रहेको कुराकानीलाई लिपिबद्ध गरी उक्त कुराकानी पाना-१३ यसै प्रतिवेदन साथ पेश गरेको छु, मिसिल संलग्न गरी प्रमाण लगाई पाउँ । वयान गराउनको लागी जिल्ला सरकारी वकील कार्यालय काठमाण्डौमा उपस्थित गराईएको अबस्थामा निज प्रतिवादीहरुलाई जिल्ला सरकारी वकील कार्यालयका जिल्ला न्यायाधिवक्ता तथा यस कार्यालयका अनुसन्धान अधिकृत समेतले जाहेरवाला गजेन्द्र बुढाथोकी समेतले दिएको जाहेरी दरखास्तमा उल्लेख भएको ठगी सँग सम्बन्धित विषय बस्तुहरुको सम्बन्धमा प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारीलाई सोधपुछ गरिएकोमा निजहरुले मौकामा वताएको कुराहरु मोवाईलमा रेकर्ड गरिएको हुँदा, निजहरुले बोलेको उक्त अडियो रेकर्डलाई मोवाईलबाट पेन ड्राईभमा राखी यसै प्रतिबेदन साथ पेश गरेको छु, मिसिल संलग्न गरी प्रमाण लगाई पाउँ भन्ने व्यहोराको प्र.ब.ना.नि.विष्णु खतिवडाले पेश गरेको प्रतिवेदन ।

**ग) <u>ठगी सम्बन्धी कसूर मुद्दालाई संगठित अपराध मुद्दामा परिवर्तनकोलागी पेश भएको प्रहरी प्रतिवेदन:</u>**

गजेन्द्र बुढाथोकी समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी केशव प्रसाद दुलाल समेत भएको ठगी मुद्दामा प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी, सन्देश शर्मा, सागर राई, टंक कुमार गुरूङ लगायत जाहेरीमा नाम खुलेका अन्य प्रतिवादीहरु तथा वारदातमा संलग्न रही हाल सम्म फरार रहेका प्रतिवादी लक्ष्मी

महर्जन, केशव तुलाधर, अशोक पोखरेल समेतले बिभिन्न व्यक्तिहरु सँग पहुच पुऱ्याई नक्कली कागजातहरु तयार पारी सोही आधारमा जाहेरवालाहरु तथा निजहरुको चिनजानका अन्य आफन्त तथा ईष्टमित्रहरु समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी बिभिन्न प्रकाको लोभ लालच र प्रलोभनमा पारी बिभिन्न कुरा गरी विश्वास दिलाई प्रति व्यक्ति रु.१५ लाख देखी रु.२० लाख सम्म संकलन गरी निजहरुले संकलन गरेको उक्त बिभिन्न व्यक्तिहरुको खातामा जम्मा गर्न लगाउने तथा केही रकम नगदै लिई बिभिन्न उच्च पदस्थ व्यक्तिहरुलाई दिएको भनी रकम आफुले खाई मासी जाहेरवालाहरुलाई भने अनुसार अमेरिका नपठाई दिई रकम लिई ठगी गरेको भन्ने प्रष्ट हुन आएको र सो वारदातमा पक्राउ प्रतिवादी बाहेक अन्य बिभिन्न व्यक्तिहरु समेत संलग्न रही जाहेरवालाहरुलाई ठगी गरेको प्रष्ट भएकोले उक्त कार्य मुलुकी अपराध संहिता २०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिमको कसुर अपराध गरेको देखिँदा प्रस्तुत ठगी सम्बन्धी कसूर मुद्दाको अनुसन्धानको क्रममा तिन जना भन्दा बढी अपराधिक व्यक्तिहरुको संलग्नतामा योजनाबद्ध तवरले प्रतिवादीहरुले जाहेरवालहरुसँग ठुलो मात्रामा रकम संकलन गरी नक्कली सरकारी कागजातहरु तयार गरी भुटानी शरणार्थीको पहिचान कायम हुने गरी अमेरिका पठाउने प्रयोजनार्थ नियोजित रुपले ठुलो संख्यामा नेपाली नागरिकबाट क्षेत्रगत रुपले बिचौलियाहरु परिचालन गरी रकम संकलन गरी तहगत रुपमा बिचौलियाहरुले बुझी ठगी गर्ने अपराधिक प्रवृति देखिएको र ठगीमा परिएका भनीएका व्यक्तिहरुलाई तहगत विचौलियाहरुको पहिचान नहुने गरी (cut of layer) कायम गरी ठगी गर्ने कार्य भएकोले तथा तथा गृह मन्त्रालय बाट गठन गरिएको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिबेदन समेत नक्कली बनाएको र सो विषय राष्ट्रिय तथा अन्तराष्ट्रिय रुपमा प्रभावित विषय समेत भएको र निज प्रतिवादीहरु तथा जाहेरवालाहरु विचमा भएको कुराकानीको अडियो रेकर्ड सुन्दा निज प्रतिवादीहरुले विचौलिया मानिस खडा गरी रकम उठाउने र उठाएको रकम बिभिन्न व्यक्तिहरुलाई बुझाएको हाल सम्मको अनुसन्धान बाट देखिन आएको हुदा निज प्रतिवादीहरुले आपसमा कामको बाँडफाँड गरी संगठित तवरले जघन्य अपराध गरेको देखिएको। संगठित अपराध गर्न नहुने : कसैले संगठित अपराध गर्ने गराउन हुँदैन भनी संगठित अपराध निवारण ऐन २०७० को दफा ३ (१) मा उल्लेख भएकोमा सोही ऐनको उपदफा (२) मा उपदफा १ को प्रयोजनका लागी "कसैले आपराधिक समूहको लाभको लागि, आपराधिक समूहको निर्देशनमा, आपराधिक समूहको तर्फबाट, आपराधिक समूहसँग मिलेर वा आपराधिक समूहको संस्थापक सदस्य वा सदस्य भई जानी जानी कुनै गम्भीर अपराध गरेमा निजले संगठित अपराध गरेको मानिनेछ" भनी परिभाषित गरेको र सोही दफाको उप-दफा (३) मा यस दफाको प्रयोजनको लागी देहायको कसूर गम्भीर अपराध मानिनेछ भनी खण्ड (क) मा प्रचलित कानून बमोजिम तीन बर्ष भन्दा बढी कैद सजाय हुने कसूर भनी उल्लेख भएको हुँदा पक्राउ प्रतिवादीहरू केशव प्रसाद दुलाल , सानु भन्डारी, सन्देश शर्मा, सागर राई, टंक कुमार गुरूङ तथा वारदातमा संलग्न रही हाल सम्म फरार रहेका प्रतिवादी लक्ष्मी महर्जन, केशव तुलाधर, अशोक पोखरेल समेतले ठगी सम्बन्धी कसुर संगठित तवरले गरिएको उक्त जघन्य अपराधलाई संगठित अपराधमा थप अनुसन्धान गर्नु पर्ने देखिएको हुदा ठगी मुद्दामा पक्राउमा परी अनुसन्धान भई रहेका निज प्रतिवादीहरु उपर संगठित अपराध निवारण ऐन २०७० बमोजिम अनुसन्धान गरी पाउन यो प्रतिवेदन लेखी पेश गरेका छु भन्ने व्यहोरा उल्लेख गरी प्र.नि.दिपेश बस्यालले पेश गरेको प्रतिवेदन।

**घ) मानिस पक्राउ गरी अनुसन्धान गर्नको लागी पेश भएको प्रहरी प्रतिवेदन:**

गजेन्द्र बुढाथोकी समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी केशव प्रसाद दुलाल समेत भएको ठगी तथा संगठित अपराध समेत मुद्धाको अनुसन्धानको सिलसिलामा पक्राउमा परी आएका प्रतिवादी सानु भण्डारीको अधिकार प्राप्त अधिकारी समक्ष वयान हुँदा जाहेरवालाहरु समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी विश्वास दिलाएको र सो कार्यको लागी रकम लिएकोमा उक्त रकम मध्ये मैले टोप बहादुर रायामाझीलाई पटक-पटक गरी रु.२,००,००,०००।–(दुई करोड) दिएको र सो रकम मध्ये केही रकम निजको छोरा सन्दिप रायामाझीको बैंक खातामा समेत पठाई दिएको, तत्कालिन गृहमन्त्रीका स्वकिय सचिव डा.ईन्द्रजित राई र निजको छोरा निरज राईलाई बिभिन्न मितिमा बिभिन्न ठाउँमा भेटी पटक-पटक रु.४,५०,००,०००।–(चार करोड पचास लाख) वुझाएको भनी वयानमा खुलाई लेखाई दिएको हुँदा निजले वयानमा खुलाएको विषयवस्तुको सम्बन्धमा अनुसन्धान गर्दै जाने क्रममा निज प्रतिवादी सानु भण्डारीको जिल्ला ललितपुर, महालक्ष्मी नगरपालिका वडा नं.-४ मा रहेको घर/कोठा खानतलासी गर्ने क्रममा मिति २०८०।०१।०६ गते निजको घरको तेश्रो तलामा रहेको दराज भित्रबाट २०१६ NABIL BANK लेखिएको हरियोमा रातो रङ मिसिएको डायरी फेला परेको हुँदा सो डायरी वरामद गरी ल्याएको र उक्त डायरीको पाना 29 सुक्रबार १५ माघ २०७२ साल लेखिएको पानामा सन्दिप रायामाझी भाईलाई दिएको रकम विवरण शिर्षकमा २०७४-१-४ गते देखी २०७४।१२।३० सम्म पटक-पटक गरी २० पटकमा रु.६९,६५,५००।–(उनान्सत्री लाख पैंसठ्ठी हजार पाँच सय) दिएको भनी लेखिएको,सोही डायरीको 3February बुधबार २० माघ २०७२ साल लेखिएको पानामा टोप बहादुर मामलाई दिएको विबरण शिर्षकमा २०७३।१२।१० देखी २०७४।०२।१० सम्म ३ पटक-पटक गरी रु.५,४५,०००।–(पाँच लाख पैंतालिस हजार) दिएको भनी लेखिएको, सोही बरामदी डायरीको 14 April 2016 बिहिवार बैशाख २०७३ साल लेखिएको पानामा भुटानी शरणार्थी रकमबाट खर्च भएको विवरण शिर्षकमा मिति २०७६।०३।१९ गते सन्दिप भाईलाई दिएको भनी रु.२०,००,०००।–(बिस लाख), २०७६।०३।२० गते टोप मामालाई नगद दिएको रु.५,००,०००।–(पाँच लाख), २०७६।०३।२८ गते टोप मामालाई दिएको रु.३,००,०००।–(तिन लाख), 21 April बिहिबार, ९ वैशाख २०७३ साल लेखिएको पानामा भुटानी शरणार्थीको लागी शिर्षकमा निरज सरलाई नगद दिएको भन्ने शिर्षकमा २०७६।३।२ गते नगद रु.५०,००,०००।–(पचास लाख),२०७६।०३।२३ गते निरज राई सरलाई दिएको रु.३५,००,०००।–(पैंतिस लाख), २०७६।०३।२६ गते निरज राई सरलाई फेरी नगद र डा.ईन्द्रजित राई सरलाई दिएको रु.६५,००,०००।–(पैंसठ्ठी लाख) भनी लेखिएको पाईएको हुँदा निजले वयानमा खुलाए अनुसार डा.ईन्द्रजित राई, निजको छोरा निरज राई, टोप बहादुर रायामाझी र निजको छोरा सन्दिप रायमाझी लाई भुटानी शरणार्थी बनाई अमेरिका जाने तथा पठाउने कार्यको लागी भनी बिभिन्न व्यक्तिहरुसँगबाट रकम उठाई डा.ईन्द्रजित राई, छोरा निरज राई, टोप बहादुर रायमाझी र छोरा सन्दिप रायामाझीलाई दिएको भन्ने वयानमा खुलाएको कुरालाई पुष्टी गरेको र अर्का प्रतिवादी केशव प्रसाद दुलालले प्रयोग गर्ने गरेको सामसुङ कम्पनीको मोवाईलमा रहेको Viber Account (Keshab+9863591446 बाट TNPNDAY2(9860052100)को Viber Account प्रयोग गर्ने व्यक्तिलाई Rcu le beldagi camp ma sindhupalchook tiraka manxe haruko photo khicheko vanne notice aayako xa bujnu paryo hajur भनेको र निजले Huss लेखेको, Sir Refusee Card holder ko matra lagat liyeko xare CA, new entcry&non entery ko iagat liyeko xana re sabaiko garne hoenarhajur, sir Bikranta Basnet name gareko manxe la hajur ko name

liyera Bhutanese Refusee ko 70,80 Janako card and travel Document banauxu vanera hidiraheko xare hajur भन्ने व्यहोराको म्यासेज पठाएको साथै भुटानी शरणार्थीको पुन:गणना शुरु शिर्षकको ekantipur को समाचार समेत पठाएको देखिएको साथै सोही TNPNDAY2(9860052100) मा भुटानी शरणार्थी सम्बन्धी Namelist भनी अनिता रास्कोटी लगायत ६८ जना व्यक्तिहरुको नामवली पठाएको देखिएको हुदा उक्त Viber Account प्रयोग गर्ने व्यक्तिले प्रतिवादी केशव प्रसाद दुलाललाई सर-सहयोग गरी भुटानी शरणार्थी सम्बन्धी सूचना आदान-प्रदान गर्ने कार्य गरेको भन्ने कुरा परीक्षण प्रतिबेदनबाट समेत देखिएको हुँदा यस मुद्धामा TNPNDAY2(9860052100) को Viber Account प्रयोग गर्ने व्यक्तिको समेत प्रत्यक्ष रुपमा संलग्न रहेको भन्ने अनुसन्धानबाट देखिन आएको हुँदा माथी उल्लेखित डा.ईन्द्रजित राई, निजको छोरा निरज राई, टोप बहादुर रायमाझी र निजको छोरा सन्दिप रायामाझी र TNPNDAY2(9860052100) भन्ने व्यक्तिहरुको हकमा समेत पक्राउ अनुमति लिई थप अनुसन्धान गरी पाउँ भनी यो प्रतिबेदन लेखी पेश गरेको छु, कानून बमोजिम गरी पाउँ भन्ने व्यहोरा उल्लेख गरी प्र.नि.दिपेश बस्यालले पेश गरेको प्रतिवेदन।

३३. **गृह मन्त्रालयको पत्र**:

क) गृह मन्त्रालय स्थानिय प्रशासन तथा प्रदेश समन्वय शाखा शरणार्थी मामिला समन्वय सम्बन्धी राष्ट्रिय ईकाईको च.नं.७२४ मिति २०७९।१२।१६ को पत्र अनुसार तेश्रो मुलुक पुनर्स्थापना पश्चात बाँकी रहेका शरणार्थीहरुको सन्दर्भमा भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालिन समाधान पहिल्याउन यस मन्त्रालयको मिति २०७९।०२।३० गते माननिय मन्त्रीस्तरिय निर्णय अनुसार पूर्व सह-सचिव बालकृष्ण पन्थीको संयोजकत्वमा ३ सदस्य कार्यदल गठन गरिएको, उक्त समितीले ०७६।०७।०१ गते २८९ पानाको प्रतिवेदन मन्त्रालयमा पेश गरेको भन्ने समेत व्यहोराको पत्र।

ख) गृह मन्त्रालय स्थानिय प्रशासन तथा प्रदेश समन्वय शाखा शरणार्थी मामिला समन्वय सम्बन्धी राष्ट्रिय ईकाईको च.नं.७४१ मिति २०८०।०१।०३ गतेको पत्र अनुसार पुनर्स्थापन पश्चात हाल नेपालमा बाँकी रहेका भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधानका उपायहरुको प्रतिवेदन उपर छलफल भई निर्णय सहितको पत्र।

ग) गजेन्द्र बुढाथोकी समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी केशव प्रसाद दुलाल समेत भएको ठगी सम्बन्धी मुद्दाको अनुसनधानको सिलसिलामा तालुक मन्त्रालयबाट भुटानी शरणार्थी सम्बन्धी समस्याको स्थायी र दिर्घकालिन समाधानको उपायहरु पहिल्याउन पूर्व सह-सचिव बाल कृष्ण पन्थीको संयोजकत्वमा गठित कार्यदल २०७६ को प्रतिवेदन पश्चात भुटानी शरणार्थी बिषयमा यस मन्त्रालयबाट हाल सम्म भएका परिपत्रहरुको प्रमाणित प्रतिलिपीहरु उपलब्ध गराई दिन अनुरोध भई आएकोमा तपसिल बमोजिमका परिपत्र तथा सम्बन्धीत कागजातहरुको प्रमाणित प्रतिलिपीहरु उपलब्ध गराईएको व्यहोरा मिति २०८०।०१।२५ गतेको सचिव स्तरिय निर्णयानुसार अनुरोध गरिएको छ भन्ने व्यहोराको गृह मन्त्रालयको च.नं.८२८ मिति २०८०।०१।२५ गतेको पत्र।

घ) गजेन्द्र बुढाथोकीको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी केशव प्रसाद दुलाल समेत भएको ठगी तथा संगठित अपराध सम्बन्धी मुद्दाको अनुसन्धानको सिलसिलामा यस मन्त्रालयबाट भुटानी शरणार्थी सम्बन्धी समस्याको स्थायी र दिर्घकालिन समाधानको उपायहरु पहिल्याउन गठित कार्यदलले मिति २०७६।०७।०१ गते पेश गरेको प्रतिवेदनलाई मिति २०७६।०८।१७ गते मन्त्रीपरिषदमा पेश भई प्रतिवेदन मन्त्रीपरिषदको सामाजिक समितीमा छलफल गरी पेश गर्ने गरी मिति २०७७।११।११ गते भएको निर्णय यस मन्त्रालयबाट प्रस्ताव सहित पेश भएको प्रतिवेदन र सोही बिषयमा मिति २०७८।०८।१३ गते यस मन्त्रालयबाट प्रशताव सहित पेश भएको

प्रतिवेदन अनुसन्धानको क्रममा आवश्यक परेकोले उपलब्ध गराई दिनहुन अनुरोध भई आएकोमा प्रधानमन्त्री तथा मन्त्रीपरिषदको कार्यालयको च.नं.३२१/६२९८ मिति २०८०।०१।२६ को पत्रमार्फत मन्त्रीपरिषदको मिति २०७८।०८।१७ को निर्णयमा समावेश प्रतिवेदनको छायाँ प्रति पठाईएको साथै यस पूर्व तहाँ पठाईएको च.नं.८४० मिति २०८०।०१।२६ गते संलग्न प्रतिवेदनमा देहाय बमोजिमफरक पर्न गएको भन्ने व्यहोराको च.नं.८४३ मिति २०८०।०१।२६ गतेको पत्र।

**३४. सनाखत मुचुल्का कागजहरु:-**

क) **ओपेन्द्र बुढाथोकीले गरेको सनाखत मुचुल्का कागज**:

लिखितम जिल्ला बाँके, कोहलपुर नगरपालिका वडा नं.-६ घर भई हाल जिल्ला काठमाण्डौ, बुढानिलकण्ठ नगरपालिका वडा नं.- १० कपन बस्ने लोक बहादुर बुढाथोकीको छोरा वर्ष ५४ को ओपेन्द्र बहादुर बुढाथोकी आग्ये,राम कुमार रेग्मी समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी सन्देश शर्मा समेत भएको ठगी मुद्धाको अनुसन्धानको सिलसिलामा मिति २०७९।१२।२९ गते पक्राउमा परी आएका प्रतिवादी सन्देश शर्मालाई तपाईबाट सनाखत गराउनु पर्ने भएको हुँदा निज प्रतिवादीलाई यस कार्यालयको हिरासतबाट निकाली अपराध अनुसन्धान शाखामा ल्याई तपाईलाई देखाईन्छ, निज प्रतिवादी सन्देश शर्माले तपाई समेतलाई भुटानी सरणार्थी बनाई अमेरिका लगि दिने भनी बिभिन्न नक्कली कागज पत्र समेत बनाई सोही नक्कली कागज पत्र तपाईलाई देखाई तपाई लगायत तपाईको श्रीमती समेतलाई जनही रु.२०,००,०००।–(विस लाख) को दरले रकम लिई ठगी गर्ने व्यक्ति हुन होईनन ? हेरी, देखि, चिनी सनाखत समेत गरी दिनु होस भनी मलाई अनुसन्धान अधिकृतबाट सोधनी हुँदा मेरो चित्त बुझ्यो यसमा मलाई देखाईएका सन्देश शर्मालाई देखाउँदा देखि पाएँ, निज व्यक्तिले नै म लगायत मेरो श्रीमती, साला समेतलाई भुटानी शरणार्थीको कागज पत्र बनाई सोही कागज पत्रको आधारमा अमेरिका लगि दिने भनी जनही रु.२०,००,०००।–(बिस लाख) रकम लिने व्यक्ति यी नै सन्देश शर्मा हुन भनी निजलाई हेरी, चिनी सनाखत समेत गरी यो सनाखत मुचुल्का गरी दिएको छु भनी ओपेनद्र बुढाथोकीले गरेको सनाखत मुचुल्का कागज।

ख) **भेषराज शर्मा लम्सालले गरेको सनाखत मुचुल्का कागज**:

लिखितम जिल्ला कास्की पोखरा महानगरपालिका वडा नं.-१७ बिरौटा बस्ने वर्ष ४९ को भेषराज शर्मा लम्साल आग्ये,राम कुमार रेग्मी समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी सानु भण्डारी समेत भएको ठगी तथा संगठित अपराध मुद्धाको अनुसन्धानको शिलशिलामा मिति २०७९।१२।१२ गते पक्राउमा परी आएका प्रतिवादी सानु भण्डारी र केशव प्रसाद दुलाललाई तपाईबाट सनाखत गराउनु पर्ने भएको हुँदा निज प्रतिवादीहरुलाई हिरासतबाट निकाली अपराध अनुसन्धान शाखामा ल्याई तपाईलाई देखाईन्छ, निज प्रतिवादीहरु सानु भण्डारी र केशव प्रसाद दुलालले तपाईको आफन्तहरु तथा साथीभाईहरु समेतलाई भुटानी सरणार्थी बनाई अमेरिका लगी दिने भनी बिभिन्न नक्कली कागज पत्र समेत बनाई सोही नक्कली कागज पत्र तपाईलाई देखाई तपाई लगायत तपाईको आफन्त र साथीभाईहरु समेतलाई विश्वासमा पारी भुटानी शरणार्थीको रुपमा अमेरिका पठाई दिने भनी तपाईसँगबाट रकम लिने सानु भण्डारी र केशव प्रसाद दुलाल भन्ने व्यक्ति हुन होईनन ? हेरी, चिनी सनाखत समेत गरी दिनु होस भनी मलाई अनुसन्धान अधिकृतबाट सोधनी हुदा मेरो चित्त बुझ्यो यसमा मलाई देखाईएका प्रतिवादी सानु भण्डारी र केशव प्रसाद दुलाललाई देखाउँदा देखि पाएँ, निज व्यक्तिहरुले नै म बाट चेक तथा नगद गरी जम्मा रकम रु.३,३९,४७,०००।–(तिन करोड उनन्चालिस लाख सढचालिस हजार) लिएका हुन निज व्यक्तिहरुले नै मेरा आफन्त तथा साथीभाईहरु समेतलाई भुटानी शरणार्थी

बनाई अमेरिका लगी दिने भनी विश्वासमा पारी नगद रकम तथा चेक समेतबाट रकम लिई भने अनुसार काम समेत नगरी दिई रकम लिई ठगी गरेका हुन भनी निजहरुलाई हेरी, चिनी सनाखत समेत गरी यो सनाखत मुचुल्का गरी दिएको छु भनी भेषराज शर्मा लम्सालले गरेको सनाखत मुचुल्का कागज।

ग) **डम्बर बहादुर खत्रीले गरेको सनाखत मुचुल्का कागज**:

लिखितम जिल्ला दाङ शान्तिनगर गाउँपालिका वडा नं.-२ बस्ने वर्ष ३९ को डम्बर बहादुर खत्री आगे, तपाई समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी सन्देश शर्मा समेत भएको ठगी मुद्दाको अनुसन्धानको सिलसिलामा मिति २०७९।१२।२९ गते पक्राउमा परी आएका प्रतिवादी सन्देश शर्मालाई तपाईबाट सनाखत गराउनु पर्ने भएको हुँदा निज प्रतिवादीलाई यस कार्यालयको हिरासतबाट निकाली अपराध अनुसन्धान शाखामा ल्याई तपाईलाई देखाईन्छ, निज प्रतिवादी सन्देश शर्माले तपाईं समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी बिभिन्न नक्कली कागज पत्र समेत बनाई सोही नक्कली कागज पत्र तपाईलाई देखाई उक्त कागज पत्रको आधारमा भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी तपाईबाट रु.१५,५०,०००।–(पन्ध्र लाख पचास हजार) रकम लिई ठगी गर्ने व्यक्ति हुन/होईनन् ? हेरी, चिनी सनाखत समेत गरी दिनु होस भनी मलाई अनुसन्धानबाट सोधनी हुँदा मेरो चित्त बुझ्यो यसमा मलाई देखाईएका सन्देश शर्मालाई देखाउँदा देखि पाएँ,निज व्यक्तिले नै मलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी २०७७ सालमा काठमाडौंको बानेश्वरमा रहेको नाम थाहा नभएको अफिसमा लगी राम कुमार रेग्मी,सन्देश शर्मा र अर्का नाम थाहा नभएका १ जना व्यक्ति समेत ३ जना सँगै भएको अवस्थामा नगदै रकम रु.५,००,०००।–(पाँच लाख) दिएकोमा मैले दिएको उक्त रकम प्रतिवादी सन्देश शर्मासँगै रहेका अर्का व्यक्तिले झोलामा हाली लिएका हुन, यसै गरी निज प्रतिवादीहरुले वायोमेट्रिक गर्नको लागी पैसा चाहियो भनेको हुँदा मैले चितवनको सौराहामा लगी नगद रकम रु.७,५०,०००।–(सात लाख पचास हजार) प्रतिवादी सन्देश शर्मालाई दिएको हुँ, मैले सो रकम दिंदा राम कुमार रेग्मी, सन्देश शर्मा र अर्का मैले नचिनेको व्यक्ति समेत ३ जना सँगै भएको अबस्थामा दिएको हुँ, उक्त रकम दिई सके पछी पुन:मेडिकल गर्नु पर्ने भयो भनेको हुँदा मैले रु.३,००,०००।–(तिन लाख) बिराटनगरमा रहेको विराट नर्सिङ होममा लगी प्रतिवादी सन्देश शर्मालाई नै दिएको हुँ, म बाट रकम लिने व्यक्ति यीनै सन्देश शर्मा हुन भनी निजलाई हेरी, चिनी सनाखत समेत गरी यो सनाखत मुचुल्का गरी दिएको छु भनी डम्बर बहादुर खत्रीले गरेको सनाखत मुचुल्का कागज।

घ) **पदम सिंह खत्रीले गरेको सनाखत मुचुल्का कागज**:

लिखितम जिल्ला दाङ, शान्तिनगर गाउँपालिका वडा नं.-२ बस्ने वर्ष ४३ को पदम सिंह खत्री आगे, तपाई समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी सन्देश शर्मा समेत भएको ठगी मुद्दाको अनुसन्धानको सिलसिलामा मिति २०७९।१२।२९ गते पक्राउमा परी आएका प्रतिवादी सन्देश शर्मालाई तपाईबाट सनाखत गराउनु पर्ने भएको हुँदा निज प्रतिवादीलाई यस कार्यालयको हिरासतबाट निकाली अपराध अनुसन्धान शाखामा ल्याई तपाईलाई देखाईन्छ, निज प्रतिवादी सन्देश शर्माले तपाई समेतलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी बिभिन्न नक्कली कागज पत्र समेत बनाई सोही नक्कली कागज पत्र तपाईलाई देखाई उक्त कागज पत्रको आधारमा भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी तपाईंबाट रु.२०,००,०००।–(विस लाख) रकम लिई ठगी गर्ने व्यक्ति हुन/होईनन ? हेरी, चिनी सनाखत समेत गरी दिनुहोस भनी मलाई अनुसन्धान अधिकृतबाट सोधनी हुँदा मेरो चित्त बुझ्यो, यसमा मलाई देखाईएका सन्देश शर्मालाई देखाउँदा देखि पाएँ, निज व्यक्तिले नै मलाई भुटानी शरणार्थी बनाई अमेरिका लगी दिने भनी २०७७ सालमा काठमाडौंको बानेश्वरमा

रहेको नाम थाहा नभएको अफिसमा लगी राम कुमार रेग्मी, सन्देश शर्मा र अर्का नाम थाहा नभएका १ जना व्यक्ति समेत ३ जना सँगै भएको अवस्थामा नगदै रकम रु.५,००,०००।–(पाँच लाख) दिएकोमा मैले दिएको उक्त रकम प्रतिवादी सन्देश शर्मासंगै रहेका अर्का व्यक्तिले झोलामा हाली लिएका हुन, यसै गरी निज प्रतिवादीहरुले वायोमेट्रिक गर्नको लागी पैसा चाहियो भनेको हुँदा मैले चितवनको सौराहामा लगी नगद रकम रु.१०,००,०००।– (दस लाख) प्रतिवादी सन्देश शर्मालाई दिएको हुँ, मैले सो रकम दिंदा राम कुमार रेग्मी, सन्देश शर्मा र अर्का मैले नचिनेको व्यक्ति समेत ३ जान संगै भएको अवस्थामा दिएको हुँ, उक्त रकम दिई सके पछी पुन:मेडिकल गर्नु पर्ने भयो भनेको हुँदा मैले रु.५,००,०००।–(पाँच लाख) बिराटनगरमा रहेको विराट नर्सिङ होममा लगी प्रतिवादी सन्देश शर्मालाई नै दिएको हुँ, म बाट रकम लिने व्यक्ति यी नै सन्देश शर्मा हुन भनी निजलाई हेरी, चिनी सनाखत समेत गरी यो सनाखत मुचुल्का गरी दिएको छु भनी पदम सिंह खत्रीले गरेको सनाखत मुचुल्का कागज।

ङ) **गौतम गिरीले गरेको सनाखत मुचुल्का कागज**:

लिखितम् जिल्ला दाङ घोराही उप-महानगरपालिका वडा नं.-५ स्थायी वतन भएका रुद्र प्रशाद गिरीको छोरा बर्ष ३० को गौतम गिरी (ना.प्र.न.५२१०२१-६४२) आगे, गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरीले बादी नेपाल सरकार प्रतिवादी केशब प्रसाद दाहाल समेत भएको संगठित अपराध निवारण ऐन २०७० सम्बन्धी कसूर मुद्दाको अनुसन्धानको सिलसिलामा मिति २०७८ साल जेष्ठ महिनाको २६/२८ गते राम कुमार रेग्मीको घरबाट बा.१ झ.१५८५ नम्बरको सरकारी सेतो नम्बर प्लेट भएको गाडी चलाई लिई चितवन स्थित सौराहामा रहेको होटल भिजन सफारीमा लगेकोमा उक्त स्थानमा ५०/६० जना मानिस उपस्थित भई निजहरूको बायोमेट्रिकको काम गरी निजहरूबाट नगद रुपैया उठाई उक्त रकम सेतो बोरामा हाली रहेकोमा सन्देश शर्माले मलाई मैले चलाई लिई गएको बा.१ झ.१५८५ नम्बरको सरकारी सेतो नम्बर प्लेट भएको गाडीमा उक्त रकम हाल्देउ भनेकोले १ बोरा सो गाडीको सिटमा राखी दिएको थिए। म काम बिषेश काठमाण्डौ आउन खोज्दा राम कुमार रेग्मीले मलाई तिमीले सन्देश शर्माको गाडी चलाई काठमाण्डौ लिई जाउ भनेकोले सन्देश शर्माले मलाई निजको गाडीको चाबी दिएकोले मैले लिई गएको सरकारी गाडी त्यही छाडी सन्देश शर्माको गाडीको चाबी लिई काठमाण्डौ आएको थिए भनी अनुसन्धानको क्रममा खुलाई लेखाई दिएकोले अनुसन्धानको क्रममा पक्राउ परेका प्रतिवादीहरू सन्देश शर्मा लगायत अन्य प्रतिवादीहरू समेतको सनाखत गर्नु पर्ने भएकोले तपाईलाई यस कार्यालयमा बोलाई अनुसन्धानको क्रममा पक्राउ परेका प्रतिवादी सन्देश शर्मा समेतलाई देखाई सोधनी गरिन्छकि बा.१ झ.१५८५ नम्बरको सरकारी सेतो नम्बर प्लेट भएको गाडीमा १ बोरा रकम तपाईलाई राख्न लगाउने ब्यक्ती तथा अनुसन्धानको क्रममा पक्राउ परी आएका सन्देश शर्मा भन्ने ब्यक्ती एकै ब्यक्ती हुन वा फरक ब्यक्ती हुन ? हेरी चिनी सनाखत समेत गरी दिनु होस भनी अनुसन्धान अधिकारीबाट मलाई सोधनी भएकोमा यसमा मेरो चित्त बुझ्यो। उक्त स्थानमा अमेरीका जाने प्रकृयाको लागी अन्य मानिसहरूबाट उठाएको नगद रुपैया सेतो बोरामा संकलन गरी राखेको र उक्त रकम मध्ये १ बोरा रकम मलाई सन्देश शर्माले तिमिले चलाई लिई आएको बा.१ झ.१५८५ नम्बरको सरकारी सेतो नम्बर प्लेट भएको निसान गाडीको पछाडी सिटमा रकम राख्न लगाउने ब्यक्ती र अनुसन्धानको क्रममा पक्राउ परी हिरासतमा रहेका सन्देश शर्मा भन्ने ब्यक्ती एकै ब्यक्ती हुन। निजलाई हेरी, चिनी सनाखत समेत गरी दिएँ। अन्य प्रतिवादीहरूलाई म चिन्दिन माथी लेखिएको व्यहोरा ठिक छ, फरक छैन फरक परेमा कानून बमोजिम सहुंला बुझाउंला भनी यो सनाखत मुचुल्का गरी दिएको छु भनी गौतम गिरीले गरेको सनाखत मुचुल्का कागज।

च) **प्रेम कुमार गौतमले गरेको सनाखत मुचुल्का कागज**:

लिखितम् जिल्ला अर्घखाची पाणिनी गाउँपालिका वडा नं.२ घर भई जिल्ला काठमाण्डौ, ताकेश्वर नगरपालिका वडा नं.-८ बस्ने राम बहादुर क्षेत्रीको छोरा बर्ष ३७ को प्रेम कुमार गौतम आगे, गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मी समेतको जाहेरीले बादी नेपाल सरकार प्रतिवादी केशव प्रसाद दाहाल समेत भएको संगठित अपराध निवारण ऐन २०७० सम्बन्धी कसूर मुद्दाको अनुसन्धानको सिलसिलामामलाई गृह मन्त्रालयको मिति २०७७।०७।१६ गतेको पत्र आदेश अनुसार नेपाल हज समितीको सचिवालयमा खटाई पठाईएकोमा उक्त कार्यालयमा गएकोमा मलाई हज समितको अध्यक्ष शमशेर मियाँले तपाईले आजबाट बा. १ झ.१५८१ नम्बरको सरकारी गाडी चलाउनु भनी चाबी सहित मलाई जिम्मेवारी दिनु भएकोले उक्त गाडी चलाउदै आई रहेको थिएँ भनी घटना बिवरण कागजमा समेतमा खुलाई लेखाई लेखाई दिनु भएकोले उक्त घटना सम्बन्धमा तपाई प्रतिवादी सानु भण्डारी,केशब प्रशाद दुलालसन्देश शर्मा समेतलाई देखाई सनाखत गराउनु पर्ने भएकोले तपाईलाई यस कार्यालयमा बोलाई सोधनी गरिन्छ कि तपाईले बा.१ झ.१५८१ नम्बरको सरकारी सेतो नम्बरको गाडीमा शमशेर मिँयालाई चढाई टंक गुरूङले ललितपुरमा संचालन गरेको नर्बेजियन एम्बेसी नजिक रहेको होटलमा लिई जाँदा निजलाई भेट्न हाल प्रहरी हिरासतमा रहेका पक्राउ प्रतिवादी केशव प्रसाद दुलाल, सानु भण्डारी र सन्देश शर्मा समेत धेरै पटक आउने जाने र टंक गुरुङसंगै बसी कुराकानी गर्ने मैले देखेको थिए। समशेर मियालाई पटक-पटक गरी भेट्न आउने ब्यक्ती र अनुसन्धानको क्रममा पक्राउ परी हिरासतमा रहेका सानु भण्डारी, केशव प्रसाद दुलाल सन्देश शर्मा ब्यक्ती एकै ब्यक्तीहरू हुन। निजहरूलाई हेरी चिनी सनाखत समेत गरी दिएँ। अन्य प्रतिवादीहरूलाई म चिन्दिन माथी लेखिएको व्यहोरा ठिक छ, फरक छैन फरक परेमा कानून बमोजिम सहुंला बुझाउंला भनी यो सनाखत मुचुल्का गरी दिएको छु भनी प्रेम कुमार गौतमले गरेको सनाखत मुचुल्का कागज।

३५. **अख्तियार दुरुपयोग अनुसन्धान आयोगको पत्र**:

गजेन्द्र बुढाथोकी समेतको जाहेरीले वादी नेपाल सरकार प्रतिवादी केशव दुलाल समेत भएको ठगी तथा संगठित अपराध सम्बन्धी मुद्दाका प्रतिवादी सानु भण्डारीले यस आयोगमा उल्लेखित बिषयमा उजुरी दिएको नदेखिएको भन्ने व्यहोराको च.नं.D3-7980-51678 मिति २०८०।०१।१५ गतेको पत्र।

३६. **नेपाल प्रहरी प्रधान कार्यालय, अपराध अनुसन्धान विभाग, डिजिटल फरेन्सिक ल्यावको परीक्षण प्रतिवेदनहरु**:

क) प्रतिवादी केशव दुलालले प्रयोग गर्दै आएको संकेत नं.KAI सामसुङ कम्पनीको मोवाईल परीक्षण गर्दा Viber Account Keshab+9863591446 बाट 9860052100 लाई Sir Refusee Card holder ko matra lagat liyeko x are CA, new entcry&nonentery ko lagat liyeko xanare sabaiko garne hoena r hajur, sir Bikranta Basnet name gareko manxe la hajurko name liyera Bhutanese Refuseeko 70,80 Janako card and travel Document banauxuvanerahidirahekoxarehajur, भुटानी शरणार्थीको पुन:गणना शुरु शर्षकको ekantipur को समाचार समेत पठाएको, Whatsapp Account बाट अर्को B panthi(9851015795),TNPNDAY2(9860052100),Yam2(9851332392) लाई जिल्ला प्रशासन कार्यालय शरणार्थी समन्वय ईकाई झापाको सूचना पठाएको, WhatsappaccThulungZytha(9827379611) ले भुटानी शरणार्थी प्रकरणमा करोडौ भष्ट्राचारको खुलासा भएको समाचार समेत सेयर गरेको, Whats app Account मा TN PANDAY29860052100

सँग भुटानी शरणार्थी सम्बन्धीको विषयमा Whatsapp तथा Viber मा समेत पटक-पटक बिभिन्न विषयमा कुराकानी भएको, भुटानी शरणार्थी सम्बन्धी बिभिन्न कागज पत्रहरु आदान प्रदान गरेको, Whatsapp Account बाट अर्को TN PANDAY29860052100 को नम्बरमा RCU le beldagi camp ma sindhupalchook tiraka manxe haru ko photo khicheko vanne notice aayeko xa bujnu paryo hajur भनेर तपाईले लेख्दा TN PANDAY2 भन्ने व्यक्तिले huss भनी म्यासेज लेखेको देखिन्छ/पाईन्छ भन्ने व्यहोराको परीक्षण प्रतिवेदन।

ख) प्रतिवादी सानु भण्डारीले प्रयोग गर्दै आएको संकेत नं.SAI सामसुङ कम्पनीको मोवाईल परीक्षण गर्दा Whatsapp प्रयोग कर्ता MukeshKafle९८५१०४१२७८, Keshab mama2 9801142999,Ashok mama 9802051470 मा भुटानी शरणार्थी सम्बन्धी समाचारहरु आदान प्रदान भएको देखिएको, गृह मन्त्रालय, स्थानिय प्रशासन तथा प्रदेश समन्वय शाखाको विषय निर्णयको जानकारी तथा कार्यान्वयन संबन्धमा भुटानी शरणार्थी सम्बन्धी समस्या र समाधानका उपायहरु सम्बन्धमा मिति २०७८/०८/१३ गतेको मन्त्रीपरिषदको बैठकको निर्णय सम्बन्धी पत्र रहेको, संकेत SA2LAVA कम्पनीको मोवाईल परीक्षण गर्दा उक्त मोवाईलको Inbox मा ९८४२५६८६२८ मा पैसा र यति torture दिएको छस् नी म मर्दा मात्र मेरो आत्माले शान्ति पाउनेछ भन्ने जस्ता व्यहोराको म्यासेज रहेको, संकेत न. SA1 मा मोवाईलमा फेला परेको अडियो रेकर्ड call recording keshav mama_211018093656 मा “माथी खर्च लाग्छ केशव दुलाल र सानु भण्डारीले १५० जनाको लिएर खाको छ, हामीले नगर्ने हामीलाई पनि हुनु पऱ्यो भनेका छन” भन्ने समेतको कुराकानी रहेको, अडियो रेकर्ड important files record file_12 मा “ प्रेम राई, बादल, टोप बहादुर रायमाझीलाई रु.५,००,००,०००।-(पाँच करोड) दिएको, मिलाएर १६२९ जनाको फायल पास गराउनु पर्छ, यो कुरा वाहिर आयो भने वर्वाद हुन्छ, दुलालको दुक्की तिर्की मान्छेहरु छन यो प्रोजेक्ट जसरी पनि पास गर्नु पर्छ, यो सबै काम मैले गर्ने हो, म बाहेक कसैले सक्तैन”भन्ने समेतका कुराकानी रहेको, Top Mama-Phone 9857027815 भएको स्क्रिन सर्ट छ, टोम मामा भन्ने समेतको कुराकानीको Audio रेकर्ड फेला परेको, "भट्टराई भाई, सम्पुर्ण रकम बुझिलिएँ" उल्लेख भएको, लेनदेन हिसाबको फोटो, TeknarayanPandayसँग भाईवरमा कुराकानी गरेको देखिन्छ/पाईन्छ भन्ने परीक्षण प्रतिवेदन।

ग) प्रतिवादी नरेन्द्र के.सी.ले प्रयोग गर्दै आएको मोवाईलमा प्रतिवादी केशव प्रसाद दुलालले चलाउने गरेको KAI संकेत दिईएको सामसुङ कम्पनीको मोवाईलमा रहेको Viber Account:-Keshab+9863591446 बाट TNPANDAY29860052100 न.मा पटक पटक WhatsApp मा कुराकानी भएको, TN PANDAY 2 9860052100 मा Sir Refusee Card holder ko matra lagat liyeko x are CA, new entcry&nonentery ko lagat liyeko xanare sabaiko garne hoena r hajur, sir Bikranta Basnet name gareko manxe la hajurko name liyera Bhutanese Refuseeko 70,80 Janako card and travel Document banauxuvanerahidirahekoxarehajur भन्ने व्यहोराको म्यासेज पठाएको, भुटानी शरणार्थीको पुन:गणना शुरु शिर्षकको ekantipur को समाचार आदान प्रदान भएको, प्रतिवादी केशव प्रसाद दुलालले sir airport ma gold ko line dina sakinxa big programme ko lagi hajur भन्ने जवाफमा IGP सँग भनेको छु भनी जवाफ फर्काएको, Whatsapp मार्फत बिभिन्न विषयमा आर्थिक लेनदेन सम्बन्धी कुराकानी भएको देखिन्छ भन्ने परीक्षण प्रतिवेदन।

**३७. एकराज दुलालले पेश गरेको निवेदन:**

उपरोक्त सम्बन्धमा ठगी तथा संगठित अपराधको अनुसन्धानको सिलसिलामा प्रतिवादी केशव प्रसाद दुलालको मोवाईल फोन उपलब्ध गराई दिने भनी जिल्ला प्रहरी परिसर टेकु काठमाडौंबाट खबर प्राप्त भएको हुँदा निज प्रतिवादी मेरो दाजु केशव प्रसाद दुलालले प्रयोग गर्ने गरेको सामसुङ कम्पनीको ग्यालेक्सी M62 मोडलको IMEI No.(Slot-1):-353850237037149 र IMEI (Slot-2):-357637607037148 भएको मोवाईल फन थान-१ निज प्रतिवादी कै श्रीमती मेरो भाउजु दिपा हुमागाई सँग रहेको हुँदा उक्त मोवाईल मैले निजसँग लिई यसै निवेदन साथ जिल्ला प्रहरी कार्यालय मोरङ मार्फत पेश गरेको छु, कानून बमोजिम गरी पाउँ भनी एकराज दुलालले पेश गरेको निवेदन।

**३८. UNHCR (United Nations High Commissioner for Refugees) को पत्र:**

In response to your queries in your letter of 18 May, UNHCR has not issued any "notices, statements, or written correspondence" regarding the alleged fraud, other than to respond to media queries addressed to us. We have made the following statements to the media since 10 May 2023 on an "if asked" basis: UNHCR expresses deep concerns about the latest reports of Nepalese citizens being duped and defrauded.We welcome the Government of Nepal investigation into this scam.The group resettlement program of refugees from Bhutan in Nepal ended on 31 December 2016 and will not resume again. UNHCR has consistently communicated about the end of the resettlement program.Please, find attached the flyer we widely distributed named "End of Bhutanese Refugee Resettlement". I confirm that 1, as UNHCR Representative in Nepal, and my colleague UNHCR Senior Protection Associate Ms.Deepa Dixit attended a meeting with the Ministry of Home Affairs, National Unit for the Coordination of Refugee Affairs (NUCRA) on 11 March 2023.The UNHCR Representation in Nepal avails itself of this opportunity to renew the assurances of its highest consideration.भन्ने व्यहोराको पत्र।

**३९. UNHCR (United Nations High Commissioner for Refugees)को पत्र:**

यू.एन.एच.सि.आर.(UNHCR) ले ९३,५०० भन्दा बढी भुटानी शरणार्थीहरूलाई तेस्रो देशको स्वीकार गर्ने पुनर्वास देशहरूको उदार सहयोगको लागि कृतज्ञ छ। यसले भुटानी शरणार्थी र नेपाल सरकार दुवैलाई सहयोग गरेको छ। विश्वव्यापी रूपमा महत्त्वपूर्ण परिवर्तनहरूको परिणाम स्वरूप तेस्रो देश पुनर्वास प्रक्रियाहरूमा ठूला परिवर्तन र कमी आएको छ जसमा विश्वका अन्य भागहरूमा आवश्यकताहरू उल्लेखनीय वृद्धि हुँदा नाटकीय रूपमा कम पुनर्वास स्थानहरू उपलब्ध गराइएका छन्। विश्वका शरणार्थीहरूको एक प्रतिशतभन्दा कमते तेस्रो देश पुनर्वासिका अवसरहरूबाट फाइदा लिन सक्छन्। नेपालबाट भुटानी शरणार्थीहरूको नियमित तेस्रो देश समूह पुनर्वास २००६ देखि २०१६ सम्म भएको थियो। तेस्रो देश पुनर्वास कार्यक्रम २०१६ मा समाप्त भयो र अब फेरि सुरु हुने छैन। नेपालमा रहेका कुनै पनि भुटानी शरणार्थी, जो हात पुनर्वास प्रक्रियामा छैनन, यूएनएचसिआर (UNHCR) मार्फत भविष्यमा नेपालबाट तेस्रो देश पुनर्वासमा जान पाउने छन् भन्ने अपेक्षा गर्नु हुँदैन। बस्ती भित्र वा बाहिरका व्यक्तिहरू जसले तपाईंलाई अन्यथा बताउन सक्छन्, उनीहरूले कि त गलत जानकारी प्राप्त गरेका छन् वा तपाईंलाई भ्रममा पारिरहेका छन्। तेस्रो देश पुनर्वास कुनै अधिकार वा हक होइन।

यू.एन.एच.सि.आर. (UNHCR) वा तेस्रो देशका सरकारहरू नेपालजस्ता शरणको पहिलो गन्तव्य देशका शरणार्थीहरूलाई पुनर्वास गर्न बाध्य छैनन् । तपाईंहरूले भुटानी शरणार्थी बस्तीहरूबाट अहिले सानो मात्रामा भइरहेको तेस्रो देश पुनर्वासका प्रस्थानहरू मुख्य रूपमा निम्न बूँदासँग सम्बन्धित छन् क) धेरै वर्ष पहिले पुनर्वास देशका सरकारहरूमा पेश गरिएका मुद्दाहरू जुन अझै सक्रिय छन् वा ख) निजी रुपमा प्रायोजित पारिवारिक पुनर्मिलन मामिलाका मुद्दाहरू अफवाहहरूलाई वेवास्ता गर्नुहोस् र ठगिबाट सावधान रहनुहोस् । कुनै पनि व्यक्तिले यदि तपाईंको तर्फबाट यूएनएचसिआर (UNHCR) लाई तेस्रो देश पुनर्वासको सन्दर्भमा प्रभाव पार्न सक्छु भनेर तपाइँसँग शुल्क वा अन्य प्रतिफल माग्दैछ भने सो व्यक्ति से सत्य वोतिरहेको छैन र ठगी गरी रहेको छ । केही ठगहरुले निजी प्रायोजन (जस्तै पारिवारिक पुनर्मिलन मामिलाहरू) वा अन्य गैर-यू.एन.एच.सि.आर. (UNHCR) प्रवासनको लागी भनेर शरणार्थीहरुबाट शुल्क खोज्छन् जुन गलत छ भन्ने व्यहोराको UNHCR (United Nations High Commissioner for Refugees) को पत्र ।

४०. **प्रतिवादीहरुले जाहेरवालाहरुलाई नक्कली भुटानी शरणार्थी बनाउनका लागि निम्नानुसारका ८१ जना जाहेरवालाहरुको नक्कली नाम राखि सोही नक्कली नामबाट भुटानी मानव अधिकार संगठनको नामबाट परिचय पत्र**

| सि.नं. | पीडितहरुको जाहेरीमा उल्लेखित वास्तविक नाम | प्रतिवादीहरुले नक्कली भुटानी शरणार्थी बनाउँदा राखेको नाम | कैफियत |
|---|---|---|---|
| १ | सन्तोष शर्मा | रोहित शर्मा कोइराला | |
| २ | विवेक थापा | कृष्ण कार्की | |
| ३ | प्रदिप अर्याल | प्रदिप पौडेल | |
| ४ | सन्देशजंग ठकुरी | भुवन थापा | |
| ५ | संजिव गौतम | ऋषभ कटुवाल | |
| ६ | सन्देश गौतम | सगुन शर्मा | |
| ७ | कुमार पोखरेल | युवराज पोखरेल | |
| ८ | अनिश बुढाथोकी | अमर अधिकारी | |
| ९ | भरत अधिकारी | राजन अधिकारी | |
| १० | रमेशजंग शाही | हरी भण्डारी | |
| ११ | सुदनजंग क्षेत्री | राम सुवेदी | |
| १२ | खिमराज पौडेल | कपिल खनाल | |
| १३ | निर्मल केसी | रमेश कटुवाल | |
| १४ | शंकर न्यौपाने | अर्जुन काफ्ले | |
| १५ | माधव केसी | दामोदर शुबेदी | |
| १६ | देवबहादुर केसी | रुपेश बस्नेत | |
| १७ | मोहन पाण्डे | हरी शर्मा | |
| १८ | कोमलबहादुर बिष्ट | नविन पौडेल | |
| १९ | द्रोणबहादुर अधिकारी | उपेन्द्र अधिकारी | |
| २० | तेन्जिना लम्साल | शारदा चौलागाई | |
| २१ | राजकुमार ओली | भरत अधिकारी | |
| २२ | भुपेन्द्र बुढाथोकी | रामजी प्रसाद तिवारी | |

| २३ | बिशाल केसी | अंकित तिवारी | |
|---|---|---|---|
| २४ | निर्मला लम्साल | सोविता शर्मा | |
| २५ | बिरेन्द्र कुमार ओली | रेमन्त पौडेल | |
| २६ | मिना राणा | सिम्रन थापा | |
| २७ | घनश्याम बस्नेत | सुमन राई | |
| २८ | राजेशराज डांगी | रिजन गुरुङ | |
| २९ | पदम आचार्य | टेकनाथ सुवेदी | |
| ३० | दिपेश गौतम | सुनिल अधिकारी | |
| ३१ | घनश्याम भण्डारी | कुशल श्रेष्ठ | |
| ३२ | शुरेश गौतम | राजन नेपाल | |
| ३३ | बालाराम डाँगी | नरेन्द्र अधिकारी | |
| ३४ | शुशिल ओली | बरुण थापा | |
| ३५ | भुप बाहदुर डाँगी | डम्बर अधिकारी | |
| ३६ | दिपेन्द्र बुढाथोकी | टेक मैनाली | |
| ३७ | प्रमोद राणा | कृष्ण क्षेत्री | |
| ३८ | रन्जित अधिकारी | महेश कार्की | |
| ३९ | राजन लामिछाने | विवेक शर्मा | |
| ४० | निकेश केसी | प्रकाश खड्का | |
| ४१ | राकेश लामिछाने | समिर अधिकारी | |
| ४२ | प्रकाश बस्नेत | संजय खत्री | |
| ४३ | श्याम सुन्दर बस्नेत | रमेश बस्नेत | |
| ४४ | राजिव केसी | पवन रिजाल | |
| ४५ | दिलिप लामिछाने | जिवन आचार्य | |
| ४६ | सजित गिरी | आशिष गुरुङ | |
| ४७ | भविन्द्र प्रसाद पगाली | लिला थापा | |
| ४८ | टोपेन्द्र डांगी | मनोज खनाल | |
| ४९ | हरिश कोरल | मिलन बुढाथोकी | |
| ५० | उज्ज्वल रिजाल | नारायण प्रसाद दाहाल | |
| ५१ | प्रेमनाथ योगी | निर्देश खड्का | |
| ५२ | लेखनाथ योगी | रविन पौडेल | |
| ५३ | निर्जन ओली | राम आचार्य | |

| ५४ | अमृत कंडेल | राममणी आचार्य | |
|---|---|---|---|
| ५५ | अञ्जना मल्ल | रेणु भण्डारी | |
| ५६ | रोशी रेग्मी | लक्ष्मीमाया तामाङ | |
| ५७ | दिपेन्द्र लामिछाने | सुर्यराज शर्मा | |
| ५८ | दिपक केसी | उमेश बस्नेत | |
| ५९ | धनबहादुर भण्डारी | आशिष अधिकारी | |
| ६० | भरत केसी | यमन थापा | |
| ६१ | तुलसीराम केसी | राजन पन्थी | |
| ६२ | रामकुमार रेग्मी | - | |
| ६३ | श्रवण कुमार रेग्मी | कृष्ण पाण्डे | |
| ६४ | कल्पना रेग्मी | - | |
| ६५ | उपेन्द्र बुढाथोकी | रामजी प्रसाद तिवारी | |
| ६६ | राजेश अर्याल | मिलन उप्रेती | |
| ६७ | बिराज पाण्डे | - | |
| ६८ | डम्बर खत्री | गंगाराम खनाल | |
| ६९ | यज्ञ ओली | सुक बहादुर राई | |
| ७० | समिर लामिछाने | तुलसीराम शर्मा | |
| ७१ | गौतम गिरी | - | |
| ७२ | सुजल के.सी. | राजु सुब्बा | |
| ७३ | असिम ओली | सन्तोष थापा | |
| ७४ | चन्द्रबहादुर खड्का | कृष्ण कुमार तामाङ | |
| ७५ | पदम सिंह खत्री | होमनाथ चौधरी | |
| ७६ | महेन्द्र कुसारी | अर्जुन भण्डारी | |
| ७७ | मानबहादुर खत्री | किरण पौडेल | |
| ७८ | मनिष डिसी | अविनाश सुब्बा | |
| ७९ | मुमकान्त पान्डे | | |
| ८० | मनोज केसी | बिक्रम बस्नेत | |
| ८१ | अनुदान बस्नेत | आकाश कार्की | |

## अभियुक्त उपरको अभियोगः

जिल्ला प्रहरी परिसर टेकू, काठमाडौंबाट अभियोजनार्थ प्राप्त अनुसन्धान प्रतिवेदन, गजेन्द्र बुढाथोकी, राम कुमार रेग्मीसमेतको किटानी जाहेरी दरखास्त, जाहेरी दरखास्त साथ पेश हुन आएका विभिन्न कागजातहरुको प्रतिलिपी, प्रतिवादी सन्देश शर्माले जाहेरवाला गजेन्द्र बुढाथोकीलाई Whats app मा पठाएको विभिन्न सूचनाहरु, नेपाली नागरिकहरुको नाममा जारी भएको भुटानी शरणार्थीहरुको परिचय पत्रको प्रतिलिपीहरु, जाहेरवालाहरु गजेन्द्र बुढाथोकी र राम कुमार रेग्मीको नाममा प्रतिवादी सन्देश शर्माले काटेको चेकको प्रतिलिपीहरु, प्रतिवादीहरुको कल बिबरण, विभिन्न बैंकहरुको पत्र तथा बैक स्टेटमेण्ट, प्रहरी प्रतिबेदन, प्रतिवादी सागर राईको मोवाईलमा भएको स्क्रिन सर्ट विवरणहरु, पक्राउ प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु

भण्डारी, सागर राई, सन्देश शर्मा, टंक कुमार गुरूङ, डा.ईन्द्रजित राई, टोप बहादुर रायमाझी, सन्दिप रायमाझी, टेक नारायण पाण्डे, नरेन्द्र के.सी., गोविन्द कुमार चौधरी, राम शरण के.सी., बालकृष्ण खाण, आङटावा शेर्पा, शमशेर मिया, टेकनाथ रिजाल समेतले गरेको बयान तथा थप बयान, बरामद दशी सामग्रीहरु, बुझिएका मानिसहरु यन्तोष प्रधान, सागर मणि पाठक, फणिन्द्रमणि पोखरेल तथा चोमेन्द्र नेउपाने समेतले गरेका **घटना विवरण कागजहरु,** गृह मन्त्रालयबाट प्राप्त प्रतिवेदन तथा पत्रहरु, निवेदन साथ पेश भएका सि.डी.तथा पेनड्राईभमा भएका बिभिन्न Video तथा Voice Clip हरु, नेपाल प्रहरी प्रधान कार्यालय, डिजिटल फरेन्सिक परीक्षण प्रतिवेदनहरु, गृह मन्त्रालयबाट प्राप्त हुन आएको भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल २०७६ को प्रतिवेदनको प्रतिलिपी र UNHCR को पत्र समेतका कागजात प्रमाणहरुबाट प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी, सागर राई, सन्देश शर्मा, टंक कुमार गुरूङ, डा.ईन्द्रजित राई, टोप बहादुर रायमाझी, सन्दिप रायमाझी, टेक नारायण पाण्डे, नरेन्द्र के.सी., गोविन्द कुमार चौधरी, राम शरण के.सी., बालकृष्ण खाण, आङटावा शेर्पा, शमसेर मियाँ र टेकनाथ रिजाल समेतका प्रतिवादीहरु तथा फरार प्रतिवादीहरु केशव तुलाधर, लक्ष्मी महर्जन, हरि भक्त महर्जन, अशोक पोखरेल, धिरेन राई, दिपा हुमागाञी, निरज राई, राजेश अर्याल, मोहन राज राई, आशिष बुढाथोकी, बिनिता सावदेन लिम्बु, निरन्जन कुमार खरेल, सुनिल बुढाथोकी, प्रतिक थापा समेतले आपसमा मिलेमतो गरी संगठित रुपमा आबद्ध भई कार्य जिम्मेवारीको बाँडफाँड गरी आर्थिक लाभ लिने उद्देश्यले आपराधिक समूह निर्माण गरी जाहेरवालाहरु एवं निजहरुका चिनजानका पीडित जाहेरवालाहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउने भनी विश्वास दिलाई, झुक्यानमा पारी पीडित जाहेरवालाहरुबाट रकम संकलन गरेको तथा नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थीहरु हुन भनी प्रमाणित समेत गर्नका लागि सरकारी तहबाट समितीहरु गठन गर्ने, प्रतिवेदनहरु तयार गर्ने, पत्राचार गर्ने र गराउने समेतको कार्य गरी गराई नेपालीहरुलाई समेत भुटानीको रुपमा अमेरिका पठाउने भनी नेपालको अन्तर्राष्ट्रिय स्वाभिमान र छवि उपर अपमान हुने राष्ट्रहित प्रतिकूल काम गरी संगठित रुपले ठगी, लिखत किर्ते, राज्य विरुद्धको कसूर तथा संगठित अपराध समेतको कसूर गरेको वारदात स्थापित हुन आयो ।

अब प्रस्तुत मुद्दामा निज प्रतिवादीहरुले के-कुन कानून विपरित कसूर गरेका हुन् ? निज प्रतिवादीहरुको कसूरजन्य कार्यमा रहेको संलग्नता र निज प्रतिवादीहरुले ब्यहोर्नु पर्ने आपराधिक दायित्वको सम्बन्धमा अनुसन्धान र तहकितका क्रममा संकलित आधार प्रमाणहरु अध्ययन बिश्लेषण गरी अभियोजन तर्फ हेर्दा, निज प्रतिवादीहरुले 31 Dec 2016 मा UNHCR ले भुटानी शरणार्थीहरुको तेस्रो मुलुक पुनर्वासको कार्यक्रम बन्द गरेतापनि प्रतिवादीहरुको संगठित समूहले अमेरिका लगायत तेस्रो मुलुक पठाईदिने भनी संगठित रुपमा योजनाबद्धढंगले पन्थि कार्यदल प्रतिवेदननै किर्ते गरी सो प्रतिवेदनलाई प्रयोग गरी निम्न बमोजिम ठगी, सार्वजनिक लिखत किर्ते, राज्य विरुद्धको कसूर एवम् संगठित अपराध समेतको कसूर गरेको देखिन आयो ।

१. **प्रतिवादी बालकृष्ण खाँणको हकमा:**

भुटानी शरणार्थी समस्याको स्थायी र दीर्घकालिन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदल २०७६ ले तत्कालिन गृहमन्त्री राम बहादुर थापा (बादल) लाई प्रतिवेदन बुझाए पश्चात सो प्रतिवेदन सहितको प्रस्ताव मिति २०७६।०८।१८ गते मन्त्रीपरिषदमा पेश भएको र सो प्रतिवेदनको सम्बन्धमा मन्त्रीपरिषदबाट कुनै निर्णय नै नभई सरकार परिवर्तन पछि फिर्ता आएको उक्त प्रतिवेदन पुन:मन्त्रीपरिषदमा प्रस्ताव नै नगरी माथि उल्लेखित

पीडितहरुलाई बिश्वासमा पार्न मिति २०७८।०६।१४ गते सचिवस्तरिय निर्णयबाट जिल्ला प्रशासन कार्यालय झापाका स.प्र.जि.अ.को संयोजकत्वमा समिती बनाई छुट भएका शरणार्थीहरुको विवरणलाई पुन:Verify गरी पेश गर्ने समेतको कार्यादेश दिएको। सो समितीले कुनै काम नै नगरेको अवस्थामा मिति २०७९।०२।२७ गते माननीय मन्त्रीस्तरको निर्णयबाट पुन: २ महिना म्याद थप हुँदा छुट शरणार्थीहरुको नाम समावेश गर्ने समेतको कार्यादेश थप गरेको; बुझिएका गृह मन्त्रालयका कर्मचारीहरु फणिन्द्रमणी पोखरेल, सागरमणी पाठक, चोमेन्द्र न्यौपाने, यन्तोष प्रधान समेतले पहिले UNHCR समेतको Joint Verification Team ले Verify गरेका ४२९ जना शरणार्थीहरु नै विवादित रहेको अवस्थामा थप छुट दर्ता गराउन नहुने, भुटानी शरणार्थीहरुलाई मानवीय सहायता सम्बन्धी बिषयमा निर्णय गर्दा अन्य देशका शरणार्थीहरुको हकमा समेत निर्णय गर्न दवाव पर्न सक्ने र सो गर्न अन्तर्राष्ट्रिय सम्बन्धका दृष्टिकोणले समेत कठिन हुने भएकोले थप छुट शरणार्थीहरु दर्ता गर्ने समेतको कार्य नगर्न तत्कालिन गृहमन्त्री बालकृष्ण खाँण र गृह सचिव टेक नारायण पाण्डेलाई सुझाव दिएकोमा सो वेवास्ता गरी छुट शरणार्थीहरु सम्बन्धी निर्णय गरे गराएको भनी खुलाएको, UNHCR ले नेपालमा रहेका भुटानी शरणार्थीहरुको दर्ता प्रकृया र तेश्रो मुलुकमा पुनस्र्थापनाको कार्य 31 Dec 2016 मा नै पूर्णरुपमा बन्द भईसकेको भन्ने सार्वजनिक सूचना जारी गरी सकेको अवस्थामा समेत नेपालमा रहेका भुटानी शरणार्थीहरुको नाममा नेपाली नागरिकहरुलाई समेत भुटानी शरणार्थीको रुपमा दर्ता गराउनका लागि गृहमन्त्रालयका कर्मचारीहरु र कार्यदलका सदस्यहरुलाई प्रत्यक्ष/अप्रत्यक्ष दवाव दिईएको भनी कागज गर्ने मानिसहरुले खुलाई दिएको; आफू गृहमन्त्री हुँदाका बखतको भन्दा पहिलेको मन्त्रीपरिषदबाट फिर्ता भएको प्रतिवेदन पुन: आफू सामेल तत्कालिन मन्त्रीपरिषदबाट स्वीकृत गराई सो स्वीकृत प्रतिवेदनसँग मिल्ने समानान्तर प्रतिवेदन तयार गरी गराई नेपाली नागरिकहरुलाई भुटानी शरणार्थीको सूचीमा समावेश गराइ झुक्यानमा पारेको; तत्कालिन अवस्थामा जिल्ला प्रशासन कार्यालय झापामा RCO (शरणार्थी समन्वय अधिकृत) को रुपमा शरणार्थी शिविरहरुको रेखदेख र अभिलेख राख्ने जिम्मेवारी पाएका ना.सु. सुरेन्द्र दाहाललाई नाम दर्ता हुन छुट भुटानी शरणार्थीहरुको बिवरणमा थप समेत गर्नका लागि तत्कालिन गृह मन्त्री बालकृष्ण खाँण समेतबाट दवाव दिएको र सो काम निजले गर्न आलटाल गरेकोले निजको गृहमन्त्रीकै आदेशमा तत्कालै सरुवा गरिदिएको भन्ने निजकै कागजबाट खुलेको, पक्राउ प्रतिवादी केशव प्रसाद दुलालले प्रतिवादी बालकृष्ण खाँणलाई नेपालीहरुलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्य कै लागि भनी रु.१,२४,५०,०००।–(एक करोड चौविस लाख पचास हजार) नगदै दिए पश्चात लगत्तै कार्यादेश समेत थप गरी समितीको म्याद थप गरेको, पक्राउ प्रतिवादी केशव प्रसाद दुलालको मोवाईलमा फेला परेको केशव प्रसाद दुलाल र टेक नारायण पाण्डे बीचको संवादमा **(९८०११४२९९-९८६००५२१००(18 Apr. 2022-)** केशवले सर पन्थी सरले कस्तो राय दिनु भयो हजुर भनी भनेको, टेकनारायणले डिटेल कुरा भो, अब UNHCR सँग मिटिङ्ग छ, अनि थप काम हुन्छ भनी भनेको। केशवले छुट भएको हकमा कसरी गर्ने हजुर भनी भनेको। टेकनारायणले मिलाउछन् भनी भनेको। केशवले क्याम्पमा नभएकाको हकमा भनी भनेको। टेकनारायणले ठिक छ मिलाउने हो भनी भनेको। केशवले भोलि UNHCR सँगको मिटिङ्ग पछि भेटौन हजुर भनी भनेको। टेकनारायणले हस भनी भनेको। टेकनारायणले छलफल हुँदै छ भनी भनेको। **(31 May 2022)** केशवले प्रमोद शर्मा मन्त्रीसँग नजिक छन हजुर, टेकनाथ रिजाललाई हाम्रो डिसिजन बिना हुन्न भन्दै थिए रे भनी भनेको। टेकनारायणले प्रमोद चिन्छु, मन्त्रीज्यूको सामान रेडी भएन भनी भनेको। केशवले भोली रेडी हुन्छ जस्तो छ हजुर भनी भनेको। टेकनारायणले मन्त्री ज्यूलाई म भेट गराउछु भनी भनेको। केशवले भोली Financial arrange भएपछि हजुर मार्फत् भेट्ने हो हजुर

भनी भनेको। टेकनारायणले हस भनी भनेको। **(02- jun 2022)** केशवले सर नमस्ते मन्त्री ज्यूसँग कति बजे टाईम भयो हजुर भनी भनेको। टेकनारायणले मन्त्रीज्यूको गिफ्ट ल्याएनौ भनी भनेको। केशवले ओके, गेटमा हजुर तल भन्दिनु भनी भनेको। टेकनारायणले, मन्त्रालय गेट हो नी भनी भनेको। केशवले हजुर भनेको। टेकनारायणले ल भन्या छु , गिफ्ट माथि लिएर आउनु, गिफ्ट कहाँ छ सँगै लिएर आउनु भनी भनेको देखिदा बालकृष्ण खाँणलाई केशव प्रसाद दुलालले रकम दिने, गिफ्ट दिने, भेट्ने लगायतका संवादहरुबाट बालकृष्ण खाँड समेतको आपराधिक समूहमा संलग्नता रहेको पुष्टि भएको। पक्राउ पर्नु भन्दा पूर्व बालकृष्ण खाँणले आफ्नो निजी मोवाईल विवरणहरु मेटाउने उद्देश्यले Factory Reset गरेको, टेक नारायण पाण्डे पक्राउ परी सके पश्चात हिरासतबाटै निजले मन्त्री बालकृष्ण खाँणलाई कसूरबाट जोगाउनका लागी प्रधानमन्त्री समेतलाई भनेर निज उपरको अनुसन्धान प्रकृया अगाडी नबढाउन दवाव दिनु पर्ने, प्रतिवादीहरु केशव प्रसाद दुलाल र सानु भण्डारीले दिएको रकम फिर्ता गरी बालकृष्ण खाँणको नाम नलिने गरी ईन्कारी बयान गर्न लगाउनु भन्ने समेत व्यहोराका लिखित सूचनाहरु दिएको र सो सूचनाहरु निजै प्रतिवादी बालकृष्ण खाँण र निजका स्वकीय सचिव नरेन्द्र के.सी.को साथबाट बरामद भएको उक्त लिखित सूचना परीक्षणका लागि पठाउँदा प्रतिवादी टेक नारायण पाण्डेको हस्त लिखत रहेको भनी खुल्न आएको, प्रतिवादी बालकृष्ण खाँणले आङटावा शेर्पालाई सानु भण्डारी र केशव प्रसाद दुलाललाई हिरासतमै भेट्न पठाई पहिले लिएको रकम फिर्ता गर्ने र बयानमा आफु समेतलाई पोल नगर्न भनी पठाएको र सो कुरा हिरासतमा रहेका प्रतिवादीहरु सानु भण्डारी र केशव प्रसाद दुलालले आङटाव शेर्पाले भने पछी सहमत भै सहमति गरे बमोजिम रु.१,००,००,०००।–(एक करोड) निजका स्वकीय सचिव नरेन्द्र के.सी.मार्फत आङटावा शेर्पाले लिई सो मध्ये रु.३०,००,०००।– (तीस लाख) सानु भण्डारीको दाजु राजु भण्डारीलाई भरपाई गरिदिएको घटना विवरण कागज र भरपाई कागज_समेतबाट खुलेको देखिन्छ। यहि अवधीमा आङटावा शेर्पा र नरेन्द्र के.सी. बीच मोवाईल फोनमा ४९ पटक कुराकानी भएको, नरेन्द्र के.सी.सँग भेट भएको र प्रतिवादीहरु सानु भण्डारी र केशव प्रसाद दुलाललाई मुद्दा मिलाउन हिरासतमा भेट्न गएको अडियोबाट र आङटावा शेर्पाको मुद्दा मिलाउन गएको बयान समेतबाट पुष्टि हुन आउँछ। नरेन्द्र के.सी. को मोवाईल परीक्षण गर्दा 15 mar 2023 11 PM Factory Reset गरेको उक्त मोवाईल फोनसेटमा आर्थिक लेनदेन सम्बन्धी म्यासेज रहेको, उक्त मोवाईल फोनसेटमा शरणार्थी समन्वय ईकाई बेलडाँगी झापाको सूचना, गृहमन्त्रालयको निर्देशन, र भुटानी शरणार्थी समन्वय सम्बन्धी पत्र, Fake-Bhutani refugee document शरणार्थी परिचयपत्र विवरण मेटेको, -whats app Account Narendra K C बाट News share फोनसेटको email मा भुटानी शरणार्थी शिर्षक भएको Word document Narendra sir docx भएको बिभिन्न नागरिकता, भुटानी शरणार्थी सम्बन्धी document रहेको देखिन्छ। प्रतिवादी टेक नारायण पाण्डेले थप बयान गर्दा भुटानी शरणार्थीहरुको सम्बन्धमा प्रतिवादी केशव प्रसाद दुलालले तत्कालिन गृहमन्त्री बालकृष्ण खाँणकै कार्यकक्षमा निजलाई रकम दिएको भन्ने समेत खुलाएको कारण यी प्रतिवादी बालकृष्ण खाँणले तत्कालिन गृह सचिव टेक नारायण पाण्डे, प्रतिवादी केशव प्रसाद दुलाल, नरेन्द्र के.सी., आङटावा शेर्पा समेतलाई प्रत्यक्ष रुपमा परिचालन गरी प्रस्तुत संगठित ठगी लिखत किर्ते एवं राष्ट्रहित प्रतिकुल काम गरी आपराधिक समूहका अन्य प्रतिवादीहरुलाई परिचालन गरी जाहेरवालाहरु समेतबाट संकलन गरिएको ठगीको रकम, लिनेखाने काममा संलग्न रहेको देखिन आएकोले प्रतिवादी बालकृष्ण खाँणले गैर भुटानी शरणार्थी अर्थात आम नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई प्रतिवेदन लगायत गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाउन लगाई ठगी गरी लाभ लिई

**मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो।**

यी प्रतिवादी बालकृष्ण खाँणले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम ठगी गरी लिनका लागि आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव प्रतिवादी टेकनारायण पाण्डे मार्फत सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कल प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी लिखत किर्ते संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र पन्थीको प्रतिवेदन हेरफेर गरी नेपाली नागरिकताको नाममा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा **निज प्रतिवादी बालकृष्ण खाँणले मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको पुष्टि हुन आयो।**

त्यसै गरी प्रतिवादी बालकृष्ण खाँणले नेपाल राष्ट्रको गृहमन्त्री जस्तो शक्तिशाली र गरिमामय पदमा बसी आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी बालकृष्ण खाँणले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) र उपदफा (७) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा

गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी बालकृष्ण खाँणले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी बालकृष्ण खाँण समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

२. **प्रतिवादी टेक नारायण पाण्डेको हकमा**:

केशव प्रसाद दुलाल र प्रतिवादी टेक नारायण पाण्डे वीच निजहरुको व्यक्तिगत मोवाईलमा What's App तथा Viber समेतबाट जाहेरवालाहरु समेतका नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थीहरु बनाई अमेरिका पठाउने र सो बापत प्राप्त भएको रकम बाँडफाँड समेत गर्ने तथा सो सम्बन्धमा सरकारी तवरबाट भएका निर्णय एवं कुराकानीहरुको जानकारी लिने/दिने बारेमा लगातार एवं लामो-लामो संवादहरु भएको देखिएको; उक्त संवादहरुमा भुटानी शरणार्थी छुट दर्ता गरी क्याम्प बाहिरका नेपालीहरुलाई अमेरिका पठाईदिने व्यवस्था गर्ने मन्त्रीज्यूलाई भेट्ने, financial arrange गर्ने, गिफ्ट दिने र यस सम्बन्धमा विभिन्न मानिसहरुले गरेका नकारात्मक टिप्पणीहरुको जानकारी लिने दिने समेतका सूचनाहरु आदान प्रदान भएको देखिन्छ। बालकृष्ण पन्थीको प्रतिवेदन पुन:मन्त्रीपरिषदमा प्रस्ताव नै नगरी मिति २०७८।०६।१४ गते सचिवस्तरिय निर्णयबाट जिल्ला प्रशासन कार्यालय झापाका स.प्र.जि.अ.को संयोजकत्वमा समिती बनाई छुट भएका शरणार्थीहरुको विवरणलाई पुन:Verify गरी पेश गर्ने समेतको कार्यादेश दिएको। सो समितीले कुनै काम नै नगरेको अवस्थामा मिति २०७९।०२।२७ गते माननीय मन्त्रीस्तरको निर्णयबाट पुन:२ महिना म्याद थप हुँदा जाहेरवालाहरु समेतका नेपाली नागरिकहरुलाई भुटानीको रुपमा घुसाउनका लागी छुट शरणार्थीहरुको नाम समावेश गर्ने समेतको कार्यादेश थप गरेकोमा सो समितीले काम नगरेको अवस्थामा काम छिटो सम्पन्न गर्नका लागी बारम्बार झापा जिल्लाका सहायक प्र.जि.अ.लाई दवाव दिएको, सोही काम गराउनका लागी मन्त्रालयका आफु मातहतका कर्मचारीहरुलाई सहायक प्र.जि.अ.बाट चाँडो काम गराउनको लागी दवाव दिएको र बालकृष्ण पन्थीले दिएको प्रतिवेदन मन्त्री परिषदबाट फिर्ता भई आए पछि अध्ययनको लागी भनी सम्बन्धित शाखाबाट माग गरी लामो समयसम्म आफैले राखि सो प्रतिवेदनमा भएको व्यहोरालाई जाहेरवाला समेतका नेपाली नागरिकहरुलाई भुटानी शरणार्थीहरु हुन भनी व्यहोरा थपघट गरी नक्कली प्रतिवेदन गृह मन्त्रालयमै तयार गरेर राख्ने कार्य गरेको, गृह मन्त्रालयको परम्परा विपरित आफैले UNHCR का प्रतिनिधिहरुलाई बोलाई दर्ता हुन छुट भुटानी शरणार्थीहरुको सन्दर्भमा बैठक गराउने गरेको भन्ने गृह मन्त्रालयका कर्मचारीहरुले कागज गरी खुलाई दिएको। **(९८०११४२९९-९८६००५२१००(18 Apr. 2022-)** केशवले सर पन्थी सरले कस्तो राय दिनु भयो हजुर भनी भनेको, टेकनारायणले – डिटेल कुरा भो , अब UNHCR सँग मिटिङ्ग छ, अनि थप काम हुन्छ भनी भनेको। केशवले छुट भएको हकमा कसरी गर्ने हजुर भनी भनेको। टेकनारायणले मिलाउछन् भनी भनेको। केशवले क्याम्पमा नभएकाको हकमा भनी भनेको। टेकनारायणले ठिक छ मिलाउने हो भनी भनेको। केशवले sir out of camp refugee candidate लाई application कहाँ दिन लगाउने हजुर भनी भनेको। टेकनारायणले छलफल हुँदै छ भनी भनेको। **(31 May 2022)** केशवले प्रमोद शर्मा मन्त्रीसँग नजिक छन

हजुर, टेकनाथ रिजाललाई हाम्रो डिसिजन बिना हुन्न भन्दै थिए रे भनी भनेको । टेकनारायणले प्रमोद चिन्छु, मन्त्रीज्यूको सामान रेडी भएन भनी भनेको । केशवले भोली रेडी हुन्छ जस्तो छ हजुर भनी भनेको । टेकनारायणले मन्त्री ज्यूलाई म भेट गराउछु भनी भनेको । केशवले भोली Financial arrange भएपछि हजुर मार्फत् भेट्ने हो हजुर भनी भनेको । टेकनारायणले हस भनी भनेको । **(02- jun 2022)** केशवले सर नमस्ते मन्त्री ज्यूसँग कति बजे टाईम भयो हजुर भनी भनेको । टेकनारायणले मन्त्रीज्यूको गिफ्ट ल्याएनौ भनी भनेको । केशवले ओके , गेटमा हजुर तल भन्दिनु भनी भनेको । टेकनारायणले, मन्त्रालय गेट हो नी भनी भनेको । केशवले हजुर भनेको । टेकनारायणले ल भन्या छु , गिफ्ट माथि लिएर आउनु, गिफ्ट कहाँ छ सँगै लिएर आउनु भनेको देखिन्छ । प्रतिवादी केशव प्रसाद दुलालले यी प्रतिवादी टेक नारायण पाण्डेलाई नगदै रु.१,२४,५०,०००।–(एक करोड चौबिस लाख पचास हजार) निजको कार्यकक्षमा दिएको भनी बयानमा खुलाएको, यीनै प्रतिवादीले आफ्ना व्यक्तिगत सुरक्षा गार्ड प्र.ब.ना.नि धर्मराज शाहीलाई बारम्बार नगद रकम दिई मिति २०७८।०८।०२ देखि २०७९।०२।२३ गतेसम्म करिव ८ महिनाको अवधीमा आफ्नो सञ्चय कोष र नागरिक लगानी कोषमा एभरेष्ट बैंक (खाता नं.००१००१०५००००१८ को कोष प.प.नं.०२४६१३३), हिमालयन बैंक (खाता नं.०२७०४६७२४७००१८) समेतमा पटक-पटक गरी जम्मा रु.८४,९४,०९८.१३।-(अक्षरुपी चौरासी लाख चौरानब्बे हजार अन्ठानब्बे रुपैया तेह्र पैसा) जम्मा गरेको देखिएको, निज पक्राउ पर्नु भन्दा पूर्व आफ्नो निजी मोवाईलमा भएका विवरणहरु मेटाउने उद्देश्यले Formate गरेको, निज पक्राउ परी सके पश्चात प्रहरी हिरासतबाटै निजले प्रधानमन्त्री समेतलाई भनेर अन्य प्रतिवादीहरुको ईन्कारी बयान गर्न लगाउनु भन्ने समेत व्यहोराका लिखित सूचनाहरु बालकृष्ण खाँण समेतलाई पठाएको, बुझिएका गृह मन्त्रालयका कर्मचारीहरु फणिन्द्रमणी पोखरेल, सागरमणी पाठक, चोमेन्द्र न्यौपाने, यन्तोष प्रधान समेतले पहिले UNHCR समेतको Joint Verification Team ले Verify गरेका ४२९ जना शरणार्थीहरु नै विवादित रहेको अवस्थामा थप छुट दर्ता गराउन नहुने, भुटानी शरणार्थीहरुलाई मानवीय सहायता सम्बन्धी बिषयमा निर्णय गर्दा अन्य देशका शरणार्थीहरुको हकमा समेत निर्णय गर्न दवाव पर्न सक्ने र सो गर्न अन्तर्राष्ट्रिय सम्बन्धका दृष्टिकोणले समेत कठिन हुने भएकोले थप छुट शरणार्थीहरु दर्ता गर्ने समेतको कार्य नगर्न निजलाई सुझाव दिएकोमा सो वेवास्ता गरी छुट शरणार्थीहरु सम्बन्धी निर्णय गरे गराएको र प्रतिवेदन बुझाउन समितीलाई प्रत्यक्ष रुपमा दवाव दिएको भनी खुलाएको, UNHCR ले नेपालमा रहेका भुटानी शरणार्थीहरुको दर्ता प्रकृया र तेश्रो मुलुकमा पुनर्स्थापनाको कार्य पूर्ण रुपमा बन्द भईसकेको भन्ने सार्वजनिक सूचना जारी गरिसकेको अवस्थामा समेत नेपालमा रहेका भुटानी शरणार्थीहरुको नाममा नेपाली नागरिकहरुलाई समेत भुटानी शरणार्थीको रुपमा दर्ता गराउनका लागि गृहमन्त्रालयका कर्मचारीहरु र समितीका सदस्यहरुलाई प्रत्यक्ष/अप्रत्यक्ष दवाव दिएको प्रतिवेदन बारम्बार शाखाबाट माग गरी लामो समयसम्म राख्ने समेत गरेको कारण निजकै संलग्नतामा फेरवदल भएको हुन सक्छ भनी कागज गर्ने मानिसहरुले खुलाई दिएको र यी प्रतिवादीले हिरासतबाटै नरेन्द्र के.सी.को साथबाट बरामद कागजमा दुलालको बयान सच्याउनु पर्यो नभए मन्त्री ज्यू समेतको मुद्दा जान सक्छ । एक हप्ताको म्याद थप भएको अवधिमा जुनसुकै हालतमा सच्याई बयान हुनै पर्छ बालकृष्ण खाँणको घरबाट बरामद च्यातिएको कागजमा नरेन्द्र जी, ओली बा र देउवाले प्रधानमन्त्रीलाई भनेर जाहेरीमा मुख्य प्रतिवादीहरुलाई मात्र मुद्दा दायर गर्ने अब थप आरोपित व्यक्तिलाई पक्राउ नगर्ने हो भने मुद्दाले सहज रुप लिन्छ नभए जटिल मोडमा राजनीति पुग्ने अवस्था छ भनी टेक नारायण पाण्डेले लेखि पठाएको कागज परीक्षण गर्दा निजकै रहेको परीक्षण प्रतिवेदनबाट पुष्टि हुन आएको देखिन्छ । टेक नारायण पाण्डे हिरासतमा रहदा बालकृष्ण खाँणसँग

पत्रको माध्यमबाट मुद्दालाई प्रभावित बनाउने सूचना आदानप्रदान भएको प्रतिवादी बालकृष्ण खाँणलाई सानु भण्डारी र केशव प्रसाद दुलालको ईन्कारी बयान गराउनका लागी लिखित सूचना पठाए पछि बालकृष्ण खाँणले प्रतिवादी नरेन्द्र के.सी.लाई प्रतिवादी आङटावा शेर्पा मार्फत रु.१,००,००,०००।–(एक करोड) दिएकोमा मध्ये प्रतिवादी सानु भण्डारीको तर्फबाट निजको दाजु राजु भण्डारीलाई आङटावा शेर्पाले भरपाई गरी रु.३०,००,०००।-(तीस लाख) दिएको देखिदा प्रस्तुत मुद्दा कमजोर पार्ने र आफू र बालकृष्ण खाँण समेतका अन्य प्रतिवादीहरुलाई कसुर अपराधबाट बचाउने कार्य गरेको समेतका आधार प्रमाणहरुबाट यी प्रतिवादी टेक नारायण पाण्डे प्रतिवादी बालकृष्ण खाँणसँग प्रत्यक्ष रुपमा मिलेर प्रतिवादी केशव प्रसाद दुलाल, नरेन्द्र के.सी., आङटावा शेर्पा, सानु भण्डारी समेतलाई प्रत्यक्ष रुपमा परिचालन गरी प्रस्तुत संगठित ठगी, लिखत किर्ते एवं राष्ट्रहित प्रतिकुल काम गरी आपराधिक समूहका अन्य प्रतिवादीहरुलाई परिचालन गरी जाहेरवालाहरु समेतबाट संकलन गरिएको ठगीको रकम बाँडफाँड गर्ने, लिनेखाने काममा संलग्न रहेको देखिदा यी प्रतिवादी टेक नारायण पाण्डेले गैर भुटानी शरणार्थी अर्थात आम नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कलीको प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाउन लगाई पीडितहरुलाई हानी नोक्सानी पुर्‍याई ठगी गरी लाभ लिई **प्रतिवादीले मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो।**

यी प्रतिवादी टेक नारायण पाण्डेले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते गरी संगठित अपराध र गरी अकुत सम्पत्ति आर्जन गरेको र भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा निज प्रतिवादी टेक नारायण पाण्डेले **मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो।

त्यसै गरी प्रतिवादी टेक नारायण पाण्डेले गृहसचिव जस्तो सार्वजनिक पदमा बसी आफूलाई लाभ पुर्‍याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी टेक नारायण पाण्डेले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) र उपदफा (७) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार,

गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी टेक नारायण पाण्डेले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी टेक नारायण पाण्डे समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

३. **प्रतिवादी टोप बहादुर रायमाझीको हकमा:**

सानु भण्डारी र केशव प्रसाद दुलालले टेकनाथ रिजाललाई प्रतिवादीको घरमा ल्याई भेट गराउँदा निजले टोप बहादुर रायमाझीले भुटानी शरणार्थीहरुलाई अमेरिका पठाउँदा नेपालीहरुलाई पनि भुटानी बनाई अमेरिका पठाउने आफ्नो योजना रहेको र सो मा सहयोग गरिदिनका लागी टेकनाथ रिजाललाई अनुरोध गरेको भन्ने प्रतिवादी टेकनाथ रिजालको बयानमा खुलेको, नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्यका लागी प्रतिवादीहरु सन्देश शर्मा, सानु भण्डारी, केशव प्रसाद दुलालसँग ललितपुरको बखुण्डोल स्थित टंक गुरुङको रेष्टुरेण्टमा बारम्वार मिटिङ गरेको, आफ्ना भाईलाई कोरोना भई हेलिकप्टरबाट काठमाडौं ल्याएको दिन प्रतिवादी डा.ईन्द्रजित राईसँग नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउने बिषयमा होटल साँग्रिलामा मिटिङ गरेको र सोही मिटिङमा जाहेरवाला प्रेमराज पन्थीलाई निजका आफन्तहरु समेतलाई अमेरिका पठाउने कुराको ग्यारेण्टी गरेको, प्रतिवादी सानु भण्डारीबाट रु.१,६०,००,०००।-(एक करोड साठी लाख) नगदै र निजको छोरा सन्दिप रायमाझीलाई बैंकिङ प्रणालीबाट रु.४०,००,०००।–(चालिस लाख) दिएको भन्ने प्रतिवादी सानु भण्डारीको बयानबाट खुलेको । प्रतिवादी ईन्द्रजित राई र सानु भण्डारी तथा केशव दुलालको बीचमा ईन्द्रजित राईको कार्य कक्षमा नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउने सम्बन्धमा सानु भण्डारी तथा केशव दुलालले ईन्द्रजित राईलाई रकम दिएको र समयमा ईन्द्रजित राईले काम नगरेको सम्बन्धमा हातपात समेत हुँदा निजले सहजकर्ताको भूमिका निर्वाह गरेको भन्ने निजैको बयान समेतबाट खुलेको, प्रतिवादी सानु भण्डारी,

केशव प्रसाद दुलाल, आफु उप-प्रधानमन्त्री तथा उर्जामन्त्री भएको अवस्थामा प्रस्तुत ठगी योजनाका सक्रिय सदस्यहरु केशव प्रसाद दुलाल, सानु भण्डारी, सन्देश शर्मा, ईन्द्रजित राई समेत सँग बाक्लो उठबस, घुमफिर तथा मन्त्रलयबाट तयार हुने चिठ्ठी पत्रहरुको सहजिकरण गरी आफ्नो पदिय जिम्मेवारीको चरम दुरुपयोग गरी जाहेरवालाहरुलाई झुक्यानमा पारेको सानु भण्डारी, केशब प्रसाद दुलाल र टोप बहादुर रायमाझी ईन्द्रजित राईको कार्यकक्षमा बारम्बार आईरहने मानिस हुन २०७७ श्रावण, भदौ महिना तिर एकपटक यी तीनै जना ईन्द्रजित राईको कार्यकक्षमा विवाद भई हातहाला सम्म भएको हुँदा म समेत गई छुट्टाएर ३ जनालाई कार्यकक्ष बाहिर लगेको त्यति बेला मलाई ईन्द्रजित राईले अब देखि यीनीहरुलाई भित्र पस्न नदिनु भनी आदेश दिएको सायद सो कुरालाई निजले बयानमा स्वीकार गरेको । प्रतिवादी सानु भण्डारीको घरबाट बरामद हुन आएको डायरीमा यी प्रतिवादीलाई विभिन्न मितिमा नगदै रकम दिएको भनी अभिलेख राखेको देखिएको हुँदा यी प्रतिवादी टोप बहादुर रायमाझी अन्य प्रतिवादीहरु ईन्द्रजित राई, सानु भण्डारी, केशव प्रसाद दुलाल, सन्दिप रायमाझी र टेकनाथ रिजालसँग प्रत्यक्ष रुपमा मिलेर सुरुवात देखि नै कसूर अपराधको योजनाकारको रुपमा अन्य प्रतिवादीहरुलाई परिचालन गर्ने र आफु समेत परिचालित भई प्रस्तुत संगठित ठगी एवं राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराधमा सक्रिय भूमिका निर्वाह गरी आपराधिक समूहका अन्य प्रतिवादीहरुलाई परिचालन गरी जाहेरवालाहरु समेतबाट संकलन गरिएको ठगीको लिनेखाने काममा संलग्न रहेको देखिदा यी प्रतिवादी टोप बहादुर रायमाझीले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाउन लगाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो ।**

यी प्रतिवादी टोप बहादुर रायमाझीले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा संगठित अपराध, लिखत किर्ते र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लगाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा निज प्रतिवादी टोप बहादुर रायमाझीले **मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो ।

त्यसै गरी प्रतिवादी टोप बहादुर रायमाझीले शक्तिशाली र गरिमामय पदमा बसी आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी टोप बहादुर

रायमाझीले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) र उपदफा (७) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी टोप बहादुर रायमाझीले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी टोप बहादुर रायमाझी समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

४. **<u>प्रतिवादी डा.ईन्द्रजित राईको हकमा</u>:**

भुटानी शरणार्थी सम्बन्धी समस्याको स्थाई र दीर्घकालिन समाधानको उपायहरू पहिल्याउन गठित कार्यदलको गठन चरणबाटै सक्रिय रहेका प्रतिवादी डा.ईन्द्रजित राई र प्रतिवादी सानु भण्डारी तथा प्रतिवादी केशव प्रसाद दुलाल बीच पूर्व चिनजान रहेको, प्रतिवादी सानु भण्डारीले सिफारिस गरेका व्यक्ति गणेश बहादुर के.सी.लाई निजको बिषय बिज्ञता बिना नै कार्यदलमा बिज्ञ सदस्यको रुपमा मनोनित गराउन सफल भएको र सो कुराको जानकारी गणेश बहादुर के.सी.लाई फोन गरेर जानकारी गराएबाट यी प्रतिवादी र सानु भण्डारीको मिलेमतोबाट आफू अनुकुल काम गर्ने मानिसहरुलाई कार्यदलको सदस्यहरु चयन गरे गराएको देखिएको; केशव प्रसाद दुलाल, सानु भण्डारी,टोप बहादुर रायमाझी र टेकनाथ रिजाल समेत भेटघाटको मेसो मिलाई नेपालीहरु समेतलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भन्ने विश्वास गर्न सकिने खालको योजना बनाई सोही योजना अनुसार कार्यदल बनाउन सहजिकरण गरेको; प्रतिवादी सानु भण्डारीको सल्लाह अनुसार RCO को रुपमा काम गर्ने आफ्नो आपराधिक योजना अनुकुलको कर्मचारी चयन गरी सरुवा समेत गराउने कार्य

पश्चात टोकनको रुपमा रकम लिएको; प्रतिवादी सानु भण्डारीको घरबाट बरामद भएको डायरीको पाना 21-4 (2016 April 21 Thursday) मा प्रतिवादी ईन्द्रजित राईको छोरा निरज राई र प्रतिवादी ईन्द्रजित राई समेतलाई मिति २०७६।०३।०२ गते देखि २०७६।०३।२६ गते सम्म ३ पटक गरी भुटानी शरणार्थीका लागी भनी शिर्षक लेखिएको पानामा जम्मा रु.१,५०,००,०००।-(एक करोड पचास लाख) नगद दिएको हिसाब फेला परेको; पक्राउ प्रतिवादी सानु भण्डारीले बयानमा ईन्द्रजित राईलाई रु.१,५०,००,०००।-(एक करोड पचास लाख) नगदै दिएको, डा.ईन्द्रजित राई बस्ने गरेको त्रिपुरेश्वरमा रहेको घरमा गई नगदै रु.१,००,००,०००।-(एक करोड) बुझाएको, हिमालय होटलमा गई डा.ईन्द्रजित राईलाई रु.२,००,००,०००।-(दुई करोड) नगदै बुझाएको भनी खुलाएको; साथै निज प्रतिवादी ईन्द्रजित राईले प्रतिवादी सानु भण्डारीबाट रकम लिए पश्चात समयमा ईन्द्रजित राईले काम नगरेको सम्बन्धमा हातपात समेत हुँदा प्रतिवादी टोप बहादुर रायमाझीले सहजकर्ताको भूमिका निर्वाह गरेको भन्ने प्रतिवादी टोप बहादुर रायमाझी र सानु भण्डारीको बयान समेतबाट देखिएको र सो तथ्यलाई सानु भण्डारी, केशब प्रसाद दुलाल र टोप बहादुर रायमाझी ईन्द्रजित राईको कार्यकक्षमा बारम्बार आईरहने मानिस हुन २०७७ श्रावण, भदौ महिना तिर एकपटक यी तीनै जना ईन्द्रजित राईको कार्यकक्षमा विवाद भई हात हालाहाल सम्म भएको हुँदा म समेत गई छुट्टाएर ३ जनालाई कार्यकक्ष बाहिर लगेको त्यति बेला मलाई ईन्द्रजित राईले अब देखि यीनीहरुलाई भित्र पस्न नदिनु भनी आदेश दिएको सायद यी प्रतिवादी डा.ईन्द्रजित राईले आफ्नो बयानमा ईन्कारी गरेको भए तापनि निज प्रतिवादी ईन्द्रजित राईको NIMB बैंक लि.को खाता नम्वर 0190050761882 मा सन 2021 Sep.6 देखि सन 2021 Oct.03 सम्म जम्मा रकम रु.३,४५,५३,०००।-(तिन करोड पैंतालिस लाख त्रिपन्न हजार) रकम दाखिला भएको देखिएको, NIMB बैंकको खाता नं.019017407269 मा सन 2021 may.4 मा रु.७३,००,०००।-(त्रिहत्तर लाख) ऋण लिएकोमा सो रकम सन 2021 Sept.7 मा ७३,८५,०००।-(त्रिहत्तर लाख पचासी हजार) दाखिला भएको देखिएको; साथै निज प्रतिवादी डा.ईन्द्रजित राईले मिति २०७६।०६।०९ मा निजको श्रीमती भुवन देवी राईको नाममा कित्ता नं.९८७ क्षेत्रफल ०-८-१-० भएको जग्गा साविक जग्गा धनी अम्विका राई र नविना राईबाट रु.७७,००,०००।-(सतहत्तर लाख) मा खरिद गरेको देखिएको । यसैगरी मिति २०७८।०१।१४ गते साविक जग्गाधनी समिरा कार्कीबाट क्षेत्रफल ०-४-०-० जग्गा निज प्रतिवादीको श्रीमती भुवन देवी राईको नाममा रु.१,८३,००,०००।-(एक करोड त्रियासी लाख) मा खरिद गरेको, यसैगरी मिति २०७७।०३।०२ मा साविक जग्गाधनी श्याम महर्जनबाट कित्ता नं.११२७ क्षेत्रफल ०-४-०-० आना जग्गा समेत खरिद गरेको देखिएबाट यी प्रतिवादी डा. ईन्द्रजित राईले नेपालीहरुलाई भुटानी शरणार्थी बनाई विदेश पठाई दिन्छौं भनी प्राप्त गरेको रकमबाट उल्लेखित खरिद समेतका कार्यहरु गरेको देखिएको हुँदा यी प्रतिवादीले अन्य प्रतिवादीहरु सानु भण्डारी, केशव प्रसाद दुलाल, टोप बहादुर रायमाझी समेतसँग मिलेमतो गरी आपराधिक समूह बनाई समूहका सदस्यहरुको जिम्मेवारी तोकी जिम्मेवारी अनुरुप परिचालित भई जाहेरवालाहरुबाट संकलन गरिएको रकम संगठित रुपमा ठगी गरी एवं नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराध गरी गराई सो कार्यमा सक्रिय भूमिका निर्वाह गरेको देखिदा यी प्रतिवादी डा.ईन्द्रजित राईले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाउन लगाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो ।**

यी प्रतिवादी डा.ईन्द्रजित राईले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा मुनाफा आर्जन गर्नका लागि प्रतिवादीहरुले एक आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते, संगठित अपराध र ठगी धन्दा अगाडि बढाई अकुत सम्पत्ति आर्जन गरेको र नक्कली प्रतिवेदन तथा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो।

त्यसै गरी प्रतिवादी डा.ईन्द्रजित राईले सार्वजनिक पदमा बसी आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) र उपदफा (७) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी डा.ईन्द्रजित राई समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

५- **प्रतिवादी केशव प्रसाद दुलालको हकमा**:

केशव प्रसाद दुलालका विरुद्ध जाहेरवालाहरु गजेन्द्र बुढाथोकी समेतका विभिन्न जाहेरवालाहरुले निजले रकम ठगी गरी लिए खाएको भन्ने किटानी जाहेरीहरु रहेको, प्रस्तुत कसूर अपराधका योजनाकार मध्येका प्रतिवादी टोप बहादुर रायमाझी, सानु भण्डारी, टेकनाथ रिजाल र ईन्द्रजित राई समेत सँग प्रस्तुत कसूर अपराधका सम्बन्धमा सुरुवात देखि नै निकट सम्बन्धमा रही योजना बनाउने, रकम लिने, सरकारी निर्णयहरु समेतका कागजातहरु प्राप्त गरी वितरण गर्ने, जाहेरवालाहरुको बायोमेट्रिक गराउने समेतको कार्यमा मुख्य भई काम गर्ने भनी प्रतिवादीहरु टेकनाथ रिजाल, राम शरण के.सी., सन्देश शर्मा र जाहेरवाला प्रेमराज पन्थीबाट खुलेको; बालकृष्ण पन्थी संयोजक रहेको कार्यदलका सदस्यहरुलाई विभिन्न ठाउँहरुमा घुमाउने, निजहरुलाई खर्च समेतको व्यवस्था गरी दिने, जाहेरवालाहरुलाई नक्कली भुटानी शरणार्थी हुन भनी विवरणहरु टिपाउने समेतको काम गरी कार्यदललाई प्रभाव पार्ने कार्य गरेको; प्रतिवादी सानु भण्डारीको घरबाट बरामद डायरीमा भुटानी शरणार्थीबाट ठगी गरेको रकम निज प्रतिवादी केशव प्रसाद दुलाल मार्फत प्रतिवादी सानु भण्डारीलाई दिएको देखिएको, निजै प्रतिवादी केशव प्रसाद दुलालले भुटानी शरणार्थी नेता प्रतिवादी टेकनाथ रिजाललाई गौशाला स्थित रहेको होटल रोजस्टारमा लगी ३/४ दिन सम्म राखेको, प्रतिवादी केशव प्रसाद दुलाल, प्रतिवादी डा.ईन्द्रजित राई र प्रतिवादी टेकनाथ रिजालले गृह मन्त्रालयमा खिचेको फोटोलाई ठगी गर्ने साधनको रुपमा प्रयोग गरेको भन्ने टेकनाथ रिजालले बयानमा खुलाएको; केशव प्रसाद दुलाल र टेक नारायण पाण्डे बीचको संवादमा **(९८०११४२९९-९८६००५२१००(18 Apr. 2022-)** केशवले सर पन्थी सरले कस्तो राय दिनु भयो हजुर भनी भनेको, टेकनारायणले डिटेल कुरा भो, अब UNHCR सँग मिटिङ्ग छ, अनि थप काम हुन्छ भनी भनेको। केशवले छुट भएको हकमा कसरी गर्ने हजुर भनी भनेको। टेकनारायणले मिलाउछन् भनी भनेको। केशवले क्याम्पमा नभएकाको हकमा भनी भनेको। टेकनारायणले ठिक छ मिलाउने हो भनी भनेको। केशवले भोलि UNHCR सँगको मिटिङ्ग पछि भेटौन हजुर भनी भनेको। टेकनारायणले हस भनी भनेको। टेकनारायणले छलफल हुँदै छ भनी भनेको। **(31 May 2022)** केशवले प्रमोद शर्मा मन्त्रीसँग नजिक छन हजुर, टेकनाथ रिजाललाई हाम्रो डिसिजन बिना हुन्न भन्दै थिए रे भनी भनेको। टेकनारायणले प्रमोद चिन्छु, मन्त्रीज्यूको सामान रेडी भएन भनी भनेको। केशवले भोली रेडी हुन्छ जस्तो छ हजुर भनी भनेको। टेकनारायणले मन्त्री ज्यूलाई म भेट गराउछु भनी भनेको। केशवले भोली Financial arrange भएपछि हजुर मार्फत् भेट्ने हो हजुर भनी भनेको। टेकनारायणले हस भनी भनेको। **(02- jun 2022)** केशवले सर नमस्ते मन्त्री ज्यूसँग कति बजे टाईम भयो हजुर भनी भनेको। टेकनारायणले मन्त्रीज्यूको गिफ्ट ल्याएनौ भनी भनेको। केशवले ओके, गेटमा हजुर तल भन्दिनु भनी भनेको। टेकनारायणले, मन्त्रालय गेट हो नी भनी भनेको। केशवले हजुर भनेको। टेकनारायणले ल भन्या छु , गिफ्ट माथि लिएर आउनु, गिफ्ट कहाँ छ सँगै लिएर आउनु भनी भनेको देखिदा प्रतिवादी टेक नारायण पाण्डे र प्रतिवादी केशव प्रसाद दुलाल बीच What's App र Viber मा कुराकानी भई टेक नारायण पाण्डे मार्फत प्रतिवादी बालकृष्ण खाँणलाई भेटी रकम दिएको, प्रतिवादी

टेक नारायण पाण्डेसँग भुटानी शरणार्थी सम्बन्धी नीतिगत निर्णय, गृहमन्त्रीसँगको कुराकानी, UNHCR सँगको मिटिङको गतिविधि लगायत कार्यदलका संयोजक बालकृष्ण पन्थी समेतसँगको मिटिङ बारे प्रतिवादी टेक नारायण पाण्डे मार्फत जानकारी लिने र निर्णयहरुको प्रतिलिपीहरु What's App र Viber बाटै प्राप्त गरी जाहेरवालालाई देखाउने गरेको, प्रतिवादी टेक नारायण पाण्डे, प्रतिवादी नरेन्द्र के.सी., प्रतिवादी बालकृष्ण खाँण, प्रतिक थापालाई ठगीबाट प्राप्त रकम दिएको भनी जाहेरवाला प्रेमराज पन्थी र प्रतिवादी राम शरण के.सी.ले पोल गरी खुलाएको, यीनै प्रतिवादीले नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउने बिषयमा प्रतिवादी टंक गुरुङको बखुण्डोल स्थित रेष्टुरेन्टमा टोप बहादुर रायमाझी, सन्देश शर्मा, राम शरण के.सी. समेतका मानिसहरुको मिटिङ गराएको, होटल सांग्रिलामा ईन्द्रजित राईसँग बसेर यसै बिषयमा मिटिङ गरी प्रेमराज पन्थीलाई जसरी पनि अमेरिका पठाउँछु भनेर ग्यारेन्टी गरेको भन्ने प्रेमराज पन्थीले खूलाएको, जाहेरवालाबाट लिएको रकम मध्ये रु.२०,००,०००।– (बीस लाख) आफ्नो श्रीमती दीपा हुमागाञीको खातामा जम्मा गराएको समेतका आधार प्रमाणबाट प्रतिवादी केशव प्रसाद दुलाल अन्य प्रतिवादीहरु सानु भण्डारी, टोप बहादुर रायमाझी, ईन्द्रजित राई, सन्देश शर्मा, बालकृष्ण खाँण, नरेन्द्र के.सी. र राम शरण के.सी. समेतसँग मिलेमतो गरी आपराधिक समूह बनाई समूहका सदस्यहरुको जिम्मेवारी तोकी जिम्मेवारी अनुरुप परिचालित भई जाहेरवालाहरुबाट संकलन गरिएको रकम संगठित रुपमा ठगी गरी एवं नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराध गरी गराई सो कार्यमा नेतृत्वदायी र सक्रिय भूमिका निर्वाह गरेको देखिदा यी प्रतिवादी केशव प्रसाद दुलालले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो ।**

यी प्रतिवादी केशव प्रसाद दुलालले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृह मन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते, संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा निज प्रतिवादी केशव प्रसाद दुलालले **मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो।

त्यसै गरी प्रतिवादी केशव प्रसाद दुलालले आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा

आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी केशव प्रसाद दुलालले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो ।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा निज **प्रतिवादी केशव प्रसाद दुलालले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी केशव प्रसाद दुलाल समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ ।

६. **प्रतिवादी सानु भण्डारीको हकमा:**

यी प्रतिवादी विरुद्ध जाहेरवालाहरु गजेन्द्र बुढाथोकी समेतका विभिन्न जाहेरवालाहरुले निजले रकम ठगी गरी लिए खाएको भन्ने किटानी जाहेरीहरु रहेको, प्रस्तुत कसूर अपराधका योजनाकार मध्येका प्रतिवादी टोप बहादुर रायमाझी, केशव प्रसाद दुलाल, टेकनाथ रिजाल, ईन्द्रजित राई, सन्देश शर्मा, टेक नारायण पाण्डे, नरेन्द्र के.सी, बालकृष्ण खाँण, आङटावा शेर्पा समेतसँग प्रस्तुत कसूर अपराधका सम्बन्धमा सुरुवात देखि नै निकट सम्बन्धमा रही योजना बनाउने, रकम लिने, सरकारी निर्णयहरु समेतका कागजातहरु प्राप्त गरी वितरण गर्ने, जाहेरवालाहरुको बायोमेट्रिक गराउने समेतको कार्यमा मुख्य भई काम गर्ने भनी प्रतिवादीहरु टेकनाथ रिजाल, राम शरण के.सी., सन्देश शर्मा र जाहेरवाला प्रेमराज पन्थीबाट खुलेको; बालकृष्ण पन्थी संयोजक रहेको कार्यदलका सदस्यहरुलाई विभिन्न ठाउँहरुमा घुमाउने, निजहरुलाई खर्च समेतको व्यवस्था गरी दिने, जाहेरवालाहरुलाई नक्कली भुटानी शरणार्थी हुन भनी विवरणहरु टिपाउने समेतको काम गरी कार्यदललाई

प्रभाव पार्ने कार्य गरेको; निजकै घरबाट बरामद डायरीमा २०१६ नविल बैंक लेखिएको डायरीमा भुटानी शरणार्थीको रकमबाट खर्च भएको शिर्षक उल्लेख भई सन्दिप रायमाझीलाई रु.२०,००,०००।-(बिस लाख), टोप बहादुर रायमाझीलाई रु.८,००,०००।-(आठ लाख), निरज राईलाई रु.५०,००,०००।-(पचास लाख), पुन: निरज राईलाई रु.३५,००,०००।-(पैंतिस लाख), निरज राई र डा.ईन्द्रजित राई रु.६५,००,०००।-(पैंसठ्ठी लाख) लाई दिएको अभिलेख देखिएको; सोही डायरीमा भेषराज पोखरेलबाट रु.३० लाख, ऐ.भेषराजबाट काठमाडौंमा लिएको रकम रु.१० लाख, निजै भेषराजबाट चेकबाट आएको रकम रु.१० लाख, मिति २०७६।०२।३० गते अशोक पोखरेल मामाबाट आएको नगद रु.१० लाख, मिति २०७६।०२।३० गते सानु भण्डारी आफैले उठाएको रु.१० लाख, मिति २०७६।०२।३१ गते दुलाल मामाबाट आएको रु.५ लाख, २०७६।०३।०४ मा दुलाल मामाबाट आएको १० लाख, मिति २०७६।०३।०५ गते दुलाल मामाबाट आएको रु.७,००,०००।–(सात लाख), मिति २०७६।०३।०८ गते दुलाल मामाबाट आएको रु.९ लाख, मिति २०७६।०३।१५ गते दुलाल मामाबाट खातामा आएको रु.८ लाख, मिति २०७६।०३।१५ गते राम शरण के.सी.बाट खातामा आएको रु.५ लाख, मिति २०७६।०३।१८ गते दुलाल मामाबाट खातामा आएको रु.८ लाख, मिति २०७६।०३।१८ गते राम शरण के.सी.बाट खातामा रु.८ लाख, ऐ.०३।१९ गते दुलाल मामाबाट खातामा आएको रु.४ लाख, ऐ.३।२० गते राम शरण के.सी.ले नगद दिएको रु.४ लाख, ऐ.०३।२२ गते डम्बर राईबाट आएको नगद रु.१ लाख, ऐ.०३।२२ गते डम्बर राईको चेकबाट आएको रु.३ लाख, ऐ.०३।२३ गते केशव मामाबाट आएको नगद रु.१९ लाख, ऐ.०३।२४ गते दुलाल मामाबाट आएको नगद रु.१५ लाख, ऐ.०३।२५ गते दुलाल मामाबाट आएको नगद रु.५लाख, ऐ.०३।२६ गते दुलाल मामाबाट आएको रु.४८ लाख, ऐ.०३।२६ दुलाल मामाबाट आएको रु.८ लाख, ऐ.०३।२७ गते विक्रम भाईबाट आएको रु.४ लाख समेत गरी जम्मा रकम रु.२,३३,००,०००।-(दुई करोड तेत्तिस लाख) नगद तथा चेकबाट रकम प्राप्त गरेको देखिएकोमा सो सम्पूर्ण हरहिसाव नेपालीहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्यकै लागी प्राप्त रकम हो भनी निजैले बयानमा खुलाएको; प्रतिवादी सानु भण्डारीको ICFC फाईनान्स लि.मा रहेको खाता नं.01108900064258000002 मा सन 20 Aug.2019 मा एकै पटक रु.२२,००,०००।-(बाईस लाख), सोही मितिमा पुन:सोही फाईनान्समा रु.५९,००,०००।-(उनान्साठी लाख), हिमालयन बैंकको खाता नं.0360826230016 मा 6 Aug.2010, 30 Jun.2019, 3 July 2019, 02 Oct.2019 समेतमा ३ पटक समेत गरी कूल जम्मा रु.१,४२,५०,०००।-(एक करोड बयालिस लाख पचास हजार) प्रतिवादी मध्येका राम शरण के.सी.ले जम्मा गरेको भौचर सहितका कागजातहरु पबिता राईले पेश गरेको कागजातहरुबाट देखिएको; निजै सानु भण्डारीको हिमालयन बैंकको खाता नं.0360826230016 मा जाहेरवाला प्रेमराज पन्थीले सन 10 Jun.2019 मा एकै पटक रु.३०,००,०००।-(तिस लाख) जम्मा गरेको देखिएको र सो सम्पूर्ण रकम समेत नेपालीहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउने कार्यकै रकम हो भन्ने जाहेरवाला प्रेमराज पन्थीले खुलाएको समेतका आधार कारणबाट यी प्रतिवादी सानु भण्डारी प्रस्तुत ठगी तथा संगठित अपराध मुद्दामा प्रत्यक्ष संलग्न रही पीडितहरुबाट रकम ठगी गर्ने कार्य तथा नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराध गरी गराई सो कार्यमा नेतृत्वदायी र सक्रिय भूमिका निर्वाह गरेको देखिदा यी प्रतिवादी सानु भण्डारीले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी**

**अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो ।**

यी प्रतिवादी सानु भण्डारीले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते, संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र नक्कली प्रतिवेदन तथा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा निज प्रतिवादी सानु भण्डारीले **मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो ।

त्यसै गरी प्रतिवादी सानु भण्डारीले आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी सानु भण्डारीले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो ।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी सानु**

**भण्डारीले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो ।

प्रतिवादी सानु भण्डारी समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ ।

७. **प्रतिवादी आङटावा शेर्पाको हकमा**:

प्रतिवादी आङटावा शेर्पाले मौकामा कागज गर्दा जाहेरवालाहरु समेतका नेपाली नागरिकहरुलाई नक्कली भूटानी शरणार्थीहरु बनाई अमेरिका लैजाने भनी ठगी गरेको कसूरमा सानु भण्डारी र केशव प्रसाद दुलाललाई प्रहरीले पक्राउ गरी हिरासतमा राखेको बेलामा सानु भण्डारी समेतले उक्त ठगी कसूरमा बालकृष्ण खाँण समेतको नाम लिंदैछन भन्ने तत्कालिन स्वकीय सचिव नरेन्द्र के.सी.ले थाहा पाई सानु भण्डारी र केशव प्रसाद दुलाललाई भेटेर बालकृष्ण खाँडलाई पोल नगर्ने भनी दिनुहोस भनी नरेन्द्र के.सी.ले आङटावा शेर्पालाई भेट्न पठाएको र प्रहरी हिरासतमा रहेका बखत आङटावा शेर्पाले केशव र सानुसँग कुरा गर्दा बालकृष्ण खाँणले उनीहरुबाट रु.१,२५,००,०००।-रकम लिएको कुरा बयानमा लेखाई दिने, रकम फिर्ता दिई निजको बारेमा नबोल्ने कुरामा सहमति भएको, सो रकम मध्ये पटक-पटक गरी रु.१ करोड स्वकिय सचिव नरेन्द्र के.सी.ले सानुहरुलाई फिर्ता गरी दिनु भनी आङटावा शेर्पालाई दिएको; आङटावा शेर्पाले नरेन्द्र के.सी.लाई भेटेर बालकृष्ण खाँणले सो रकम फिर्ता नगरे बालकृष्ण खाँणलाई पोल गर्ने कुरा गरेका छन भनेर सुनाएपछि निजले म रकमको ब्यबस्था गर्छु रकम फिर्ता गरी दिन्छौं भनी नगदै कुल रु.१,००,००,०००।-(एक करोड) रकम आङटावाको घरमा ल्याई दिएका हुन भन्ने खुलाएको; सो रकम पाए पछि खर्च गरेको सम्बन्धमा हिसाब विवरण खुलाउन नचाहेको र निजको घरबाट बरामद डायरीमा सोही रकम मध्येको रु.३०,००,०००।–(तिस लाख) सानु भण्डारीको दाजु राजु भण्डारीलाई दिएको देखिएकोमा सो होईन भनी ईन्कारी बयान दिएको तर डायरीमा लेखिएको हस्ताक्षर निजै को भएको भन्ने बैज्ञानिक परीक्षणबाट देखिएकोले नरेन्द्र के.सी.बाट प्राप्त रु.१,००,००,०००।-(एक करोड) नगदै रकम पीडितहरु र सानु भण्डारीको आफन्तहरुलाई फिर्ता गरेको पुष्टी भएको; निजको पोलिग्राफ हुँदा निजले दिएको ईन्कारी बयान झुठो रहेको भन्ने देखिएको; निजले विभिन्न पीडितहरुबाट लिएको रकम फिर्ताका लागी पीडितहरुले दवाव दिएको र रकम फिर्ता गर्छु भनी कबुलियत गरेको देखिने भिडियो एवं निजले विभिन्न व्यक्तिहरुलाई नक्कली शरणार्थीको नाममा अमेरिका पठाई दिने भनी विभिन्न संचार माध्यम समाचारहरु प्रकाशित भएको । साथै निजै प्रतिवादी आङटावा शेर्पाको विरुद्धमा जाहेरी दिएका जाहेरवालाहरु जिमा सेपेर्नी, तेन्जी पुटी सेर्पिनी, जिमा सेर्पा, पेम्बा शेर्पा, लमडोमा शेर्पा, सोनी शेर्पालाई निज प्रतिवादीले भुटानी सरणार्थी बनाई पटक-पटक निज प्रतिवादी आङटावा शेर्पाको कुमारी बैंक लि.को 0190012654500002 न.को खातामा गरी नगद रु.५४,००,०००।–(चौवन्न लाख) रकम ठगी गरेको भनी किटानी जाहेरी परेको समेतका आधार कारणबाट प्रतिवादी आङटावा शेर्पा समेत प्रस्तुत ठगी एवं संगठित अपराधमा प्रत्यक्ष संलग्न रही पीडितहरुबाट रकम ठगी गर्ने कार्य तथा नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराध गरी गराई सो कार्यमा सक्रिय भूमिका निर्वाह गर्नमा प्रत्यक्ष संलग्न रहेको मिसिल संलग्न कागजातहरुबाट देखिदा यी प्रतिवादी आङटावा शेर्पाले नेपाली

नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो ।**

यी प्रतिवादी आङटावा शेर्पाले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते, संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र नक्कली प्रतिवेदन तथा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा **निज प्रतिवादी आङटावा शेर्पाले मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो ।

त्यसै गरी प्रतिवादी आङटावा शेर्पाले आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी आङटावा शेर्पाले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो ।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाजी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले

ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी आङटावा शेर्पाले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको देखिन्छ।

प्रतिवादी आङटावा शेर्पा समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

८. **प्रतिवादी सन्देश शर्माको हकमा :-**

जाहेरवाला गजेन्द्र बुढाथोकी र जाहेरवाला राम कुमार रेग्मी समेतले सन्देश शर्माका बिरुद्दमा ठगी गरेको भनी किटानी जाहेरी दिएको; सन्देश शर्माले WhatsApp बाट श्रम मन्त्रालय, गृह मन्त्रालय र नेपाल सरकारका बिभिन्न निकायहरुबाट भुटानी शरणार्थीहरुको सम्बन्धमा भएको निर्णय र सो सँग सम्बन्धि समाचारको फोटो, भुटानी शरणार्थी सम्बन्धी समाचार लिंकहरु, सिडियो लगायत कर्मचारीको सरुवा सम्बन्धि कुराहरु, बिभिन्न व्यक्तिको नाम समावेश भएको शरणार्थीको नामावली विवरण भएका लिष्टहरु, गृह मन्त्रालय र जिल्ला प्रशासन कार्यालयको पत्रहरु, बिभिन्न फोटो, भिडियोहरु, बिभिन्न व्यक्तिका नाममा बनेका शरणार्थी परिचय पत्र लगायतका विवरणहरु जाहेरवालाहरु समेतलाई पठाई बिश्वासमा पार्ने काम गरेको; जाहेरवाला गजेन्द्र बुढाथोकीबाट जम्मा रकम रु.९,७८,००,०००।-(नौ करोड अठहत्तर लाख) रकम र जाहेरवाला राम कुमार रेग्मी तथा निजले चिनेका अन्य १५ जना समेतबाट ३,८५,००,०००।-(तिन करोड पचासी लाख) रकम लिएको भन्ने जाहेरी दरखास्तमा खुलेको; निज प्रतिवादी सन्देश शर्माले लुम्विनी बिकाश बैंकको खाता नम्वर 01640220154134000004, केशव तुलाधर, सिद्धार्थ बैक खाता नं.00415149393,केशव तुलाधरकै NIC Asia Bank खाता नम्वर 0064050874800001, लक्ष्मी महर्जन खाता नम्वर 00203846900018 जाहेरवालाहरु समेतलाई पठाई सो खाताहरु मध्ये केशव तुलाधरको सिद्धार्थ बैंकको खाता नम्वर 00415149393 मा रु.१,७८,००,०००।-(एक करोड अठहत्तर लाख) र सोही मितिमा रु.३०,००,०००।-(तिस लाख) जम्मा भएको, सोही खातामा जाहेरवाला गजेन्द्र बुढाथोकी रु.२०,००,०००।-(बिस लाख) र रु.१५,००,०००।-(पन्ध्र लाख) जम्मा गरेको देखिएको, लक्ष्मी महर्जनको हिमालयन बैंकमा रु.१०,००,०००।-(दश लाख) जम्मा गरेको देखिएको हुँदा यी प्रतिवादी सन्देश शर्माले जाहेरवालाबाट ठगी गरी लिएको रकम बिभिन्न ब्यक्तिहरुको खातामा जम्मा गराइ उक्त रकम आफैले लिएको र अन्य प्रतिवादीहरुलाई दिएको देखिएको; जाहेरवालाहरुले दिएको रकम को ग्यारेन्टीको लागि निज प्रतिवादीले आफ्नो ग्लोबल आइएमई बैंक शंखमुल शाखाको खाता नं.R507010007916 को रु.३ करोड बराबरको ४ थान र अर्का जाहेरवाला गजेन्द्र बुढाथोकीलाई सोही खाताको रु.५ करोड बराबरको चेक समेत दिएको देखिएबाट निज प्रतिवादी सन्देश शर्माले पटक-पटक गरी जाहेरवालाहरुबाट ठगी गरी लिएको रकम आफैंले लिए खाएको तथा आफैंले अन्य प्रतिवादीहरुलाई दिएको देखिन आएको; निज सन्देश शर्मा स्वयं आफै सरकारी कर्मचारी हुँ भन्दै सरकारी कर्मचारीको पोशाक लगाई कार्ड समेत भिरेको देखाई प्रतिवादी मध्येका शमसेर मियाँले चढ्ने गरेको सरकारी गाडी हाल अनुसन्धानको क्रममा दाखिला हुन आएको बा.१ झ.१५८१ (वास्तविक नम्वर बा.१ञ.१५८१

ईम्बोस्ड नम्वर BAB 1405) समेत प्रयोग लिई चितवन सौराहा स्थित रहेको भिजन सफारी रिसोर्टमा दुई दिन सम्म विभिन्न जाहेरवालाहरुको फोटो खिच्ने, बायोमेट्रिक गर्ने समेतको कार्य गरि जाहेरवालाहरुबाट सोही होटलमा संकलन गरेको रकम प्लाष्टिकको २ वटा बोरामा राखि बोराको मुख बाँधी सो बा.१ झ.१५८१ नम्वरको सरकारी गाडीको पछाडी राखि काठमाण्डौ ल्याएको भन्ने बुझिएका मानिसहरु गौतम गिरी र झप्पड बहादुर खत्री समेतले गरी दिएको कागज व्यहोराबाट खुलेकोले निज प्रतिवादी सन्देश शर्मा प्रस्तुत ठगी एवं संगठित अपराधमा प्रत्यक्ष संलग्न रही पीडितहरुबाट संगठित रुपमा रकम ठगी गर्ने कार्य तथा नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराध गरी गराई सो कार्यमा प्रत्यक्ष संलग्नता रहेको देखिदा यी प्रतिवादी सन्देश शर्माले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो।**

यी प्रतिवादी सन्देश शर्माले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते, संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र नक्कली प्रतिवेदन तथा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा **निज प्रतिवादी सन्देश शर्माले मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो।

त्यसै गरी प्रतिवादी सन्देश शर्माले आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी सन्देश शर्माले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) बमोजिम राज्य विरुद्धको कसूर गरेको देखिन्छ।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको

कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी सन्देश शर्माले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी सन्देश शर्मा समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

९. **प्रतिवादी शमसेर मियाँको हकमा:**

प्रतिवादी शमसेर मियाँ टोप बहादुर रायमाझी, सन्देश शर्मा, सानु भण्डारीले नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थीहरु बनाई अमेरिका पठाउने भनी ठगी गर्ने कार्यका लागी ललितपुरको बखुण्डोलमा रहेको टंक गुरुङको होटलमा बारम्बार हुने मिटिङमा संलग्न रहेको निजैको बयानबाट खुल्न आएकोले निज समेत ठगी अपराधमा संलग्न रहेको; निज प्रतिवादी नेपाल हज समितीको अध्यक्ष भएकोले निजलाई नेपाल सरकारले उपलब्ध गराएको बा.१.झ.१५८१ नम्वरको सरकारी गाडी सरकारी कामकाजका लागी मात्र सरकारले निजलाई हस्तान्तरण गरेकोमा निज प्रतिवादीले पूर्व चिनजान समेत रहेका र ठगी एवं संगठित कसूर अपराधमा संलग्न रहेका प्रतिवादी सन्देश शर्मालाई उक्त गाडी दिई निज प्रतिवादी सन्देश शर्माले उक्त गाडी मिति २०७६।०२।२७/२८ गते तिर उक्त गाडी चितवन सौराहाको भिजन सफारी होटलमा लगी जाहेरवालाहरुको बायोमेट्रिक गर्ने भनी करौडौ रकम संकलन गरी सोही गाडीमा २ बोरामा उक्त रकम राखी काटमाडौं ल्याई बाँडफाड गरी ठगी गर्ने कार्यमा प्रयोग गर्नु गराउनुले उक्त ठगी गर्ने कार्यमा हज कमिटीका अध्यक्ष रहेका निज प्रतिवादी शमसेर मियाँ समेत आपराधिक समूहको एक सदस्य रही कसूर वारदातमा संलग्न रहेको स्पष्ट देखिन आई निज प्रतिवादी शमसेर मियाँ ठगी एवं संगठित अपराधमा प्रत्यक्ष संलग्न रही पीडितहरुबाट संगठित रुपमा रकम ठगी गर्ने कार्य तथा नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराध गरी गराई सो कार्यमा प्रत्यक्ष संलग्न रहेको देखिदा यी प्रतिवादी शमसेर मियाँले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई सरकारी श्रोत साधनको दुरुपयोग गरी

करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो।**

यी प्रतिवादी शमसेर मियाँले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते, संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र नककली प्रतिवेदन तथा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा **निज प्रतिवादी शमसेर मियाँले मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो।

त्यसै गरी प्रतिवादी शमसेर मियाँले आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी शमसेर मियाँले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) र उपदफा (७) बमोजिम राज्य विरुद्धको कसूर गरेको** पुष्टि हुन आयो।

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी शमसेर**

**मियाँले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी शमसेर मियाँ समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

१०. **प्रतिवादी टेकनाथ रिजालको हकमा:**

प्रतिवादी मध्येका टेकनाथ रिजालले बयानको क्रममा नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी पीडितहरुबाट रकम लिने कार्यमा प्रतिवादीहरु केशव प्रसाद दुलाल, सानु भण्डारी, राम शरण के.सी., प्रेमराज पन्थी, ईन्द्रजित राई र टोप बहादुर रायमाझी शुरु अवस्था देखि नै संलग्न छन भन्ने आफूलाई थाहा भएको भनी खुलाएको, टोप बहादुर रायमाझी, सानु भण्डारी र केशव दुलालबीच टोप बहादुर रायमाझीकै घरमा भेट भई नेपालीहरुलाई नक्कली भुटानी बनाई अमेरिका पठाउने बारेमा छलफल र कुराकानी भएको; ५/६ बर्ष पहिले राम शरण के.सी.मेरो आफ्नै घरमा गई नेपालीहरुलाई नक्कली भूटानी बनाई अमेरिका लैजाने योजना बारेमा जानकारी दिएको सो को लागि मद्दत माग्न आएका भन्ने खुलाएको, राम शरण के.सी.लाई भेषराज शर्मा लम्साल र केशव दुलालसँग चाहबेलको A1(एवान) पार्टी प्यालेसमा भेट गराई दिएको भनी खुलाएको; राम शरण के.सी.लाई टेकनाथ रिजालले प्रतिवादी केशव प्रसाद दुलाल र भेषराज लम्सालसँग भेट गराई निज टेकनाथ रिजालले अब काम हुन्छ भुटानी शरणार्थी बनाई अमेरिका लगिदिने सम्पुर्ण कार्य वहाहरुले गर्नु हुन्छ भनी ग्यारेण्टी गरेको; मिति २०७६ असार/श्रावणमा आफ्नो र आफ्नो चिनजानका ३४ जना व्यक्तिहरुको भुटानी शरणार्थी कार्ड (परिचय पत्र) Bhutan Human Right Organization, Membership Card बनाई सो कार्डमा टेकनाथ रिजालले सहिछाप गरी दिएको भनी खुलाएको र सो कुरा टेकनाथ रिजालले स्वीकार गरी बयान गरेको; निज प्रतिवादी टेकनाथ रिजाल, केशव प्रसाद दुलाल र ईन्द्रजित राईको फोटो मिसिल संलग्न देखिनु, निज प्रतिवादी टेकनाथ रिजाललाई गौशाला स्थित रहेको प्रतिवादी केशव प्रसाद दुलालले नक्कली भूटानी शरणार्थी बनाउने कार्यका लागी फारम भर्ने र बायोमेट्रिक गर्ने कार्यका लागी बुक गरेको रोजस्टार होटलमा ३/४ दिन सम्म राखेको; निज प्रतिवादी राम शरण के.सी.बाट प्रतिवादी टेकनाथ रिजालले रु.११,००,०००।-(एघार लाख) नगदै निजको घर झापामा लिएको हो भनी प्रतिवादी राम शरण के.सी.ले खुलाई लेखाई दिएको साथै प्रतिवादी सानु भण्डारीको घरबाट बरामद भएको डायरीमा यी प्रतिवादी टेकनाथ रिजालको लागी खर्च भएको भनी विवरण फेला परेको; जिल्ला झापा खुदुनाबारी-४ बस्ने सुमित्रा पौडेललाई प्रतिवादी टेकनाथ रिजालले नक्कली भुटानी शरणार्थी बनाई अमेरिका पठाउनको लागी सानु भण्डारी र केशव प्रसाद दुलालसँग भेट गराई दिई रकम समेत दिएको र लामो समय सम्म काम नभएकोले कामको लागी प्रतिवादी टेकनाथ रिजाललाई ताकेता गरेको भन्ने निजै सुमित्रा पौडेले खुलाई लेखाई दिएको समेतका आधार कारणबाट यी प्रतिवादी टेकनाथ रिजाल पनि प्रतिवादीहरु ईन्द्रजित राई, सानु भण्डारी, केशव दुलाल, टेक नारायण पाण्डे, टोप बहादुर रायमाझी, राम शरण के.सी.समेत सँग मिलेमतो गरी संगठित तवरले पीडित जाहेरवालाहरुलाई ठगी गर्ने कार्य गर्नुका साथै नेपालमा लामो समय सम्म भुटानी शरणार्थीको रुपमा बसी नेपाल सरकारबाट सेवा सुविधा समेत लिई नेपाली नागरिकहरुलाई नक्कली भुटानी शरणार्थी बनाई तेश्रो

मुलुकमा पठाई दिन्छु भनी ठगी कार्य गरेबाट नेपाल राष्ट्रको हितको प्रतिकुल हुने काम समेत गरेको देखिदा यी प्रतिवादी टेकनाथ रिजालले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुर्‍याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो ।**

यी प्रतिवादी टेकनाथ रिजालले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम आर्जन उद्देश्यले प्रतिवादीहरुले एक आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कल प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा नेपाली नागरिकलाई परिचर पत्र जारी गी लिखत किर्ते, संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र नक्कली प्रतिवेदन तथा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा **निज प्रतिवादी टेकनाथ रिजालले मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो ।

त्यसै गरी प्रतिवादी टेकनाथ रिजालले आफूलाई लाभ पुर्‍याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी टेकनाथ रिजालले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) र उपदफा (७) बमोजिम राज्य विरुद्धको कसूर गरेको देखिन्छ ।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल,

सागर राई, दिपा हुमागाञी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी टेकनाथ रिजालले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो ।

प्रतिवादी टेकनाथ रिजाल समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ ।

११- **प्रतिवादी नरेन्द्र के.सी.को हकमा:**

प्रतिवादी नरेन्द्र के.सी. र बालकृष्ण खाँणबाट बरामद भएको "***नरेन्द्र जि,ओली वा र देउवाले प्रधानमन्त्रीलाई भनेर जाहेरीका मुख्य प्रतिवादीहरूलाई मात्र मुद्धा दायर गर्ने र अब थप आरोपित ब्यक्तिलाई पक्राउ नगर्ने हो भने मुद्धाले सहज रुप लिन्छ नभए जटिल मोडमा राजनिति पुग्ने अवस्था छ" भनी लेखिएको कागज र "दुलालको पुन:बयान गराएर पुरानो भनेको कुरा सच्याउन पर्‍यो । नभए मन्त्रीज्यू समेतको मुद्धा जान सक्छ, अदालतमा गएर इन्कारी बयान दिएर हुँदैन । मन्त्रालयमा मन्त्री, सचिव र अन्य कसैसँग पनि लेनदेनको बिषयमा कुनै कुराकानी नै भएको छैन । १ हप्ताको म्याद थप भएको छ, यही अवधिमा जुनसुकै हालतमा सच्याई बयान हुनुपर्छ । पार्टी भित्र र विशेषत आफ्नै गुटका नेताहरु मन्त्री किन अहिले सम्म नल्याएको भनेर फलोअप गरी रहेका छन***" भन्ने समेत व्यहोराको कागजमा समेत प्रतिवादी टेक नारायण पाण्डेले हिरासतबाटै निज प्रतिवादी नरेन्द्र के.सी. समेतलाई पठाएको देखिएकोले यी प्रतिवादी प्रस्तुत मुद्दामा टेक नारायण पाण्डेसँग मिलेर कसुर अपराधबाट बच्ने बचाउने कार्यमा लागि परेको देखिएको, प्रतिवादी टेक नारायण पाण्डे र प्रतिवादी केशव प्रसाद दुलाल बीच What's App तथा Viber मा मेसेजहरु आदान प्रदानका क्रममा केशव प्रसाद दुलालले प्रतिवादी टेक नारायण पाण्डेलाई "नरेन्द्र जि ले पनि आश गर्लान, ५ दिंदा हुन्छ ?" भनी सोधेकोमा टेक नारायणले "हुन्छ" भनी जवाफ फर्काएको मेसेज फेला परेको, प्रतिवादी केशव प्रसाद दुलालले यी प्रतिवादी नरेन्द्र के.सी.समेतलाई ठगी गरेको रकम दिएको छु भनी बयान कागजमा खुलाई लेखाई दिएको, प्रतिवादी बालकृष्ण खाँणले आङटावा शेर्पालाई सानु भण्डारी र केशव प्रसाद दुलाललाई हिरासतमै भेट्न पठाई पहिले लिएको रकम फिर्ता गर्ने र बयानमा आफु समेतलाई नपोल्ने गराउनको लागी भनी पठाएको र सो कुरा हिरासतमा रहेका प्रतिवादीहरु सानु भण्डारी र केशव प्रसाद दुलालले सहमति गरे बमोजिम रु.१,००,००,०००।–(एक करोड) निजका स्वकीय सचिव नरेन्द्र के.सी.मार्फत फिर्ता गरेको भन्ने आङटावा शेर्पाले मौकामा गरेको कागज व्यहोरा तथा भिडियोबाट देखिनुले प्रस्तुत संगठित ठगी एवं राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराधमा नरेन्द्र के.सी.ले आपराधिक समूहका अन्य प्रतिवादीहरु सँगको मिलेमतो गरी जाहेरवालाहरु समेतबाट संकलन गरिएको ठगीको रकम लिनेखाने काममा संलग्न रहेको देखिदा यी प्रतिवादी नरेन्द्र के.सी.ले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी**

**अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो।**

यी प्रतिवादी नरेन्द्र के.सी.ले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन सम्भव नभएको हुँदा करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर करौडौ रकम लिनका लागि प्रतिवादीहरुले आपसमा मिलोमतो गरी बालकृष्ण पन्थी संयोजक रहेको सक्कली प्रतिवेदनलाई गृह मन्त्रालयका तत्कालिन सचिव रहेका प्रतिवादी टेकनारायण पाण्डे मार्फत बाहिर ल्याएर सो प्रतिवेदनको पृष्ठ ३ को ६ नं. बुँदामा अन्तिम वाक्यको व्यहोरा थप गरेको, पृष्ठ १० को २.५ नं. बुँदामा फरक व्यहोरा देखिएको, पृष्ठ नं.१३ को क्र.नं., (क.अ.) नं. १४ को ग.नं.को दोश्रो Para, पृष्ठ १६ को ३.६,३.६.१ र ३.६.२ पृष्ठ नं.१७ र पृष्ठ नं.१८ को निष्कर्षमा व्यहोरा फेरबदल गरी गृहमन्त्रालयमा सक्कली प्रतिवेदनका ठाउँमा नक्कली प्रतिवेदन राखी भुटानी शरणार्थीका नाममा लिखत किर्ते, संगठित अपराध र ठगी गरी अकुत सम्पत्ति आर्जन गरेको र नक्कली प्रतिवेदन तथा भुटानी शरणार्थीको नक्कली परिचय पत्र बनाई लिखत किर्तेको कसूर समेत गरेको देखिदा **निज प्रतिवादी नरेन्द्र के.सी.ले मुलुकी अपराध संहिता, २०७४ को दफा २७६ को उपदफा (१) र (२) बमोजिम सरकारी लिखत किर्तेको कसूर गरेको** पुष्टि हुन आयो।

त्यसै गरी प्रतिवादी नरेन्द्र के.सी. ले आफूलाई लाभ पुऱ्याउने र अकुत सम्पत्ति कमाउने उद्देश्यले राष्ट्रहित प्रतिकूल काम गरेको र निजहरुले गरेको उक्त कसूरले नेपालको स्वाभिमान तथा अन्तर्राष्ट्रिय छविमा आँच आएको र नेपाल र नेपालीलाई अन्तर्राष्ट्रिय जगतमा हेर्ने दृष्टिकोणमा समेत आँच आउने गरी राष्ट्रको साख गिराउने कार्य समेत गरेकोले निज प्रतिवादी नरेन्द्र के.सी. ले राष्ट्रहित प्रतिकूल काम गरेको देखिदा **मुलुकी अपराध संहिता, २०७४ को दफा ५१ को उपदफा (१) र (२) को खण्ड (क) बमोजिम राज्य विरुद्धको कसूर गरेको पुष्टि हुन आयो।**

प्रस्तुत मुद्दामा नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाई दिने भनी योजना बनाई भुटानी शरणार्थीको नक्कली कार्ड समेत बनाई बहालवाला गृहमन्त्री, गृह सचिव, सुरक्षा सल्लाहाकार, गृहमन्त्रीका निजी सचिव समेतलाई करौडौं रुपैयाँ नगद उपहार दिई सो क्षेत्रका विशेषज्ञहरुलाई अपराधिक समूहको संगठनमा मिसाई श्रेणीबद्ध संरचना तयार गरी संगठित अपराधिक क्रियाकलापमा लागेका सदस्यहरुको कामको जिम्मेवारी बाँडफाँड गरी तहगत आधारमा सबै भन्दा माथि अपराधको नाईकेका रुपमा प्रतिवादीहरु सानु भण्डारी र केशव दुलाल, ईन्द्रजित राई, सन्दिप रायमाझी, प्रतिक थापा बसेर त्यसपछिको Layer मा सो कार्यलाई कार्यान्वयन गर्ने प्रतिवादीहरु सन्देश शर्मा, आङटावा शेर्पा, निरज राई, टंक कुमार गुरुङ, सागर राई रही त्यस मुनी कार्यदल बनाउने नीति नियम बनाउने प्रतिवादीहरु टेक नारायण पाण्डे, नरेन्द्र के.सी., टोप बहादुर रायमाझी, बालकृष्ण खाँण, टेकनाथ रिजाल र शम्सेर मियाँ समेतले नीतिगत रुपमा प्रभाव पार्ने कार्य गरी संगठित रुपमा ठगीको रकम उठाउने अपराधिक कार्यमा प्रतिवादीहरु रामशरण के.सी., राजेश अर्याल, बिक्रम भन्ने गोविन्द चौधरी, सुनिल बुढाथोकी, निरन्जन कुमार पोखरेल, धिरेन राई, मोहन राज राई, अशोक पोखेरल, सागर राई, दिपा हुमागाजी, विनिता साङदेन लिम्बु, हरिभक्त महर्जन, लक्ष्मी महर्जन, राजेश अर्याल समेतले

ठगीको रकम संकलन गरी आपराधिक लाभका लागी रकम उठाउने कार्य गरी तहगत संरचनाको आधारमा गोप्य ढंगले आ-आफ्नो भूमिका निर्वाह गरी संगठित अपराध समेत गरेको देखिदा **निज प्रतिवादी नरेन्द्र के.सी. ले संगठित अपराध निवारण ऐन, २०७० को दफा ३ को उपदफा (१), (२), (३) को खण्ड (क) तथा दफा ५ बमोजिमको संगठित अपराधको कसूर** गरेको पुष्टि हुन आयो।

प्रतिवादी नरेन्द्र के.सी. समेतले समेतले नियोजित र संगठित रुपमा समूहमा आवद्ध भई एकै वारदातमा एकभन्दा बढी कसूर गरी एकिकृत कसूर समेत गरेको देखिदा निज प्रतिवादीले **मुलुकी अपराध संहिता, २०७४ को दफा ४३ को उपदफा (१) बमोजिम कसूर गरेको** स-प्रमाण पुष्टि हुन आएकोले कसुर ठहर हुन अभियोग मागदावी लिईएको छ।

१२. **<u>प्रतिवादी राम शरण के.सी.को हकमा</u>**:-

प्रतिवादी राम शरण के.सी. अर्का प्रतिवादी टेकनाथ रिजालसँग ६ बर्ष अगाडी देखि सम्पर्कमा रही गोकुल थापा र अर्जुन कार्की समेत भई प्रतिवादी टेकनाथ रिजालसँग नेपालीहरुलाई नक्कली भुटानी शरणार्थी बनाई अमेरिका लैजाने कार्यको लागी निरन्तर संवाद गरी प्रतिवादी सानु भण्डारी र केशव प्रसाद दुलालसँग मिलेर योजना बनाएको भन्ने प्रतिवादी टेकनाथ रिजालको बयानबाट खुलेको, जाहेरवालाहरु समेतको नक्कली भुटानी परिचय पत्र बनाउन रु.२ लाखका दरले जाहेरवालाहरुबाट रकम संकलन गरेको, सो पश्चात शरणार्थी सम्बन्धी फारम भर्ने समयमा जनही रु.१० लाख पुग्ने गरी जाहेरवालाहरुबाट रकम संकलन गरेको, जाहेरवालाहरुको नक्कली भुटानी परिचय पत्र जलाउने काम आफैले गरेको भनी बयानमा खुलाएको। जाहेरवालाहरुबाट रकम संकलन गर्ने र सो रकम मध्ये सानु भण्डारीलाई बैंक मार्फत रु.१ करोड ३४ लाख, केशव प्रसाद दुलाल मार्फत प्रतिक थापालाई रु.१ करोड ५० लाख, टेकनाथ रिजाललाई रु.११ लाख र गोकुल थापा लाई रु.६० लाख दिएको भनी निजैले बयानमा खुलाएको हुँदा यी प्रतिवादी राम शरण के.सी.ले जाहेरवाला समेतका नेपाली नागरिकहरुलाई भुटानी शरणार्थीको नाममा अमेरिका पठाउनका लागी रकम शंकलन गर्ने, जाहेरवालाहरुको बायोमेट्रिक गराउने, विभिन्न फारमहरु भराउने, निज प्रतिवादीको थप बयानको क्रममा बेचन झा ले भुटानी शरणार्थी सम्बन्धी मन्त्रीपरिषदबाट हुने निर्णय प्रतिवादी रामषरणको पक्षमा गराईदिने भनी आश्वासन दिई निज रामषरणको हिमालयन बैंकको रु २०००००००।- (दुई करोड)को चेक निज बेचन झाले लिएको भनी खुलाई दिएको र जाहेरवालाहरुबाट संकलित रकम अन्य प्रतिवादीहरुलाई दिने समेतको कार्य गरी आफु आपराधिक समूहको सदस्य भई प्रस्तुत संगठित ठगी एवं राष्ट्रहित प्रतिकुल काम गर्न नहुने अपराधमा आपराधिक समूहका अन्य प्रतिवादीहरुसँगको मिलेमतो गरी जाहेरवालाहरु समेतबाट संकलन गरिएको ठगीको रकम लिनेखाने काममा संलग्न रहेको देखिदा यी प्रतिवादी राम शरण के.सी.ले नेपाली नागरिकलाई भुटानी शरणार्थी बनाई अमेरिका पठाईदिने समूहमा आवद्ध भई भुटानी शरणार्थीसँग सम्बन्धित नक्कली प्रतिवेदन, गृह मन्त्रालयका पत्रहरुका आधारमा विश्वास दिलाई करौडौं रकम उठाई पीडितहरुलाई हानी नोक्सानी पुऱ्याई ठगी गरी लाभ लिई **मुलुकी अपराध संहिता,२०७४ को दफा २४९ को उपदफा (१) र (२) बमोजिम ठगीको कसूर गरेको पुष्टि हुन आयो।**

यी प्रतिवादी राम शरण के.सी. ले बालकृष्ण पन्थी संयोजक रहेको भुटानी शरणार्थी समस्याको स्थायी र दिर्घकालीन समाधानका उपायहरु पहिल्याउन गठित कार्यदलको प्रतिवेदन-२०७६ मा ४२९ जना छुट भएका भुटानी शरणार्थी भनी उल्लेख भएकोमा सो प्रतिवेदनका आधारमा गैर भुटानी शरणार्थीलाई अमेरिका पठाउन

